सर्वदिग्विजयी भिक्षु महापण्डित आनन्दध्वज
श्रीभद्र (साक्या पण्डित) विरचित



# मुनिमतप्रकाश

[थुब्बे गोङ्सालको नेपाली अनुवाद

व्योमकुसुमा अनुवाद समितिद्वारा नेपाली भाषामा अनूदित

सर्वदिग्विजयी भिक्षु महापण्डित आनन्दध्वज श्रीभद्र (कुंगा ग्याल्छेन पाल साङपो) द्वारा रचिएको

# मुनिमतप्रकाश

## ཐུབ་པའི་དགོངས་པ་རབ་ཏུ་གསལ་བ་

[आचार्य श्रीधर राणा (धर्मवज्र) को उपोद्घात एवं 'मायोपमा' पादटिप्पणी सहित]

अनुवादकहरू :
खेन्पो वागीन्द्रशील
नारायण प्रसाद रिजाल (बुद्धवज्र)

प्रकाशक
पदम घले

प्रकाशक : पदम घले
सैंबु, भैंसेपाटी (ललितपुर)
फोन : ५४३२०५



संस्करण : प्रथम, २०५६

## व्योमकुसुमा अनुवाद समिति

संरक्षक :
परमपूज्य कर्माठिन्ले रिन्पोछे

प्रमुख निर्देशक :
आचार्य श्रीधर राणा (धर्मवज्र)

सदस्यहरू :
खेन्पो वागीन्द्रशील
नारायणप्रसाद रिजाल
पुण्यप्रसाद पराजुली
विनय शमशेर राणा
पं. विजयनाथ पौडेल
शिवकुमार रिजाल

मूल्य : ने. रू. २००/- (भा. रू. १५०/-)

मुद्रक : लुष प्रेस,
बानेश्वर काठमाडौं, फोन नं. : ४७२५९६

# प्रणिधान !

त्रिरत्नशरणम् !

यो जीवनमा आफूले अध्ययनको नाममा प्राथमिक विद्यालयको शिक्षासमेत लिन नपाएको हुनाले मेरो प्रज्ञा अति नै कमजोर हुन पुग्यो तापनि परमपूज्य गुरुपाद रत्नश्री श्रीधर राणाज्यूको असीम करुणा एवं मार्गदर्शनले गर्दा सन्मार्गमा लाग्न पाएकोमा आफ्नो जीवनलाई यथायोग्य धन्य भएको सम्झन्छु । उहाँबाटै आँखा खुलेर यो भवको दुःख जलधिवाट प्राणीलाई तार्ने र बुद्धताको अवस्थासम्म पुर्‍याउने यो बोधिसत्वयान (महायानको) अमूल्य शास्त्रलाई प्रकाशन गर्ने प्रेरणा मेरो मनमा जागेको हो । त्यसैले सर्वप्रथम यो पुस्तक मेरा परमपूज्य गुरुपादमै, त्यसपछि मलाई मानव जन्म दिलाएर कहिल्यै तिर्न नसकिने ऋण लगाएर छाड्नुभएका मेरा पूज्य माता-पितामा र संघ एवं सम्पूर्ण सत्वहरूमा सादर समर्पण गर्दछु, जसबाट भविष्यमा म लगायत सम्पूर्ण सत्वहरूलाई महायानको अनुत्तर सम्यक् प्रज्ञाको सहजै लाभ होस् !

– उपासक पवम घले

# शाक्यममुनि बुद्ध



# साक्या पण्डित (आनन्दध्वज श्रीभद्र)



*His Holiness*
*Sakya Trizin*
HEAD OF THE SAKYAPA ORDER
OF TIBETAN BUDDHISM

Dolma Phodrang
192 Rajpur Road
PO Rajpur - 248009
Dehra Dun UP India
Tel (0135) 684081
Fax (0135) 684079

༄༅། །ཕྱོགས་ཐམས་ཅད་ལས་རྣམ་པར་རྒྱལ་བ་འཇམ་མགོན་བླ་མ་ས་སྐྱ་པཎྜི་ཏ་ཆེན་པོས་མཛད་པའི་བསྟན་བཅོས་ཐུབ་པའི་དགོངས་པ་རབ་ཏུ་གསལ་བ་ཞེས་བྱ་བ་འདི་བཞིན། །དཔལ་ལྡན་བལ་ཡུལ་ནས་མཁན་པོ་ངག་དབང་ཚུལ་ཁྲིམས་ནས་པར་འགན་ལེན་ཞོག་ཆོས་ཀྱི་རྡོ་རྗེ། སངས་རྒྱས་རྡོ་རྗེ། བསོད་ནམས་རྡོ་རྗེ་བཅས་ནས་ཀྱང་ལེགས་སྦྱར་སྐད་སོགས་བརྡ་དག་རྣམས་ཕྱོགས་དང་བསྒྱུར་ནས་ནེ་པཱ་ལ་ཡུལ་གྱི་རྒྱལ་པོས་སྐྱོང་བའི་ཡུལ་གྱི་སྐད་དུ་ཞབ་བསྒྱུར་ཐོག །པདྨ་གྷ་ལེ་ནས་ཡོན་སྦྱོར་གྱིས་པར་བསྐྲུན་བགྱིས་པར་སྙིང་ནས་རྗེས་སུ་ཡི་རང་ནས་དང་འཕེལ་རྒྱལ་བསྟན་སྤྱི་དང་། ཐེག་པ་ཆེན་པོའི་བསྟན་པ་རིན་པོ་ཆེ་ཕྱོགས་མཐར་སྤེལ་བའི་སྨོན་འདུན་བཅས། ར་ཛ་པུར་སྒྲོལ་མ་ཕོ་བྲང་ནས། ས་སྐྱ་ཁྲི་འཛིན་པས ༩༩ ཟླ་ཚེས་དགེ་བའོ།།

सर्वदिग्विजयी श्री मञ्जुनाथ साक्या महापण्डितद्वारा विरचित मुनिमतप्रकाश भन्ने यो शास्त्रलाई नेपालका उपाध्याय वागीन्द्र शीलले जिम्मा लिई त्यसमाथि श्रीधर्मवज्र, वुद्धवज्र र पुण्यवज्रहरूले समेत संस्कृत भापा. संकेत आदिबाट स्पप्ट पारेर नेपाली भापामा अनुवाद गरी पदम घलेको खर्चबाट प्रकाशन गरिएकोमा हृदयदेखि नै अनुमोदन गर्नुका साथै सामान्य वुद्धशासन र विशेप गरी महायानको शासनरत्न दिगन्तसम्म वृद्धि भएर जाओस भन्ने कामना गर्दछु । राजपुर ड्रोल्मा फोड्राङबाट साक्या ठ्रिन्जिनद्वारा ११-१२-११९९ को दिन शुभम् ॥

# विषयसूची

# अनुवादकको तर्फबाट

प्रस्तुत पुस्तक 'मुनिमतप्रकाश' भोटका महापण्डित भिक्षु आनन्दध्वज श्रीभद्र (कुङ्गा ग्याल्छेन् पाल् साङ्पो) अथवा साक्या पण्डित)ले आफू मंगोलियामा गएको वेलामा भोटका शिष्यहरूले फर्किन अनुरोध गरेपछि आफू फर्किन नसक्ने अवस्था देखेर उनीहरूलाई सारसंक्षेपमा महायान धर्मको अभ्यास कसरी गर्ने भन्ने विषयमा लेखेर पठाउनुभएको ग्रन्थ हो । त्यसकारण यसमा शाक्यमुनिले देशना गर्नुभएका सबै गम्भीर र वैपुल्य सूत्रहरूको सार समेटिएको छ । त्यही अर्थमा यसको नाम पनि 'मुनिमतप्रकाश' (थुव्पे गोङ्साल्) रहेको हो । उहाँले त्यसवेला यसलाई संस्कृतमा पनि आफैंले अनुवाद गरेर भारतमा पठाउनुभएको थियो भन्ने ख्याति छ । परन्तु त्यो ग्रन्थ अहिले कतै पनि उपलब्ध छैन ।

तिव्वतमा उहाँका बाजे आनन्दगर्भ (कुङ्गा निङ्पो) द्वारा सुसंगठित रूपमा जग हालेर अघि बढाइएको साक्या परम्पराका गद्दीधारीहरू उहाँकै छोरा-नातिहरू हुँदै आउनुभएको छ । उहाँहरूलाई 'साक्या ठ्रिन्जीन्' भनिन्छ । प्रत्येक साक्या ठ्रिन्जीन् गद्दीमा बसेपछि प्रवचन गर्नुपर्ने सबभन्दा पहिलो ग्रन्थ यही 'मुनिमतप्रकाश' हो । हाम्रा खेन्पो (उपाध्याय) भिक्षु वागीन्द्र शीललाई दुई वर्षअघि उपाध्यायको गद्दीमा राखेपछि उहाँले सर्वप्रथम यही पुस्तकको प्रवचन गर्नुभएको थियो र त्यसवेला यसको नेपालीमा अनुवाद गरेर प्रकाशन गर्न पाए अत्यधिक नेपाली भाषिक व्यक्तिहरूलाई ठूलो लाभ हुने थियो भन्ने गुनासो आएको थियो । त्यसै सन्दर्भदेखि यसको नेपालीमा अनुवाद गर्ने प्रसंग उठ्यो र खेन्पोज्यूले कोरा शब्दगत अनुवादको रेखा निकाल्नुभयो । पछि गत फाल्गुनमा उपासक पदम घलेले मसँग उक्त किताब छापेर म प्रकाशन गर्छु, तपाईंले त्यसको भाषा र सैद्धान्तिक पक्षलाई पनि पुनर्विचार गरी सम्पादन गरिदिनुपर्‍यो भन्ने अनुरोध गरेपछि पुनः खेन्पोज्यू र म सँगै बसेर उक्त ग्रन्थको अनुवाद गर्न शुरु गर्‍यौं । वास्तवमा बौद्ध धर्मको पनि सैद्धान्तिक ग्रन्थको अनुवाद गर्नु त्यति सरल कुरा होइन तापनि भारतका संस्कृत भाषाका बौद्ध ग्रन्थहरूलाई भोट भाषामा अनुवाद गर्दाखेरि दुवै भाषामा र

विषयगत कुरामा ज्ञान भएका विद्वान्हरूसँगै बसेर अनुवाद गर्ने चलन थियो र त्यसले अनुवादको शब्द र भावमा यथाशक्य शुद्धता कायम राख्ने गरेको पाइएको छ । म त्यस्तो विद्वान् होइन तापनि बौद्ध धर्मको केही ज्ञान भएको र नेपाली भाषा एवं संस्कृत भाषा बुझ्न सक्ने र केही तिब्बती भाषा पनि थाहा पाएको हुनाले खेन्पोज्यूसँग त्यसरी काम गर्न थालें । ६ महीनाको घनघोर प्रयासपछि पुन: अनुवाद सिद्धियो यसमा परमपूज्य आचार्य श्रीधर राणासँग पादटिप्पणी र उपोद्घात लेखिदिन अनुरोध गरेपछि उहाँले 'मायोपमा' पादटिप्पणी र उपोद्घात पनि लेखिदिनुभयो र यो रूपमा हामीले आज यो ग्रन्थलाई तपाईंहरूका सामु प्रस्तुत गर्न पाएका छौं ।

हामीले यसमा विषयगत त्रुटी नहोऊन्, भाषा सरल होस् र लेखकको अभिप्राय एवं शैलीलाई सुरक्षित राख्न सकियोस् भन्ने कुरामा यथाशक्ति प्रयास गरेका छौं तापनि यो ग्रन्थ महायानको सामान्य सिद्धान्तदेखि लिएर अन्तिम फलसममको कुरालाई संक्षेपमा प्रस्तुत गर्ने ग्रन्थ भएको हुनाले स्वाभाविक रूपमा नै धेरै कठीनाइ परेको छ । विशेष गरेर भूमि-मार्ग-व्यवस्थाको परिच्छेदमा आएपछि प्रज्ञापारमिताको अभिसमय अर्थात् साक्षात्कार गर्ने क्रम र अवस्थाको विषयमा कुरा गर्नुपर्ने भएकोले त्यो भाग तुलनात्मक रूपमा जटिल बन्न पुगेको छ । बाध्यतावश संस्कृत पारिभाषिक शब्दहरूलाई सरलीकरण गर्न सम्भव भएको छैन । ती विषयहरूलाई सामान्य पादटिप्पणीबाट पनि स्पष्ट पार्न सम्भव नहुने भएकोले हामीले त्यति जोड गरेका छैनौं । जे भए पनि यो ग्रन्थलाई नेपाली भाषामा प्रकाशन गर्न सफल हुनु नै हाम्रो लागि अहोभाग्य भएको छ । यो प्रकाशन गरेर अपरिमित पुण्यसम्भार गर्नुहुने उपासक पदम घलेप्रति म हार्दिक रूपमा कृतज्ञ छु । त्यसैगरी यसलाई यथाशीघ्र प्रकाशन गर्न सहयोग गर्ने लुप प्रेस परिवार र गुहनाथ पौडेलप्रति म आभार प्रकट गर्न चाहन्छु । सर्वसत्वहरूको प्रज्ञावृद्धि भई अनुत्तरसम्यक् सम्बोधि लाभ होस् भनेर परिणामना गर्दछु ।

उपासक

**नारायणप्रसाद रिजाल**

२०५६ श्रावण अमावस्या (बुद्धवज्र)

# साक्या पण्डितको संक्षिप्त जीवनी

**श्रीमञ्जुनाथं खलु भूमिपाण्डुरा -**
**वुदीयमानं नवभोटपण्डितम् ॥**
**प्रज्ञात्रयीध्वस्तसमस्तमूढता-**
**विकीर्णभासं प्रणमामि पण्डितम् ॥**

सेतो भूमि अर्थात् साक्यावाट नयाँ भोटदेशीय पण्डितको रूपमा उदाएका र जसले श्रुतमयी, चिन्तामयी एवं भावनामयी गरी तीनै प्रज्ञाद्वारा सम्पूर्ण अज्ञानलाई ध्वस्त पारी प्रकाशै-प्रकाश छरिरहेका छन् त्यस्ता श्री मञ्जुनाथ पण्डितलाई प्रणाम गर्दछु ।

साक्या पण्डितको जन्म तिव्वतको खोन वंशमा भएको थियो । त्यो वंशलाई देवकुलको वंश भनिन्छ । परापूर्वकालमा आभास्वर देवलोकवाट झरेका देवहरू तिव्वतको त्यो क्षेत्रमा बसोवास गर्दै जाँदा कालान्तरमा एक राक्षस जातिसँग भिडन्त परि राखेको वेलामा एक देवकुलीन व्यक्तिको उक्त राक्षस कुलकी छोरीसँग प्रेम सम्वन्ध भएर त्यसवाट पुत्र जन्मिएको थियो । उसको नाम 'खोन् भार क्ये' राखिएको थियो । जसको अर्थ हुन्छ - "शत्रुताको वीचमा जन्मिएको" । उनैवाट फैलिएको वंश भएकोले उक्त वंशको नाम 'खोन वंश' हुन गएको हो । त्यसपछि त्यो वंशमा सधैं उत्तम महापुरुपहरूले जन्म लिने गरेका छन् । त्यही वंशमा नै गुरु पद्मसम्भवका प्रमुख पच्चीस जना शिष्यमध्ये 'खोन लुयी वाङ्पो' पनि हुनुहुन्थ्यो । प्राचीन न्यिङ्मा परम्पराका गुरु 'खोन् दोर्जे रिन्छेन्' आदि पनि त्यही वंशका हुनुहुन्थ्यो । एवं क्रमले त्यो वंश 'खोन् कोन्छोग् ग्याल्पो' सम्म आएको थियो । ग्याल्पोका दाजुदेखि माथिका अधिकांश अग्रजहरू वज्रकीलको अभ्यासबाटै सिद्ध भएका र न्यिङ्मा संप्रदायका ठूलाठूला विद्वानहरू थिए ।

यसरी खोन् कोन्छोक् ग्याल्पोका पालामा आइपुग्दा प्राचीन बौद्ध तन्त्रहरूमा क्रमशः ह्रास आउँदै गएको थियो । त्यसैले

उहाले 'खिन् लोचावा' र 'ड्राक्मी' लोचावा'वाट नव्य तन्त्रहरू जस्तै 'हेवज्र तन्त्र' आदि अध्ययन गर्नुभएको थियो भने 'माल् लोचावा'वाट संवरमूलतन्त्रको अध्ययनका साथै पण्डित प्रज्ञागुह्यवाट पञ्चतिलक आदिको कुरा पनि सुन्नुभएको थियो। 'भारी लोचावा', 'पुराङ् लोचावा' आदिवाट पनि उहाले धेरै कुरा सिक्नुभएको थियो। उहा 'डावो' भन्ने ठाउँमा विहार वनाएर धेरै वर्पसम्म वस्नुभयो। त्यहीं वसेको वेलामा विहारमाथिको पहाडवाट हेर्दाखेरि 'पोन्पोरि' भन्ने पहाडको अगाडि सेतो चिल्लो माटोको जमीन र दायाँपट्टि पानी वगिरहेको देख्नुभयो। त्यो ठाउँमा विहार वनाएमा वुद्धको शासन र सत्वहरूको पनि हित हुन्छ भन्ने लाग्यो र उहाँले त्यो जमीन खरीद गरी विहार वनाउनुभयो। त्यही क्षेत्रलाई 'साक्या' भन्छन्। 'सा' भनेको जमीन हो र 'क्या' भनेको सेतो अर्थात् 'फुसो' हो। उहाका छोरा साचेन् कुङ्गा निङपो (गुरु आनन्दगर्भ) हुनुहुन्थ्यो। उहाका छोरा पाल्छेन् होपोवाट सन् ११८२ मा साक्या पण्डितको जन्म भएको हो। उहाँकी माता 'माङ्खार् ङिठी च्याम' हुनुहुन्थ्यो। उहाँ गर्भमा पसेको वेला आमाले नागराज शिरोमणिले विभूपित भएर गर्भमा प्रवेश गरेको सपना देख्नुभएको थियो र अभूतपूर्व शान्ति र समाधिको लाभ भएको थियो। पछि जन्मिने वेलामा पनि आकाशमा विशाल ज्योतिःपुञ्ज देखा परेर संस्कृत भापामा वोल्न थालेको थियो। उहाका शरीरमा वुद्धमा जस्तै खालका लक्षणहरू थिए। उष्णीप, उर्णा पनि विद्यमान थिए। अत्यन्त राम्रो नयनसुख रूप थियो। उहाको नाम "श्री सिद्धार्थ" (पाल्देन धोन् ड्रुप) राखियो।

वाल्यकालदेखि नै उहा अत्यन्त तीक्ष्ण वुद्धिका हुनुहुन्थ्यो र वोलि फुट्ने वेलादेखि नै संस्कृत भापामा आफैं वोल्न थाल्नुभएको थियो। आमाले उहाको भापा नवुझेर आश्चर्य चकित भई उहाका आफ्नै काका "ड्राक्पा ग्याल्छेन्' लाई सोध्नुभयो। ड्राक्पा ग्याल्छेन्ले यो अत्यन्तै राम्रो लक्षण हो भन्नुभएको थियो। त्यही वेलामा नै साक्या पण्डितले वर्तु लिपि,

देवनागरी लिपि, रञ्जना लिपिका आलि (अ, आ..) र कालि (क, ख, ग...) सबै आफैंले धूलोमा लेख्ने र बोल्ने गर्नुहुन्थ्यो ।

औपचारिक रूपमा उहाँको शिक्षाको क्रम पाँच वर्षको उमेरदेखि सुरु भएको थियो । उहाँका आफ्ना काका 'ड्राक्पा ग्याल्छेन्' र पिता पाल्छेन् होपोबाटै उहाँले प्रारम्भिक शिक्षा ग्रहण गर्नुभयो । ६/७ वर्षको उमेरमा नै उहाँले आफ्नो परिवारमा गर्दै आएका सबैजसो स्तोत्र, प्रणिधान, पूजा-पाठ आदि कण्ठस्थ पारिसक्नुभएको थियो । त्यसबेला नै उहाँले हेवज्रतन्त्रका साधना र अन्य साधनाहरू पनि कण्ठस्थ पारिसक्नुभएको थियो । १० वर्षको उमेरमा उहाँले नहेरीकन हेवज्रमूलतन्त्र पाठ गर्न र व्याख्या गर्नसमेत सक्नुहुन्थ्यो । त्यसपछि पञ्जरतन्त्र र सम्पुटतन्त्रमा पनि उहाँको गति अव्याहत भएर आयो । चौध वर्षको उमेरमा उहाँले साचेन् कुङ्गा निङ्पो (आफ्ना हजूरबुवा) ले ग्रहण गरेर छोराहरूलाई दिएका सम्पूर्ण आगम, अभिषेक, उपदेश र अन्य विद्याहरू ग्रहण गरिसक्नुभएको थियो । विशेष गरेर आफ्ना काका ड्राक्पा ग्याल्छेनबाट तन्त्रसम्बन्धी सैद्धान्तिक एवं व्यावहारिक र साधनागत शिक्षाहरू अत्यन्त गहिरोसँग ग्रहण गर्नुभएको थियो भने अन्य भैषज्यशास्त्र, लक्षणविद्या (शकुन), आदि आफ्ना पिताबाट ग्रहण गर्नुभएको थियो । त्यसै अवधिभित्र उहाँले वास्तुविद्या, ज्योतिषविद्या, ललितकला, आदि पनि राम्रोसँग पढ्नुभयो ।

सत्र वर्षको उमेरमा सन् ११९९ मा उहाँले दुई विशेष खालका सपनाहरू देख्नुभयो जसले उहाँलाई भविष्यमा ठूलो विद्वान् बन्ने संकेत गरेका थिए । एउटा सपनामा उहाँलाई साक्याको एक महान् स्तूपको अगाडि आचार्य वसुबन्धुले अभिधर्मकोषको व्याख्या गरिराख्नुभएको थियो । त्यतिखेर सपनामा पढ्दाखेरि बुझेको अभिधर्म नै उहाँको बढी गहिरो बुझाइ थियो र जाग्दाखेरि सम्पूर्ण अभिधर्मकोष नै कण्ठस्थ भएको थियो । फेरि एकपटक उहाँले अर्को सपनामा देख्नुभयो कि आफू पूर्वी भारतको विजयक्षेत्रमा चकनगर भन्ने ठाउँमा

आचार्य दिङ्नागको गुफामा पुग्नुभएको रहेछ। त्यहाँ उहाँलाई प्रमाणशास्त्रका धेरै ग्रन्थहरू अधिगत भए र 'प्रमाणसमुच्चय' एवं धर्मकीर्तिका सातओटा ग्रन्थहरू पनि अधिगत भए।

वास्तवमा यी दुईटा सपनाले उहाँको विद्वत्ताको क्षेत्र कुन हुनेछ भन्ने कुराको पूर्व संकेत दिएका थिए। किनकि पछि गएर उहाँ प्रमाणशास्त्र र अभिधर्मकै विशेषज्ञ बनेर निस्कनुभयो र यिनै दुई विद्याद्वारा उहाँको प्रसिद्धि फैलिएको हो।

अब उहाँलाई राम्रैसँग अधययन गर्न र विशेष गरी मध्यमक शास्त्र, मैत्रेयका पाँच धर्म र प्रमाणशास्त्रको गम्भीर अध्ययन गर्न साक्याबाहिर जानुपर्ने भयो। त्यसैले उहाँ अठार वर्षको उमेरमा सन् १२०० मा माथिल्लो न्याङ उपत्यकातिर लाग्नुभयो। त्यहाँ उहाँले 'जुतोन् दोर्जे ख्याव्'सँग मैत्रेयका पाँच धर्म र तिनीहरूका भाष्यहरूको अध्ययन गर्नुभयो र साथै नागार्जुनको युक्ति, ज्ञानगर्भको 'सत्यद्वयविभङ्ग', शान्तरक्षितको 'मध्यम- कालङ्कार'को पनि अध्ययन गर्नुभयो। उहाँले त्यहीँ अलि माथिल्लो ठाउँमा 'शोन्नु सेङ्गे'सँग प्रमाणशास्त्र र प्रासङ्गिक माध्यमिकको अध्ययन गर्नुभयो। उक्त अध्ययन अन्तर्गत धर्मकीर्तिको प्रमाणविनिश्चय र चन्द्रकीर्तिको 'मध्यमकावतार' एवं 'प्रसन्नपदा' को अध्ययन पनि परेको थियो। त्यसपछि फेरि सन् १२०३ मा साक्यामा आउनुभयो र व्याकरण एवं संगीत सिक्नुभयो। आफ्नै काका ड्राक्पा ग्याल्छेनबाट उहाँले संस्कृत पनि सिक्नुभएको थियो।

सन् १२०४ मा साक्याबाट च्याङ्दुर जाने बाटामा चाङ चुमिग्मा काश्मीरका प्रकाण्ड बौद्ध विद्वान् शाक्य श्रीभद्रसँग उहाँको भेट भयो। शाक्य श्रीभद्र त्यसवेला भर्खरै तिव्वतमा आउनुभएको थियो र प्रमाणविनिश्चय पढाउँदै हुनुहुन्थ्यो। साक्या पण्डित पनि त्यहीं बसेर उहाँसँग अध्ययन गर्न थाल्नुभयो। एक वर्षपछि शाक्य श्रीभद्रलाई त्यहाँ छोड्नुपर्‍यो। त्यसैले फेरि उहाँले अर्का भारतीय पण्डित सुगतश्रीसँग पनि अध्ययन गर्नुभयो। सुगतश्रीलाई साक्यामै ल्याई उहाँसँग संस्कृत व्याकरण, काव्य, अलंकारशास्त्र एवं प्रमाण र तन्त्रको संस्कृतमै

अध्ययन गर्नुभयो। त्यसपछि उहाँले सुगनश्रीको निर्देशनमा संस्कृतबाट तिब्बती भाषामा ग्रन्थहरू अनुवाद गर्न थाल्नुभयो।

सन् १२०८ मा उहाँले 'न्याङ मे भ्यन् गोङ' मा फोंग शाक्यश्रीभद्रलाई भेट्नुभयो र उहाँकै उपाध्यायत्वमा त्यहाँ नै पूर्ण उपसम्पदा ग्रहण गरेर प्रव्रजित हुनुभयो। त्यसपछिका पाँच वर्षसम्म उहाँले शाक्यश्रीभद्रसँगै प्रमाण, अभिसमयालङ्कार, महायानसंग्रह, अभिधर्म र वसुबन्धुका अन्य धेरै ग्रन्थहरू अध्ययन गर्नुभयो। श्रीभद्रले नै साक्या पण्डितलाई पण्डित आनन्दध्वज श्रीभद्र (कुङ्गा ग्याल्छेन पाल् साङ्पो) भन्ने नाम दिई पण्डितको उपाधि प्रदान गर्नुभएको हो। पछि नेपाली पण्डित सङ्घश्रीसँग कुमारसम्भव महाकाव्य, सरस्वतीकण्ठालंकार चतुःसाहस्रिका, दण्डीको काव्य, छन्दःशास्त्र आदि अध्ययन गर्नुभयो।

साक्या पण्डितले अध्ययन नगरेको क्षेत्र भेटिनु दुर्लभै हुन्छ। त्यसबेला प्रचलित सम्पूर्ण विद्याहरूमा र विशेष गरेर पञ्चविद्यास्थानमा उहाँ धुरन्धर पण्डित नै हुनुहुन्थ्यो। प्रमाणशास्त्रमा उहाँ दिङ्नाग, शंकरानन्द, धर्मकीर्ति, धर्मोत्तर, जेतरि आदि सबै विद्वान्हरूको समुच्चय नै हुनुहुन्थ्यो भने पनि हुन्छ। त्यति मात्र होइन उहाँका आफ्नै काका भट्टारक ड्राक्पा ग्याल्छेन् बौद्ध तन्त्र विद्यामा अत्यन्त मूर्धन्य महासिद्ध हुनुभएकोले उहाँबाट साक्या पण्डितले क्रिया, चर्या, योग र अनुत्तर तन्त्रहरूको विस्तृत रूपमा अध्ययन गर्नुभएको थियो। त्यसमध्ये विशेष गरेर गुह्यसमाज, ज्ञानपादरीतिमा पनि अलंकार, वृक्ष, सुन्दरपुष्प, यी तीनै वृत्तान्तहरूको साङ्गोपाङ्ग, यमान्तकका तीन ओटा तन्त्रहरू, चक्रसंवरका मूलतन्त्र एवं व्याख्यातन्त्रहरू, वज्रडाकिनीतन्त्र, सम्पुटतन्त्र, वज्रवाराही अभिसंभव, हेवज्रका तीन तन्त्रहरू एवं कालचक्रको साङ्गोपाङ्ग अध्ययन गर्नुभएको थियो। सिद्ध योगेश्वर विरूपादबाट आएका चार श्रोत्रपरम्पराहरू, महासिद्ध नरोपादबाट नेपालका फम्थिङ्पा दुई भाइ (वागीश्वर कीर्ति पनि भन्ने गरेको पाइन्छ) हुँदै भोटमा प्रवेश गरेको वज्रयोगिनीको परम्परा र चक्रसंवर

गुह्यान्तरीतिको उत्पन्नक्रम एवं सम्पन्नक्रमका सम्पूर्ण उपदेशहरू प्राप्त गर्नुभएको थियो। त्यस्तै रत्नभद्रको परम्पराबाट आएको दुर्गतिपरिशोधनतन्त्रको व्याख्या आदि अनगिन्ती तन्त्रशास्त्रहरूको अध्ययन उहाँले गर्नुभएको थियो।

उहाँको ख्याति भोटमा, भारतमा र अन्य देशहरूमा पनि अत्यन्तै छिटै फैलिंदै गयो।उहाँले हरिनन्द आदि भारतका छ जना धुरन्धर तीर्थिक (अबौद्ध=हिन्दू) पण्डितहरूलाई शास्त्रार्थमा हराउनुभयो र बुद्धशासनमा दीक्षित गराउनुभयो। उहाँ आफैले पनि साना र ठूला गरी सयभन्दा बढी ग्रन्थहरू लेख्नुभएको थियो। ती मध्ये बढी प्रख्यातचाहिं मुनिमतप्रकाश, त्रिसंवरप्रभेद, प्रमाणयुक्तिनिधि, सुभाषितरत्ननिधिकोष आदि हुन्। उहाँले पाँचै विद्यास्थानहरूका शास्त्रहरू रच्नुभएको छ। ती सबै शास्त्रहरूको सार स्वरूप 'दशैदिशाका बुद्धहरूलाई चिठ्ठी' भन्ने शास्त्र पनि रच्नुभएको थियो।

यसरी उहाँले आफ्नो अध्ययन र भावनाबाट अपरिमित गुणहरू लाभ गर्नुभएको थियो। उहाँमा परिपूर्ण भिक्षुता थियो र बोधिचित्त एवं साक्षात्कारका गुणहरू प्रशस्त थिए। त्यसैले लोक र देवहरूद्वारा वन्दनीय हुँदै जानुभएको थियो र अपरिमित सत्वहरूको हित गर्नुभएको थियो।

उहाँको आफ्नो अभिसमय उत्पन्न हुने क्रममा आफ्ना गुरु महाभट्टारक ढ्राक्पा ग्याल्छेनँगस गम्भीरमार्गको गुरुयोग अभ्यास लिने वेलामा त्रिकालका बुद्धहरूको प्रज्ञाका स्वरूप साक्षात् मन्जुघोषको दर्शन भएर उहाँबाट सम्पूर्ण धर्महरूको अविपरीत अर्थ बोध गर्नुभयो। त्यही वेलामा भारतीय गुरुहरू काश्मीरी पण्डित, नेपाली गुरु दानशील र संघश्री, सुगतश्री आदि सबै आहवान गरे अनुरूप प्रत्यक्ष भएर अधिष्ठित गर्नुभयो। पछि उहाँ बिरामी हुनुभएको वेलामा आचार्य शान्तिदेवले संसारको हेतुफलको धर्मज्ञान दिनुभयो, आर्य नागार्जुन प्रत्यक्ष भएर धर्मका चार संवर र मायाका आठ प्रसिद्ध दृष्टान्तहरूको प्रत्यक्ष बोध गराउनुभयो। त्यसैवेलामा मन्जुघोषले पुनः दर्शन दिएर **"म सबै** जन्महरूमा तिम्रो इष्टदेव

भई मद्दत गर्नेछु" भन्ने वचन पनि दिनुभयो। लोकेश्वरले उहाँको रोगग्रस्त शरीरलाई सुम्सुम्याएर हल्का पारिदिनुभयो। अनि भट्टारिका तारा आएर उहाँलाई 'तिमी संसारदेखि मुक्त भयौ' भन्ने व्याकरण (बुद्ध या उच्च भूमिस्थ-बोधिसत्वहरूले लोकोत्तर अभिज्ञाद्वारा गरिदिने भविष्यवाणी) गर्नुभयो। अनि आर्य मैत्रेयनाथ आएर सयौं समाधिहरूको द्वार खोलिदिनुभयो। अचलनाथले चार मारहरूको बाधालाई निवारण गरिदिनेछु भन्ने प्रतिज्ञा गर्नुभयो। त्यसवेला कृष्णपक्ष चलेको थियो।

त्यसको नवमीको मध्यरातमा उहाँलाई प्रज्ञा- पारमिताको विस्तृत, मध्यम र संक्षेप गूढार्थको बोध भयो। अनि लोकेश्वरबाट महायानको चित्तोत्पाद पनि ग्रहण गर्नुभयो। विहान सूर्योदय हुँदाखेरि मञ्जुश्रीबाट सम्पूर्ण शंकाहरूको जालो नष्ट पार्नुभयो। फेरि त्रयोदशीका दिनमा श्रावक अर्हत्हरूले घेरिएको अवस्थामा विराजमान भई चार आर्यसत्यको धर्मचक्र प्रवर्तन गरिरहनुभएका भगवान् बुद्धको दर्शन पनि भयो। त्यसवेला उहाँले संस्कृतमै समन्तभद्रचर्या प्रणिधानराजको पाठ गर्नुभएको थियो। चतुर्दशीको दिनमा हेवज्रमण्डलको दर्शन भयो र अभिषेक पनि प्राप्त भयो। पूर्णिमाको दिनमा ताराको दर्शन एवं चक्रसंवर आदि तेह्र ओटा मण्डलहरू साक्षात्कार भए।

उहाँका लौकिक अभिज्ञा एवं प्रतिहार्यहरू थुप्रै थिए। जसको बारेमा बताएर साध्य पनि हुँदैन। उहाँले आफ्ना अस्थिधातुहरू अनगिन्ती हुनेछन् भन्ने व्याकरण पनि गर्नुभएको थियो। यस्ता असाधारण पक्षहरूमा उहाँ त्यत्तिकै ऋद्धिमान् हुनुहुन्थ्यो तापनि यिनीहरूलाई सधैं गुह्य राख्ने र शुद्ध मानवीय प्रज्ञा एवं प्रमाणशास्त्रका आधारमा बुद्धको शासनलाई प्रचार प्रसार गर्ने कुरामा नै उहाँको विशेषता थियो। उहाँले नै तिब्बतमा भारतीय शैलीका शास्त्रार्थप्रणालीको विकास गराउनुभयो। भारतीय पण्डितहरूलाई शास्त्रार्थमा हराउने पहिलो एवं एकमात्र अभारतीय पण्डित भनेको उहाँ नै हुनुहुन्छ।

यसरी आफ्नो अगाध ज्ञानको भण्डारद्वारा तिब्बती जनताहरूलाई ज्ञानको मार्ग प्रशस्त गर्दै जाँदा ६२ वर्षको

उमेरमा सन् १२४४ मा उहाँलाई मङ्गोल राजकुमार गोदनले उहाँको वर्धमान यशद्वारा अभिभूत भई उहाँबाट शिक्षा लिनको लागि आमन्त्रण पठाए। उहाँले पनि सत्वको हितलाई ध्यानमा राखेर उक्त निमन्त्रणा स्वीकार गर्नुभयो र सन् १२४७ मा उहाँ चीनमा पुग्नुभयो। अत्यन्त धनी ती राजकुमार बुद्धताप्राप्तिको मार्गदर्शन गर्न सक्ने सद्गुरुको खोजीमै थिए। त्यहाँ पुगेपछि उहाँले उनलाई शिक्षा दिनुभयो र त्यो नयाँ भूमिमा बुद्धधर्मको ज्योतिलाई फेरि जगाउनुभयो।

एकपटक राजकुमार विरामी परे। उनलाई साक्या पण्डितले निको पारिदिएपछि उहाँमाथि झन् श्रद्धा गर्न थाले। परन्तु सुवर्णप्रभास सूत्रको उपदेश दिइरहेको वेलामा "कछुवाको रौं हुँदैन" भन्ने प्रसङ्गमा आइपुग्दा उनले मन्त्रीसहित भएर साक्या पण्डितको परीक्षा लिने विचार गरे। उनीहरूले एउटा चिनियाँ जादुगरलाई बोलाई एउटा कुण्डको छेउमा जादुको मन्दिर बनाउन लगाए र साक्यापण्डितलाई त्यहीं भेट्न निमन्त्रणा गरे। साक्यापण्डितलाई त्यो मायाको कृति हो भन्ने थाहा भयो र गम्भीर समाधिको अवस्थामा चित्तलाई स्थिर गरी पुष्पवृष्टि गरेर त्यो मन्दिरलाई अधिष्ठान गर्नुभयो। त्यसो भएपछि जादुगरले उक्त मन्दिरलाई बिलाउन सकेन र असफल भयो। मन्दिर वास्तविकतामा परिणत भयो। यसले उहाँप्रति सबैको पक्का विश्वास भयो र सबैले उहाँबाट पूर्ण श्रद्धासहित धर्म ग्रहण गर्न थाले। त्यो मन्दिरलाई 'उत्तरको जादु मन्दिर' भन्न थाले जसलाई चीनको मञ्जुश्री पर्वतको छेउमा आज पनि देख्न सकिन्छ।

केही समयपछि उहाँलाई तिब्बती शिष्यहरूले पुनः फर्किनको लागि बिन्ती पठाए। उहाँले त्यही वेलामा 'मुनिमतप्रकाश' भन्ने यही ग्रन्थ लेखेर पठाइदिनुभयो। यसैलाई संस्कृतमा लेखेर भारतमा पनि पठाउनुभएको थियो भन्ने पनि सुनिन्छ परन्तु त्यसको प्रतिलिपि अहिले सम्म कहीं उपलब्ध छैन।

यसरी ७० वर्षको उमेरसम्म विभिन्न स्थानहरूमा विभिन्न उपायले बुद्धको धर्मलाई प्रचारप्रसार एवं सुधार गर्दै अन्तमा सन् १२५१ मा चीनकै लियाङ् चू भन्ने ठाउँमा समाधिस्थ हुनुभयो। त्यसवेला उहाँका निकटतम शिष्यहरू पनि साथमै थिए। तिनै मध्ये एक जना ल्हाजे विजी भन्ने शिष्य पनि थिए। उनले साक्या पण्डितसँग रहँदाखेरि निकै अद्भुत प्रातिहार्यहरू देखेका थिए। भनिन्छ, साक्यापण्डित समाधिमा जाने वेलामा असंख्य बोधिसत्वहरू र भारतका सिद्ध योगी विरूपाद, कृष्णाचार्य आदि धेरै गुरुहरू आएर सोही अवसरमा स्वागत गर्दै लगेका थिए। साक्या पण्डित पनि वज्रासनमै बसेर वज्र र घण्टा हातमा लिई समाधिस्थ हुनुभएको थियो। तीन दिनसम्म उहाँको काय अत्यन्त चम्किलो अवस्थामा रहेको थियो र अठारौं दिनमा उहाँको कायमा शरीर धातुहरू निस्किन थाले र पच्चीसौं दिनमा अन्त्यसंस्कार गरियो। त्यसवेला विभिन्न वाजाहरू वजेको सुनिएको र चन्दन एवं दिव्यपुष्पहरूको वासना आएको थियो।

यसरी ज्ञानको सूर्य यो धरतीमा उदाएर अस्ताएको थियो जसको अत्यन्त शीतल प्रकाशले अहिलेसम्म पनि संसारका जन्म-मृत्यु-जरा-व्याधिको सन्तापले पोलिरहेका सत्वहरूलाई बोधिको मार्गमा लगाइरहेको छ र उक्त सन्ताप मेटाइरहेको छ। अहिले साक्या परम्परा भनेर चिनिने वज्रयानको परम्पराका आदिसूर्यमध्ये उहाँ एक अतुलनीय महापुरुष हुनुहुन्थ्यो। 'साक्या गोङ्मा ङा' भनेर अहिले पनि थान्काहरूमा त्यसवेलाका उहाँका बाजे काका र भतिजा गरी पाँच जना साक्याका मूल प्रवर्तक गुरुहरूको चित्र सँगै देखाउने गरिन्छ। त्यसमा साक्या पण्डितलाई मञ्जुघोष जस्तै 'प्रज्ञापारमिता' र 'खड्ग' बोकी धर्मचक्रप्रवर्तन मुद्रामा रहेको देखाइएको हुन्छ।

उहाँको यो संक्षिप्त जीवनी प्रकाशित गर्नाले आर्जित पुण्यलाई सर्वसत्वहरूको अनुत्तर सम्यक्- सम्बोधिमा परिणामना गर्दछु।

**- नारायण प्रसाद रिजाल**

(बुद्धवज्र)

# उपोद्घात

**आचार्य श्रीधर राणा (धर्मवज्र)**
अनुवादक: नारायण प्रसाद रिजाल (बुद्धवज्र)

त्रिरत्न शरणम् ।

*स भगवाँस्तथागतोऽर्हन् सम्यक्सम्बुद्धो विद्याचरणसम्पन्नः सुगतो लोकविदनुत्तरः पुरुषदम्यसारथिः शास्ता देवमनुष्याणां बुद्धो भगवानिति ॥*

आज हाम्रा उपाध्याय (खेन्पो) र नारायणप्रसाद रिजालले मिलेर अनुवाद गर्नुभएको 'मुनिमत प्रकाश' तपाईंहरूका सामु प्रस्तुत गर्नु वास्तवमा धेरै खुसीको अवसर हो। यो १२/१३औं शताव्दीका सबभन्दा उच्च तहका तिव्वतका लामाहरूमध्येकै एकजनाले लेख्नुभएको महायानसम्बन्धी मूल आधारभूत ग्रन्थ हो। उहाँलाई 'साक्या पण्डित' भनिन्थ्यो। उहाँलाई 'पण्डित'को उपाधि प्रदान गर्ने पनि काश्मीरका त्यत्तिकै प्रखर व्यक्तित्व महापण्डित शाक्य श्रीभद्र हुनुहुन्थ्यो। उहाँ नालन्दा विश्वविद्यालयका अन्तिम उपाध्याय (abbot= खेन्पो) हुनुहुन्थ्यो। मुसलमान शासक वख्तियार खिल्जीले नालन्दा विश्वविद्यालयलाई जलाएको उहाँले आफ्नै आँखाले देख्नुभएको थियो र आँखाबाट तरर आँसु झार्दै भन्नुभएको थियो रे "भारतबाट अब बौद्ध धर्म समाप्त भयो।"

यद्यपि बौद्ध धर्मका टुक्राटाक्री भारतमा १७ औं शताव्दीसम्म पनि फाटफुट देखिँदै थिए तापनि यसको प्राण भारतबाट उडिसकेको थियो। नालन्दा, विक्रमशील आदिमा रहेको बौद्धधर्मको स्वरूप अब कहाँ गएर चालू भइराख्छ भन्ने कुरा नै महापण्डित शाक्य श्रीभद्र नेपाल र भारतका आफ्ना ९ जना पण्डित शिष्यहरू सहित भई कहाँ जान चाहनुहुन्छ भन्ने कुराले इङ्गित गर्थ्यो। आखिर उहाँहरू तिव्बतमा जानुभयो र त्यहीं उहाँले साक्यापण्डितलाई पण्डितको उपाधि प्रदान

गर्नुभएको थियो। दोस्रो कर्मपा कर्मा पाक्षिलाई 'कर्मपा' भन्ने उपाधि पनि उहाँले नै दिनुभएको थियो। त्यही नालन्दामा नै गुरुरिन्पोछे (गुरु पद्मसम्भव) ले अध्ययन र अध्यापन गर्नुभएको थियो। अतीश पनि त्यहीं नालन्दावाटै तिब्बतमा जानुभएको थियो।

तिब्वतमा सर्वप्रथम आठौं शताब्दीतिर भारतीय गुरु पद्मसम्भव, शान्तरक्षित, विमलमित्रद्वारा शुरु गरिएको वौद्धधर्मका उपदेशहरूलाई अनुसरण गर्दै आएकाहरूलाई अहिले निङ्मा (प्राचीन) सम्प्रदायका वौद्ध धर्मावलम्वी भन्दछन्। त्यहीं नालन्दाका अर्का उपाध्याय सिद्ध नरोपाद आदिवाट उपदेशहरू लिएर तिब्बतमा मार्पाले स्थापना गर्नुभएको परम्परालाई अहिले काग्यु (वचन) परम्परा या सम्प्रदाय भन्दछन्। त्यस्तै तिब्वतका ड्रोक्मीले नालन्दा आदिमै अध्ययन गरी तिब्वतमा फैलाएको परम्परा पछि गएर साक्या परम्परा हुन पुग्यो। फेरि भारतकै महान् गुरु अतीश तिब्बतमा गएर स्थापना गर्नुभएको कादाम्पा परम्परावाटै पछि १४ औं शताब्दीतिर तिब्बती गुरु चोङ्खापाले संशोधन गरेपछि चलेको परम्परालाई हाल 'गेलुक्' परम्परा भन्ने गरिन्छ। त्यसकारण भारतमा निङ्मा, काग्यु, साक्या र गेलुक् भन्ने कुरा थिएन। यी त तिब्बतमा पछाडि गएर ऐतिहासिक रूपमा भएका विकास मात्र हुन्, जसको कारण तिब्बतको ऐतिहासिक विकासक्रम नै थियो। नेपाली र भारतीयहरूका लागि ती गुरुहरू जहाँबाट प्रादुर्भाव भए ती नालन्दा, विक्रमशील आदि त न निङ्मा थिए, न साक्या थिए, न काग्यु थिए र न गेलुक् नै थिए। म व्यक्तिगत रूपमा हेर्दा नेपाली र भारतीयहरूले पनि तिब्बतको ऐतिहासिक विकासक्रमभित्रै मुछिइराख्नुपर्छ भन्ने कुरा केही देख्दिन।

शाक्य श्रीभद्रसँग साक्या परम्पराका साक्या पण्डितले मात्र अध्ययन गर्नुभएको होइन। उहाँसँग त त्यसबेलाका विशिष्ट निङ्मापा र काग्युपा गुरुहरूले पनि अध्ययन गर्नुभएको थियो। शाक्य श्रीभद्र के हुनुहुन्थ्यो त ? के उहाँ निङ्मापा हुनुहुन्थ्यो ? या साक्यापा या काग्युपा या कादाम्पा ? (त्यसबेला गेलुक् भन्ने

थिएन ।) शाक्य श्रीभद्र त काश्मीरी हुनुहुन्थ्यो र निङ्मा, काग्यु, साक्या केही पनि हुनुहुन्नथ्यो । त्यसैगरी हामी नेपालीहरूले पनि यी चारै परम्पराहरूका उत्तम कुराहरू ग्रहण गर्नुपर्छ र साम्प्रदायिक बन्नु हुँदैन ।

यो पुस्तक तिब्बतका लामाहरूले लेखेका सर्वोत्तम पुस्तकमध्ये एक हो । किन कि यसमा श्रावकयान, महायान र वज्रयानका सिद्धान्तहरूलाई सुव्यवस्थित ढंगले जोडिएको छ । यसलाई शुद्ध श्रावकीय (थेरवाद जस्तै) दृष्टिले परीक्षण गर्दाखेरि पनि पालीत्रिपिटक या सर्वास्तिवादीहरूका संस्कृत आगमसँग विरुद्ध भएको पाइने छैन । यो पुस्तक स्वयम्मै समर्थ र प्रमाण छ साथै साक्या पण्डितको जीवनी पनि यसमा समावेश गरिएको छ । त्यसकारण म त्यतातिर कोटचाउन चाहन्न ।

विगतका २० ३० वर्षमा केही थेरवादीय एवं अन्य विद्वान्हरूले सीधै या घुमाउरो किसिमले भए पनि महायानका सिद्धान्त, दर्शन र अवधारणाहरूलाई खण्डन गरेका या गलत व्याख्या गरेका हुनाले ती बूँदाहरूमध्ये केहीलाई यहाँ महायानको तर्फवाट तर्क, युक्ति र शास्त्रीय हिसाबले विवेचना गर्नु उपयुक्त ठान्दछु । किन कि त्यस्ता व्याख्या र प्रचार-प्रसारले महायान बौद्धधर्मको बारेमा धेरै गलत प्रभाव पारिराखेका छन् जसले गर्दा महायानप्रति मानिसहरूमा अनावश्यक भ्रम फैलिँदै गइरहेको छ । फेरि नेपाली भाषामा महायानका सैद्धान्तिक ग्रन्थहरू अहिलेसम्म नपाइएका हुनाले यो 'मुनिमतप्रकाश'ले स्वतः नै उक्त विद्वान्हरूका व्याख्याहरूप्रति प्रश्न उठाएको हुन्छ । त्यसकारण मैले यहाँ नै ती बुँदाहरूलाई विवेचना गर्न उपयुक्त ठानेको हुँ । यसमा विद्वान्हरूले शास्त्रीय एवं युक्तिगत हिसाबले त्रुटि देखाउनुभएमा सहर्ष स्वीकार गर्नेछु ।

सर्वप्रथम, साक्या पण्डितलाई मैले 'लामा' भनेको छु । लामा भनेको के हो र लामावाद (lamaism) के हो? 'लामा' भनेको संस्कृत शब्द 'गुरु' को तिब्बती भाषाको शब्द मात्र हो र यसका अरू कुनै अर्थ छैनन् । अब 'लामावाद' भनेको के त ? वास्तवमा लामावाद (lamaism) भन्ने कुरा केही पनि छैन । यो

त तिव्वती वौद्ध धर्मका पहिला अंग्रेज लेखक 'वाडेल'ले सिर्जना गरेको दुर्भाग्यपूर्ण मिथ्यानाम मात्र हो। उनले यसलाई तिव्वतको लामाइज्म या 'लामावाद' भने र अरू सबै वाह्य लेखक, पाठकहरूमा पनि यही नाम नै अड्डाकिएको जस्तो देखिन्छ। 'लामा'को अर्थ गुरु भएको हुनाले तिव्वतको वज्रयानलाई **लामावाद** (lamaism) भन्नु श्रीलंका आदिमा चलेको थेरवाद वौद्ध धर्मलाई **'भन्तेवाद'** (Bhanteism) भन्नु सरह हो। यी दुवै नै गलत हुन्। वाडेलले करीव १०० वर्षजति अगाडि लेखेका हुन् र त्यसवेला उनलाई तिव्वतको वौद्ध धर्मको विषयमा पर्याप्त जानकारी थिएन।

सर्वप्रथम त तिव्वती भाषाको बारेमा उनलाई ज्ञान थिएन जुन कुरा उनी स्वयम्ले नै आफ्नो पुस्तकमा स्वीकारेका छन्। दोस्रो, उनका स्रोत सिक्कीमी थिए र तिव्वती थिएनन्। तेस्रो, ती सिक्कीमी स्वयं पनि तिव्वतको कुनै पनि बौद्ध परम्पराका आचार्य (लोब्पोन) या खेन्पो थिएनन्। उनी जन्मले गर्दा निङ्मापा थिए र तिव्वतीहरूको विषयमा जान्दथे। त्यसकारण वाडेलले जुन 'लामावाद' भन्ने नाम दिए त्यो गलत छ र कुनै पनि विद्वान् या विशेष गरेर नेपालीले त्यो शब्द प्रयोग गर्नु त अनभिज्ञताले मूर्ख बन्नु मात्र हो।

यसले नेपालमा व्याप्त भएको र धेरैजसो नेपालीहरूको निम्नस्तरको आर्थिक अवस्थाको कारणले गर्दा आएको अर्को मामला हाम्रो साम्नु ल्याउँछ। मैले पाएको छु कि नेपालका तथाकथित विद्वान्हरूलगायत अधिकांश नेपालीहरूको ज्ञान वाडेलकै किताब र उनमै आश्रित भई लेख्ने भारतीय विद्वान्हरूका किताबमा आधारित हुन्छ। किन ? किन कि यी पुस्तकहरू सस्ता र सस्तो प्रकाशनमा सजिलरी नेपालमा पाइन्छन्। सन् १९७० देखि यता सही तिब्बती बौद्ध धर्मको बारेमा तिब्बतकै आचार्य, गेशे (कल्याणमित्र), खेन्पो (उपाध्याय), र रिन्पोछे (रत्नश्री)हरूबाट हजारौं पुस्तकहरू निस्किसकेका छन्। तर तीमध्ये अधिकांश त पश्चिमतिरै छापिएका र रु. १२००।- देखि ३०००।-, ४०००।- सम्म पर्ने हुन्छन्, जसले गर्दा

धेरैजसो नेपालीहरूलाई ती पुस्तकहरूको बारेमा मेलोमेसो नै हुँदैन। त्यसैले गर्दा अझै पनि उनीहरूले १०० वर्ष अघि वाडेलद्वारा लेखिएका तिब्बती वज्रयानको विषयका गलत सूचनाहरूलाई नै दोहोऱ्याइरहेका हुन्छन्। **धेरैजसो नेपालीहरू र विद्वानहरूले समेत पनि आधार लिने गरेको एउटा त्यस्तै खालको धारणा नै तिब्बतको वज्रयानलाई 'लामावाद' (lamaism) भन्नु हो। लामावाद भन्ने शब्द त 'भन्तेवाद' (Bhanteism) या गुभाजुवाद (Gubhajuism)** भन्नु जत्तिकै **सिल्ली हो।** त्यसकारण कम्तीमा पनि जसको संस्कृति वज्रयानको छ, त्यस्ता नेपालीहरू भएका नाताले हामीले यसलाई तिब्बतको वज्रयान भन्न सिक्नुपर्छ। वज्रयान नेपालको काठमाडौं उपत्यका र पूरै हिमाली क्षेत्रकै बौद्धहरूको धर्म र संस्कृति हो। नेपालका धेरैजसो जनजातिहरू वज्रयानकै अनुसरण गर्छन् र अरूहरू पनि यसबाट प्रभावित भएका छन्। त्यसकारण नेपाली विद्वानले पनि वाडेल र उनका भारतीय अनुयायीहरूको अनुसरण गरेर वज्रयानलाई 'लामावाद' भन्नु नेपाली भएको नाताले निम्नकोटिको विद्वत्तालाई जनाउँछ। यो पनि मनमा राखिराख्नु पर्छ कि शेर्पा, लेप्चा, लाङ्टाङी, हुम्लाली, दार्चुली, तामाङ, गुरुङ र अन्य पनि वज्रयानी हुन्। यी सबै नेपाली भएका हुनाले वज्रयान पनि हिन्दू जत्तिकै नेपाली धर्म र संस्कृति हो।

यो पुस्तकका सन्दर्भमा उठ्ने अर्को प्रश्न हो तिब्बतको बौद्ध धर्म बोन र बौद्ध धर्मको मिश्रण हो भन्ने कुरा। यो प्रश्न केही थेरवादीहरूले र पुराना भैसकेका विद्वान्हरू जस्तै **राइज डेविड्स** आदिले उठाएका छन्। राइज डेविड्स र उनको एङ्ग्लो जर्मन स्कूल (Anglo German School)ले महायान र यसका वज्रयान जस्ता कुनै पनि स्वरूपहरूको कहिल्यै अध्ययन गरेका थिएनन्। उनले केवल पाली त्रिपिटकको अध्ययन गरेका थिए र निष्कर्ष निकालेका थिए। आम्बेडकर जस्ता व्यक्ति पनि त्यही धारणाद्वारा प्रभावित भएका थिए। **राइज डेविड्सले** महायानको राम्रो अध्ययन नगरेका हुनाले उनको त्यो निष्कर्ष

अर्धपक्व मात्र छ। त्यसकारण राइज डेविड्स् र उनमा आधारित भएका भारतीय विद्वान्हरूमा भर पर्ने अन्य विद्वान् र भन्तेहरू पनि अर्धपक्व मात्र हुन्छन्। यहाँनिर म बौद्धधर्मको बारेमा लेख्ने चार वर्गका विद्वान्हरूको बारेमा जानकारी दिनु प्रासङ्गिक ठान्दछु –

(क) पुरानो आङ्ल-जर्मन विद्वान् समूह - यसमा श्री टी. डब्लू. राइज डेविड्स्, एच. ओल्डनवर्ग जस्ता विद्वान्हरू पर्दछन्। यिनीहरूमध्ये धेरैजसोले सन् १९५९ भन्दा पहिले पाली ग्रन्थहरूबाहेक कुनै पनि बौद्ध शास्त्रहरूको अध्ययन नगरिकनै लेख्ने काम गरे, जसले गर्दा संस्कृत र यसबाट तिब्बती एवं चिनियाँ भाषामा अनुवाद भएका ग्रन्थहरूको बारेमा जानकारी नहुनु स्वाभाविकै थियो। प्रो. लालमणि जोशीका अनुसार जनस्तरमा गएर शास्त्रीय भाषाहरूको अध्ययन नै नगरी बौद्ध धर्म र दर्शन विषयक पुस्तकहरू एवं लेखहरू लेख्ने र केवल अंग्रेजी भाषाबाट मात्र अध्ययन गरेर बौद्ध धर्म र दर्शन विषयक पुस्तकहरू एवं बौद्ध सिद्धान्तहरूको बारेमा लेख्ने र बुद्धप्रति आस्था राख्ने कतिपय आधुनिक लेखहरूले यही समूहको लेखबाटै ज्ञान हासिल गरेका हुन्। भारत, अमेरिका तथा यूरोपका सर्वसाधारण जनता तथा विद्वान् वर्गले पाली त्रिपिटकलाई मात्र शुद्ध, मूल र उत्तम बौद्धधर्म भन्ने धारणा यही समूहको लेखबाट प्रभावित भएरै बनाएका हुन्। **बुद्धले पाली भाषामा मात्र कुरा गर्नुहुन्थ्यो भन्नको लागि कुनै पनि भरपर्दो प्रमाण छैन।** मगधमा मागधी भाषामा र पण्डितहरूसंग संस्कृत भाषामा कुरा पनि पक्कै गर्नुभयो होला र उपदेश पनि दिनुभयो होला। यसको मतलब यो हो कि पाली ग्रन्थहरूमा पहिलेका उपासक, पण्डित आदिले बुझेका र बचाइराखेका बुद्ध-उपदेशहरूका धेरै पक्षमध्ये एक पक्षको मात्र उल्लेख छ। बुद्धको ओठबाट निस्केका दुरुस्त वचनहरूलाई नै पाली ग्रन्थमा बचाएर राखिएको छ भन्नु महामुनि थेरवादी थिए भन्ने देखाउन खोज्नु हो, जुन हास्यास्पद हुन्छ। बुद्धको परिनिर्वाण भएको सय वर्षभन्दा पछि भएको द्वितीय संगायनदेखि मात्र थेरवाद परम्परा

शुरु भएको हो भन्ने कुरा प्रसिद्ध छ। साथसाथै निस्केको महासाङ्घिक परम्परामा पनि यही कुरा लागू हुन्छ। एडवर्ड कोञ्जे लेख्छन्- "हामीसँग भएका हालका पाली ग्रन्थहरू सर्वास्तिवादी आदि परम्पराका ग्रन्थहरूभन्दा पुराना होइनन् ।"

(ख) लेनिनग्राड समूह - चेर्वात्स्की, रोजन वर्ग, ओवर मिलर आदि यो समूहका अग्रगण्य लेखकहरू हुन्। यी विद्वान्हरूले पाली ग्रन्थको मात्र अध्ययन नगरेर आँग्ल-जर्मन समूहका गलत निष्कर्षहरूलाई पनि औंल्याए। बौद्ध देशका चालचलन तथा जीवित विचारहरूको पनि यिनीहरूले ख्याल गरे। बुद्धघोषको विसुद्धिमग्गको मात्र नभएर वसुबन्धुको अभिधर्मकोषको पनि अध्ययन भयो। पाली ग्रन्थहरू मात्र शुद्ध, मूल बुद्धवचन हुन् भन्ने कुरामा यी विद्वान्हरू सहमत छैनन्।

(ग) फ्राङ्को-वेल्जियम समूह - यो समूहमा सिल्वाँ लेवी, लुई द ला भाले पुसें, एड्वर्ड कोञ्जे, एनीयन लामोत, एन्द्रोबोरो आदि विद्वान्हरू पर्दछन्। यिनीहरूले शास्त्रीय तथा पुरातात्विक रूपमा तिब्बती, संस्कृत, चिनियाँ आदि भाषामा प्राप्त सम्पूर्ण उपलब्ध स्रोतहरूको आधारमा बौद्ध धर्मको अध्ययन गरे। ला भाले पुसें पाली ग्रन्थहरूले केवल थेरवाद नामक एक निकायको मात्र जानकारी दिलाउँछन् र यसको आधारमा मात्र बौद्ध धर्मको इतिहास एवं दर्शनहरूको व्याख्या गर्नु मायावी प्रयत्न मात्र हुनेछ भन्ने तथ्यमा प्रकाश पार्ने प्रथम विद्वान्मध्ये एक हुन्।

(घ) सन्त महन्त एवं ब्राह्मण समूह - यो समूहमा स्वामी विवेकानन्द, राधाकृष्णन् र हालका कतिपय नेपाली एवं भारतीय विद्वान्हरू पर्दछन्। यो समूहले निरन्तर यो सिद्ध गर्ने प्रयास गरेको छ कि बौद्ध धर्म उपनिषद्हरूबाटै निस्केको हो। ऐतिहासिक एवं दार्शनिक रूपबाट हेर्दा यो पूर्ण रूपमा निरर्थक र भ्रमात्मक धारणा भएको हुनाले त्यसको बारेमा यहाँ चर्चा गर्नु पनि निरर्थक छ। वरु तिब्बती परम्पराका गुरुहरूसँगै बसेर अध्ययन गरी व्याख्या गर्ने केही विद्वान् एवं गुरुहरू पनि छन् जसको व्याख्या परम्परागत र आधिकारिक मानिन्छ। जस्तै:- ठाङ्गु रिन्पोछे, प्रो. ज्योफ्रे हप्कीन्स, प्रो. रबर्ट थर्मन, पीटर डेल्ला

सान्तीना, डेविड ज्याक्सन, हर्बर्ट गुन्थर, डा. एलिजाबेथ नापियर, चोग्याम् ट्रुङ्पा रिन्पोछे, टुल्कु थोण्डुप, एच.एच. दुज्योम रिन्पोछे, काल्ु रिन्पोछे, आदि।

पाली थेरवाद प्रणाली भनेको १८ धातु, १२ आयतन, ५ स्कन्ध, शमथ-विपश्यना, शील-समाधि-प्रज्ञा, बोध्यङ्ग, ३७ बोधिपक्ष आदिको प्रणाली हो। साक्या पण्डितको यही पुस्तकले नै देखाउँछ कि- महायान र तिब्बतको वज्रयान पनि ठीक तीनै कुराहरूको प्रणाली रहेछ। फरक त केवल यत्ति हो कि- थेरवाद भनेको अर्हत्वतिर लैजाने श्रावकयानभित्रको प्रणाली हो भने तिब्बतको बौद्धधर्म भनेको बुद्धतातिर लैजाने बोधिसत्त्वयानको प्रणाली हो।

केही थेरवादी भन्ते र उनका अनुयायीहरूले महायान या वज्रयानमा विपश्यना छैन भन्ने प्रभाव पार्न खोज्छन्। यसले त उनीहरूको आफ्नै अनभिज्ञतालाई नै प्रमाणित गर्छ र यो पुस्तक स्वयंले नै त्यसको जवाफ दिएको छ। महायान र वज्रयानका सबै ध्यानहरूको मूल केन्द्र-बिन्दु नै विपश्यना हो। बर्मेली थेरवादी समूहहरूले ७ १० दिने या ६ महिने विपश्यना ध्यान शिविर चलाउँछन् भन्ने कारणले नै महायानमा विपश्यना छैन भन्ने कुरा प्रमाणित हुँदैन। भियतनाम, चीन, कोरिया र जापानको जेन-महायान परम्पराले पनि आफ्ना देशहरूमा यस्ता शिविरहरू सञ्चालन गरेकै छन्। तिब्बती परम्पराले पनि तिब्बतीहरूमा त्यस्ता तीन महिनेदेखि लिएर १२ वर्ष शिविरहरूसम्म सञ्चालन गरिरहेकै छन्। यहीं काठमाडौं उपत्यकामा र नेपालभरि पनि त्यस्ता ध्यान केन्द्रहरू थुप्रै छन् जहाँ गम्भीर रूपमा लाग्न खोज्नेहरूलाई निरन्तर तीन वर्षसम्मका गुफावास (retreat) बस्ने-बसाउने काम सञ्चालन भइरहेको हुन्छ। छोटो ७/१० दिने शिविर भन्ने कुरा तिब्बती परम्परामा त्यति प्रचलित छैन, तर पनि त्यस्तो चलन त्यहाँ नभएको भन्ने होइन।

सूत्र र तन्त्रका गम्भीर विपश्यनाहरू शरणगमन र महायान बोधिसत्त्वसंवर नलिएकाहरूलाई दिन मिल्दैन। यस्तो

चलन त वर्मा र थाइल्याण्डका धेरै गुरुहरूले पनि अपनाएकै हुन्छन्। उनीहरूले शिविर शुरु गर्नुअघि पनि व्यक्तिले पञ्चशील लिने र शरणगमन गर्नै पर्ने कुरामा जोड दिएको देखिन्छ। बर्मेली गुरुहरूबाट यहाँ काठमाडौंको शङ्खमूलमा सञ्चालन हुने गरेको प्रणालीमा पनि त्यस्तै पाइन्छ। जे होस् ७-१० दिने शिविरहरू नयाँ आविष्कार हुन् र त्रिपिटकमा कहीं पाइँदैन। बुद्धले कहिल्यै पनि त्यस्तो शिविर सञ्चालन गर्नुभएन र अरूलाई पनि सञ्चालन गर्न भन्नुभएन. यो कुरा हामीले बिर्सिन हुँदैन। यद्यपि यस्तो तरिका 'उ नारद (जेतवन सयादो) प्रभृतिका बर्मेली गुरुहरूले करीव १०० वर्षजति अघि गरेको आविष्कार हो तापनि यो राम्रो आविष्कार हो। परन्तु महायानको जेनमा त यस्तो ७ १० दिने कडा शिविर गर्ने तरिका १३०० वर्ष अघिदेखि नै शुरु भएको थियो। तर श्रीगोयन्काजी आदिले जस्तै महायानी या वज्रयानी गुरुहरूले पनि त्यस्तै खुल्ला विपश्यानाको शिविर सञ्चालन गरेका छैनन् भन्दैमा महायान या वज्रयानमा विपश्यना हुँदैन भन्ने तात्पर्य हुँदैन। वज्रयान विपश्यना भनेको प्रभास्वर चित्तको शमथ, विपश्यना र देवानुस्मृति एवं विज्ञान कसीण तथा चित्तानुस्मृति आदिको संयुक्त रूप हो। यी सबैको उल्लेख त पाली त्रिपिटकमा समेत गरिएको छ। हुन त अङ्गुत्तर निकायको अनुत्तरीय वग्ग. उदायी सुत्तमा प्रभास चित्तको ध्यानको उल्लेख गरिएको छ र प्रभास्वर चित्तको बारेमा अंगुत्तर निकायमै "पभस्सरमिदं भिक्खवे चित्तं... तञ्च खो आगन्तुकेहि उपकिलेसेहि उपकीलिलत्थं, पभस्सरमिदं... तञ्च खो आगन्तुकेहि उपकिलेसेहि विप्पमुत्तं" जस्ता केही वाक्यहरूको र दीघ निकायमा पनि केही उल्लेख पाइन्छ, तापनि प्रभास्वर चित्तको साँच्चिकै ध्यान त पूरै पाली त्रिपिटकमा कहीं पनि पाइँदैन भने पछाडिका पाली ग्रन्थ जस्तै 'विसुद्धिमग्ग' 'विमुत्तिमग्ग' आदिमा पनि भेटिँदैन। परन्तु शास्ताले त्यस्तो ध्यान छ र त्यसबाट "ञाणदस्सन पटिलाभाय सम्वत्ततीति" भनेर अङ्गुत्तर निकाय, अनुत्तरीय वग्ग, उदायी सुत्तमा बताउनुभएको छ।

सबभन्दा पहिलो व्याख्याता आचार्य बुद्धघोषले प्रभास्वर चित्तलाई भवाङ्ग हो भन्नुभएको छ। यसको अभिप्राय त वीथिचित्तमा प्रभास्वर छैन भन्नेजस्तो हुन जान्छ। त्यसैले भवाङ्गचित्त र प्रभास्वर एउटै हो भन्नु अलि मिल्दैन। यसबाट यो पनि प्रमाणित हुन्छ कि ५०० ई. (बुद्धघोषको पाला) सम्ममा थेरवाद व्याख्या प्रणालीमा प्रभास्वर चित्तको ध्यान जस्ता कुराहरू हराइसकेका थिए। यसैबाट यो पनि सिद्ध हुन्छ कि शास्ताका सम्पूर्ण उपदेशहरू पाली त्रिपिटकमा छैनन्। त्यसकारण कुनै पनि थेरवादी भन्ते र उनका अनुयायीहरूले महायान तथा वज्रयानमा विपश्यना नै छैन भन्ने योग्यता राख्दैनन्। तिब्बती भाषामा शमथलाई 'सीने' र विपश्यनालाई 'लाक्थोङ्' भनिन्छ। त्यस्तै चाइनिज भाषामा 'चि' र 'क्वान्', जापानीमा 'शी' र 'कान्' भनिन्छ।

अर्को प्रश्न यो पनि उठेको पाइन्छ कि तन्त्र-मन्त्र भन्ने कुरा बौद्ध धर्ममा कसरी हुन सक्छ ? मज्झिम निकायको मारतज्जनीय सुत्तमा शास्ता स्वयंले नै बताउनुभएको छ कि क्रकुच्छन्द बुद्धले नाग-अवलोकन मन्त्र प्रयोग गरेर दुस्सी मारलाई दमन गर्नुभएको थियो। यदि मन्त्र बौद्ध धर्म नै होइन भने क्रकुच्छन्द पनि बुद्ध नै होइनन् या शाक्यमुनिले झूटो बोले। यहाँ हामीले यो पनि छुट्याइराख्नु पर्छ कि वज्रयानको तन्त्र-मन्त्र र गाउँले झारफुके तन्त्र-मन्त्र एउटै कुरा होइनन्। गाउँले झार-फुके तन्त्रमन्त्रमा झारफुक गर्ने, पानी पार्ने, टुनामुना लाउने जस्ता काम हुन्छन्। यस्ता तन्त्र-मन्त्रहरू विपश्यना होइनन्। तर जहाँसम्म तिनीहरूको प्रभावकारिताको कुरा छ, ती प्रभावकारी छन् भने, चाहे ती तथाकथित वैज्ञानिक प्रविधि जस्ता देखियून् या नदेखियून्, ती प्रभावकारी नै ठानिन्छन्।

यदि कुनै झारफुकले मेरो टाउको दुखेको निको पार्‍यो भने भौतिक शास्त्र, रसायन शास्त्र जस्ता विज्ञानले त्यसको मान्यतालाई नकार्न सक्दैनन्। यदि ती झारफुकले मेरो टाउको दुखाई ठीक पार्न सके भने ती पनि 'एस्पिरिन' जत्तिकै मान्य

ठानिन्छन् । चाहे ती बौद्ध होऊन् या नहोऊन्, त्यसको कुनै मतलब छैन । के बौद्धहरूले आफ्नो निजी 'बौद्ध एस्पीरिन्' मात्र खान्छन् ? र के उनीहरूले बोन्पो या हिन्दू आदिले बनाएका एस्पीरिन् ट्याब्लेट आदि खानु नै हुँदैन ?

बुद्धले पाली विनयमा भिक्षुहरूलाई त्यस्ता मन्त्र-तन्त्र आदिको प्रयोग गर्नलाई रोक लगाउनुभएको साँचो हो । परन्तु त्यो त भिक्षुहरूलाई हो किनभने त्यसले यही जन्ममा अर्हत्व प्राप्त गर्ने उनीहरूको लक्ष्यमा बाधा पुग्न सक्छ । तर नेपाल, थाइल्याण्ड, बर्मा, जापान, तिब्बत आदि ठाउँमा लाखौंलाखले अनुभव गरिरहेको हुँदाहुँदै पनि यी झारफुकले पनि एस्पीरिनले जस्तै टाउको दुखेको निको पार्न सक्छन् भन्ने कुरालाई अस्वीकार गर्नु चाहिं विज्ञानको नाममा अवैज्ञानिक हुनु हो । परन्तु यहाँ मैले भन्नै पर्ने हुन्छ कि धेरै जसो बर्मेली, थाई, लाओसियन, भिक्षुहरूले पनि आफ्ना दानपतिहरूका निमित्त उपचार गर्न झार-फुक गरेकै हुन्छन् । त्यही भएर हो तिब्बती वज्रयान परम्पराभित्र पनि 'झारफुक'को चलन पाइन्छ । परन्तु त्यही नै वज्रयान हो भनेर निष्कर्ष निकाल्नु चाहिं ठूलो गल्ती हो । यो त वज्रयानको केवल दोस्रो दर्जाको गौण पक्ष मात्र हो यद्यपि अशिक्षितहरूका बीचमा सम्पर्क हुँदाखेरि देखिने वज्रयानको रूप यस्तै मात्र हुन पनि सक्छ । त्यस्तो त थेरवादी देशहरूमा पनि प्रशस्त पाइन्छ । बुद्धका पालामा समेत पनि विशाखाका पाँच सय सहेलीहरू मिलेर ज्ञान प्राप्त गर्नलाई नभएर केवल लौकिक सुखभोगका निमित्त भनी उपोषथ बसेका थिए । बुद्धले त्यस्तो उपोषथलाई रोक्नुभएन, यद्यपि उहाँले यसको प्रयोजन बोधि प्राप्तिको निमित्त आफ्नो शुद्धताको लागि गरिनुपर्ने हो भन्ने पनि बताइरहनु भएकै थियो । विशाखाका पाँचसय सहेलीहरू आज पनि थेरवाद, महायान र वज्रयानमा समेत पाइने गर्छन् । थेरवाद, महायान र वज्रयान कुनैलाई पनि केवल त्यस्ता विशाखाका ५०० सहेलीहरूको आधारमा मात्र मूल्याङ्कन गरिहाल्नु हुँदैन । धेरै मानवशास्त्रीहरूले पनि यही गल्ती गरेका छन् । हामीले यो स्वीकार्नै पर्ने हुन्छ कि पाँचसय

विशाखा सहेलीहरूको बौद्ध धर्म त शास्ता जाँतके पुगेको हो र आजसम्म पनि रहिराखेको छ। त्यसकारण हामीले वज्रयानको विशाखा सहेली पक्षलाई हेर्नु र त्यसबाटै यहां विपश्यना नै छैन भन्ने निष्कर्ष निकाल्नु हुँदैन। विशाखा सहेली पक्षको थेरवादमा पनि विपश्यना छैन।

वज्रयानको तन्त्र भनेको त्यस्तो (झारफुके) होइन। वज्रयानमा तन्त्रको आफ्नै परिभाषा छ जुन प्रभास्वर चित्तसन्तानसँग सम्बन्धित छ। महामायातन्त्रको गुणवती टीकामा भनिएको छ "तन्त्रं त्रिविधं हेतुतन्त्रं, फलतन्त्रं. उपायतन्त्रं च। तत्र प्रकृतिप्रभास्वर मनादिनिधनं चित्तं बोधिचित्तं स हेतुस्तद्बीजम्..." (तन्त्र तीन प्रकारको छ, हेतुतन्त्र, फलतन्त्र र उपायतन्त्र। त्यसमध्ये आदि अन्त्य नभएको स्वभावले नै प्रभास्वर भएको चित्त बोधिचित्त हो, त्यही नै हेतु हो र त्यही नै बुद्धताको बीज हो...)

यो बताइरहनु आवश्यक छैन कि यो परिभाषा हिन्दू तन्त्रको परिभाषासँग मिल्दैन। धनशमशेरका अनुसार "तननात् त्रायत इति तन्त्रम्" यसको अर्थ हो अनात्मा पदार्थसँगको तन्काइबाट जसले रक्षा गर्छ त्यो तन्त्र हो अथवा जीवलाई तन्काएर ब्रह्मसँग मिलाउनु नै तन्त्र हो। बौद्ध तन्त्रमा जीव र ब्रह्म भन्ने कुरै हुँदैनन्। बौद्धतन्त्र हरू त अनित्य-दुःख-अनात्मा र शून्यताकै विषयमा हुन्छन्। दुवैमा केवल नाम मात्र एउटै परेको छ। एउटा आत्म-साक्षात्कारसँग सम्बन्धित छ भने अर्को शून्यताको रूपमा अनात्म-साक्षात्कारसँग सम्बन्धित छ। तन्त्रयान नै वज्रयानको अर्को नाम भएको हुनाले र त्यहाँ 'तन्त्र' भन्ने उही शब्द पाइने हुनाले धेरै थेरवादीहरूले वज्रयान हिन्दूधर्मबाट प्रभावित हुनुपर्छ भन्ने सोच्छन्। यो कुरालाई अलिकति विवेचना गरौं।

अहिलेसम्म इतिहासविद्हरूले गुह्यसमाज तन्त्रलाई सन् ३०० को भनेर कालगणना गरेका छन्। यद्यपि हाल केही अन्य तान्त्रिक रचनाहरू सन् १०० कै हुन् जस्तो लाग्ने पनि भेटिन्छन (उदाहरणको लागि अश्वघोषको गुरुपञ्चाशिका) तापनि

त्यसको अहिलेसम्म ऐतिहासिक निर्णय भैसकेको छैन। परन्तु हिन्दूतन्त्रका सबभन्दा पुराना मूल ग्रन्थहरू 'रुद्रयामल' र 'ब्रह्मयामल' ले स्पष्ट रूपमा उद्घाटित गरिदिएकै छन कि, कसले कसलाई प्रभावित गरेको रहेछ। रुद्रयामल र ब्रह्मयामलमा दावी गरिएको छ कि वसिष्ठ बुद्धरूपी शिवलाई भेटेर बुद्धताको मार्ग सिक्न भनेर तिब्बत (महाचीनमा) गएका थिए। म यी दुई हिन्दू तन्त्रहरूलाई राम्रोसँग केलाउन चाहन्छु।

अहिलेका लगभग सबैजसो हिन्दू तान्त्रिक सम्प्रदायहरू या त रुद्रयामलमा या ब्रह्मयामलमा आधारित छन् अथवा यिनीहरूलाई आधिकारिक भनेर उद्धरण गरेका हुन्छन्। यी दुई हिन्दू शास्त्रहरूले वसिष्ठलाई तन्त्र सिक्न तिब्बत (महाचीन) मा गएको दावी गर्छन्। तिब्बतमा तन्त्रयान प्रवेश गरेकै गुरु पद्म सम्भव (गुरु रिन्पोछे) मार्फत् ८-९औं शताब्दीमा हो। ११-१२ शताब्दीमा मुसलमानको आक्रमणबाट पूर्णरूपमा नष्ट नहुँदासम्म त भारतमै यो पूरै तन्त्रयान पाइन्थ्यो जसका वज्रयान, उपाययान, मन्त्रयान आदि पर्यायवाची शब्द नै थिए। वसिष्ठलाई मुस्लिम आक्रमणभन्दा अघि बौद्ध तन्त्र सिक्न तिब्बत किन जानुपर्‍यो ? जब कि त्यसबेलासम्म त तिब्बतीहरू तान्त्रिक बौद्ध धर्म सिक्न भारतमा आउने गर्दै थिए।

मार्पाले (१०औं शताब्दी) जम्माजम्मी २१ वर्षसम्म भारतमै वज्रयानको अध्ययन गरेर बिताएका थिए। त्यसैगरि ड्रोक्मी लोचावाले पनि नेपाल र भारतमा तन्त्रयानको अध्ययनमा धेरै समय बिताएका थिए। त्यतिबेला सामान्य रूपमा बौद्ध धर्मको र विशेष रूपमा तन्त्रयानको अध्ययन गर्न हजारौं तिब्बतीहरूले हिमाल काटेर नालन्दा महाविहार, विक्रमशील महाविहार, ओदन्तपुरी, सोमपुरी आदि स्थानहरूमा आउने गरेका थिए।

त्यसकारण यी तथाकथित वसिष्ठ किन तन्त्र सिक्न तिब्बत चढ्थे यदि भारतमा पहिले नै यो नाश नभइसकेको भए ? यसको तात्पर्य के हुन्छ भने रुद्रयामल र ब्रह्मयामल भनेका भारतमा बौद्ध धर्मका सबै स्वरूपहरूको मुसलमानी

आक्रमणबाट विनाश भइसकेपछि लेखिएका हुन। त्यसको मतलब तिनीहरू ११ १२औं शताब्दीभन्दा पछिका हुन जान्छन्। तर यी त सबभन्दा पुराना हिन्दू तान्त्रिक ग्रन्थहरू हुन। त्यसकारण तिनीहरू र तिनीहरूबाट विकसित भएका तान्त्रिक सम्प्रदायहरूबाट कसरी गुह्यसमाज तन्त्र प्रभावित हुनसक्छ ? यसमा धेरै शोधखोज हुनुपर्ने छ, तर पनि अहिले जे छ त्यसबाट त बौद्धतन्त्रहरूबाट हिन्दूतन्त्रको जग नै प्रभावित भएको जस्तो देखिन्छ न कि त्यसको उल्टो।

केही थेरवादीहरूले सोच्छन् कि बौद्ध तन्त्रहरूमा नाडी, चक्र, आदिका धारणाहरू प्रयोग हुने भएकाले यी हिन्दूतन्त्रहरूबाट प्रभावित भएको हुनुपर्छ। म उनीहरूलाई भन्न चाहन्छु कि नाडी, चक्र आदिको धारणा केवल हिन्दूहरूको मात्र धारणा होइन, यो त जैनहरूमा पनि पाइन्छ। यो त थाईल्याण्डको धम्मकाय फाउण्डेशनका भिक्खु मेत्तानन्दोले पनि प्रयोग गरेका छन्। चक्खुपसादलाई हृदयवत्थुसंग जोड्ने नाडीहरू हुन्छन् जसबाट विचार र शक्तिहरूको सञ्चालन हुन्छ भन्ने कुरा अभिधम्मपिटकमा मात्र पाइने होइन अपितु विपश्यनामा पनि थाईल्याण्डका महान् विपश्यना गुरु आचान् धम्मधरोले प्रयोग गरेका छन्। उनी बाट (विहार) टाउकोटे, नाखोन् श्री थम्मराजका हुन्। धेरै उच्च तहको विपश्यना ध्यानीले आफ्ना विचार विकल्पहरू हृदयवस्तुबाट पछाडि मेरुदण्डको सुषुम्ना हुँदै माथि शिरसम्म कुदेको समेत स्पष्टरूपमा अनुभव गर्न सक्छन्। प्रभास्वर चित्तको अभ्यासमा यिनै नाडीहरूले जीवन्त भूमिका खेलेका हुन्छन्। तैपनि, यी नाडीहरूको प्रयोग गर्नु स्वयं मात्र वज्रयानको या विपश्यनाको अन्तिम लक्ष्य हो भनेर कहिल्यै पनि दावी गरिएको छैन। यो त केवल उपाय कुशलताको लागि मात्र प्रयोग गरिएको हुन्छ। जस्तो कि आचान् धम्मधरोले आफ्नो विपश्यना पद्धतिमा हृदयवस्तु आदिको प्रयोग गरेका छन्। त्यसकारण नाडीआदिको प्रयोगले मात्र यी हिन्दू विचार र संस्कारहरूले प्रभावित भएका हुन् भन्ने कुरा अलिकति पनि प्रमाणित हुँदैन।

महायान वज्रयानलाई अन्धाधुन्ध रूपमा आलोचना गर्ने थेरवादीहरू दुई थरिका छन्। ती मध्ये एकथरिका ती भन्तेहरू हुन् जसमध्ये धेरैजसो उनीहरूका पहिलेका केही गुभाजूहरूको वाहियाती व्याख्या र अबौद्ध तौरतरिकाहरूबाट दिक्क भएका थिए। दोस्रोथरिका चाहिं केही ७ १० दिने विपश्यना शिविरहरू लिंदैमा सम्पूर्ण बौद्ध धर्म बुझें भन्ने खालका व्यक्तिहरू हुन्। त्यस्ता शिविरबाट बाहिर आउने बित्तिकै हामीले सम्पूर्ण बौद्ध धर्म बुझिसक्यौं भन्ने ठानेका हुन्छन्। उनीहरू यसरी अभिसंस्कृत भएका हुन्छन् कि बुद्धले ४५ वर्षसम्म सिकाएको कुरा भनेकै त्यही आनापानसति, वेदनानुसति आदि मात्र हो र त्यसबाहेक अरू उहाँले केही पनि सिकाउनुभएको थिएन भन्ने विश्वास गरेर बसेका हुन्छन्। कस्तो गजबको कुरा ! उनीहरूलाई यति पनि याद भए जस्तो देखिदैंन कि उनीहरू स्वयं नै पूरै त्रिपिटकको विरुद्ध गइरहेका छन्। केहीले त यहाँसम्म पनि भन्न पुग्छन् कि आफूले गरेको बाहेक अर्को विपश्यना पद्धति सही पद्धति नै होइन। कोही मानिसहरू कसरी यस्ता अन्धा हुन सकेका होलान् ! त्यस्ता व्यक्तिहरूलाई यो याद दिलाउन चाहन्छु कि बुद्धले ७/ १० दिने शिविर सञ्चालन गरेको भन्ने त कहीं पनि पाइँदैन। म गलत हुँ भने कृपया त्रिपिटक अध्ययन गरेर हेर्नुभए हुन्छ। मैले त्यस्ता सात-दशदिने शिविरलाई गलत या अबौद्ध भनेको होइन। मैले त के मात्र भन्न खोजेको हुँ भने त्यस्तो सात-दशदिने शिविरमा बस्नु स्वयं नै बुद्धले सिकाएको मौलिक तरिका होइन। त्यसैगरी बुद्ध स्वयंले नै नसिकाएका परन्तु बुद्धको दृष्टिसँग नबाझिने थुप्रै विधि र शिक्षाहरू पनि हुन्छन्। थाइल्याण्डका आचान्झा एक प्रसिद्ध विपश्यना गुरु हुनुहुन्छ। उहाँको विचारमा पनि यस्ता सात-दशदिने तीव्र (Intense) शिबिरहरूमा धेरै खतराहरू हुने सम्भावना हुन्छ। उहाँ पनि भन्नुहुन्छ कि बुद्धले वास्तवमा त्यस्तो तरिकाबाट कहिल्यै पनि सिकाउनु भएको थिएन। यसैबाट थाहा हुन्छ कि त्यस्ता कृत्रिम शिबिरहरू कति मौलिक रहेछन।

जहाँसम्म गुभाजूहरूको विरुद्ध प्रतिक्रिया गर्ने भन्ते र उहाँहरूका अनुयायीहरूको प्रश्न छ, म केवल यत्ति मात्र भन्न सक्छु कि उहाँहरूको आलोचना नेवारी बौद्ध धर्मसम्म मात्र सीमित हुनुपर्छ न कि सम्पूर्ण महायान पद्धतिमा । उहाँहरूमध्ये अधिकांश त गुभाजूहरूकै पहिला शिष्य या सन्तानहरू भएकाले गुभाजूहरूले सिकाउने कुरा के हो र ती शिक्षाहरू कति हदसम्म बौद्ध छन् भन्ने कुरा मैले भन्दा उहाँहरूले नै बढी थाहा पाउने भएको हुनाले म त्यतातिर लाग्दिन । तैपनि ऐतिहासिक पृष्ठभूमिलाई लिने हो भने मल्ल राजाहरूको ४/५ सय वर्षजतिको हल्का दमन र त्यसपछि फेरि राणाहरूको जहानियाँ शासनको तीव्र दमन पछि पनि जे जस्तो रूपमा भए पनि आजसम्म बुद्ध धर्मलाई टिकाएको श्रेयः गुभाजूहरूलाई दिनै पर्छ। आखिर यदि यी गुभाजुहरूले आजसम्म नथेगेको भए अहिलेका कतिपय नयाँ बनेका भन्तेहरूले आफू बौद्ध परिवारका हौं भन्ने पनि थाहा पाउने थिएनन् ॥ आज उनीहरू जसरी भन्ते बनेका छन् त्यति सजिलरी नै सन्यासी बनेका हुन्थे होलान् । धेरै पींढी अघिदेखि नै यी परिवारहरू हिन्दू बनिसकेका हुन्थे । यिनीहरूलाई भन्ते बन्ने विचार पनि कसरी आउँथ्यो होला र ? बुद्धले अङ्गुत्तरनिकायमा बताउनुभएको छ कि एक उत्तम भिक्षुले प्रशंसनीय कुरालाई कसरी प्रशंसा गर्नुपर्छ र आलोचनीय कुरालाई कसरी आलोचना गर्नु- पर्छ ।

तिब्बत, मङ्गोलिया, चीन, जापान, मध्यएसिया, कोरिया, भियतनाम, लद्दाख, सिक्किम, भूटान, अरुणाञ्चल प्रदेश, स्फिति, लाहुल, जँस्कर र नेपालको सम्पूर्ण हिमाली क्षेत्रभरि फैलिएको महायान-वज्रयानलाई केही गुभाजूहरूको तरिका र उनीहरूको गलत व्याख्यासँग मिसमास गर्नु अवश्य पनि हुँदैन । तिब्बतको महायान-वज्रयान भनेको भारतकै महायान-वज्रयान हो। यसलाई केही थेरवादीहरूले दाबी गर्न प्रयास गरेजस्तो बोन्पोले प्रभाव पारेको छैन । म उनीहरूलाई चुनौती दिन सक्छु कि यो पुस्तकमा कतै बोन्पो तत्वहरू उनले पाउन सक्लान् कि ? यो पुस्तक तिब्बती बौद्ध धर्मको सागरबाट निकालिएको

पानीको एक थोपाको स्पष्ट नमूना नै हो। यो पुस्तकमा जे पाइन्छ त्यही नै तिब्बती बौद्धधर्ममा पाइन्छ र जे पाइँदैन तिब्बती बौद्ध धर्ममा त्यो पाइँदैन। कुनै पनि पाली त्रिपिटकको नेयार्थ र नीतार्थमा समेत यो पुस्तकमा कतै विरोध हुन्छ भने पाली त्रिपिटकाचार्यहरूलाई देखाउनको निमित्त चुनौती दिन्छु। विशाखा-सहेलीको बौद्ध धर्मको विरुद्ध तिव्वती बौद्ध धर्मको सच्चा रूपलाई यो पुस्तकले प्रतिनिधित्व गर्दछ। विशाखा-सहेली प्रकार त तिब्बती बौद्ध धर्ममा पनि पाइन्छ भने थेरवादी बौद्ध धर्ममा पनि प्रशस्त पाइन्छ।

साक्या पण्डित भनेका नालन्दा र विक्रमशील आदिका पण्डितहरूकै नमूना हुनुहुन्छ। तिव्बती बौद्ध धर्मको आकाशमा उहाँ जस्तै खालका ताराहरू धेरै उदाउनुभएको छ। साँच्चिका वज्राचार्य भनेका उहाँहरू नै हुनुहुन्छ र उहाँहरू भारतवर्षका नरोपाद, विरूपाद, पद्मसम्भव, ज्ञानश्रीमित्र, रत्नकीर्ति, शान्तरक्षित, शान्तिदेव आदिका आध्यात्मिक दायाद हुनुहुन्छ।

प्रायः हामीले सुनिन्छ कि केही थेरवादी भन्तेहरूले आफ्ना गुभाजूहरूको बारेमा लिएको जानकारीलाई मात्र आधार लिएर महायानीले शीलआदिको पालना नै गर्दैनन् भन्ने मूढतापूर्ण कुरा पनि गर्छन्। यो पुस्तकका लेखक त पूर्ण उपसम्पदाप्राप्त भिक्षु हुनुहुन्थ्यो र आफ्नो जीवनभर भिक्षुसंवर (प्रातिमोक्ष संवर) लाई पूर्ण रूपमा पालन गरेर बस्नुभएको थियो। बितेका हजार वर्षसम्ममा तिब्बतको बौद्ध धर्ममा यसरी रहेका भिक्षुहरूका लाखौं दृष्टान्तहरू बनिसकेका छन्। मैले यस्तो पनि सुनेको छु कि केही तथाकथित बौद्ध भन्ते र उनीहरूका अनुयायीहरूले नीतिको मर्यादालाई समेत उल्लङ्घन गरेर गुरु पद्मसम्भवलाई श्रद्धाले द्वितीय बुद्धसमान देख्ने उपासक उपासिकाहरूको सामु गुरु पद्मसम्भव (गुरु रिम्पोछे) को थान्का या मूर्तिप्रति उपहास गर्दै जादुगरको संज्ञा दिँदै हिंड्ने गरेका छन्। गुरु रिम्पोछे त तथागतका सच्चा पुत्र हुनुहुन्थ्यो किन कि उहाँले सधैं तथागतलाई नै शिरोपरि गर्नुभएको थियो। तिब्बती जनता र हिमाली क्षेत्रका बासिन्दाहरूका त उहाँ गुरुसमेत हुनुहुन्थ्यो र

त्यसैले गर्दा द्वितीय वुद्ध (वुद्धको प्रतिनिधि, दून समान) नै हुनुहुन्थ्यो जो विना तिब्वत र नेपालको सम्पूर्ण हिमाली क्षेत्र नै आजसम्म बोन्पो नै हुने थियो र वुद्धको त अहिलेसम्म पनि नामसमेत त्यहाँ सुनिने थिएन होला। तिब्वतवासी र हिमाली क्षेत्रका बासिन्दाहरूको उहाँप्रतिको आदर र श्रद्धाभाव त सारिपुत्रको अश्वजित् प्रतिको आदर र श्रद्धाभाव जस्तै हो। तथागतको नजिकै सुत्दाखेरि पनि सरिपुत्र सधैं अश्वजिततिर सिरान गराएर सुत्ने गर्दथे। उनले तथागत भएतिर सिरान गराउँदैनथे चाहे उनी उहाँसँग एउटै विहारमा किन नसुतेका होऊन्। तिब्बतका र हिमाली क्षेत्रका वज्रयानीहरूले गुरु रिम्पोछेप्रति देखाउने श्रद्धाभावको पनि ठीक त्यही मूल्य हो। यो इतिहासलाई ठ्याम्मै मतलब नराखेर सिधै गुरु पद्मसम्भवलाई जादुगर, चटके जस्ता शव्द प्रयोग गरेर श्रद्धालुहरूका सामु अपवाद गर्नु १२०० वर्षदेखि चलिआएको संस्कृतिको अपमान प्रदर्शन गर्नु हो र जसले त्यो संस्कृतिको अनुसरण गरेका छन् उनीहरूको भावनामा सिधै चोट पार्नु एवं असभ्यताको प्रदर्शन गर्नु मात्र हो। यो सच्चा मैत्री पनि होइन र अझ तथागतको भाषामा भन्ने हो भने 'इदंसत्याभिनिवेश' कै एक रूप.हो।

के श्रीलंका, थाइल्याण्ड र वर्माको वौद्ध इतिहास र संस्कृति मात्र सच्चा बौद्ध धर्म हो भन्ने उनीहरूले ठानेका हुन्? गुरु रिन्पोछेप्रति कुनै उपयुक्त कारणविना नै त्यसरी 'जादुगर' भनेर उपहास गर्नु हाम्रो संस्कृतिप्रति गरिएको 'मानहानि' हुन जान्छ। मलाई विश्वास छ कि भविष्यमा आफ्नै अनभिज्ञता प्रदर्शन गर्ने खालका मोघपुरुषको शैलीमा व्यवहार कसैले गर्ने छैनन्। सम्यक् दृष्टिको परिशोधन गर्ने सिलसिलामा खण्डनमण्डन हुनु बेग्लै कुरा हो।

तिब्वतमा वौद्ध धर्मको स्थापनाका निमित्त गुरु पद्मसम्भवले अभिज्ञा, ऋद्धि, सिद्धि, प्रातिहार्यजस्ता कुराहरूलाई उपयोगमा ल्याएको कारणले उहाँ जादुगर हुनुभयो भने त्यही युक्तिले शास्ता स्वयंलाई, मौदगल्यायनलाई (जसको मृत्यु पनि धेरैलाई आफ्नो ऋद्धिबलद्वारा बौद्ध धर्ममा ल्याउनाको कारणले

भएको थियो), सारिपुत्र, पिण्डोल भारद्वाज, अनिरुद्ध, सागत र भारत एवं श्रीलंकाका पछाडिका ऋद्धि प्रदर्शन गरेका हजारौं अर्हत्‌हरूलाई पनि जादुगर बनाउन पुग्छ । तीनीहरूले यस्तो भन्न खोजेका हुन् कि यदि थेरवादीहरूले ऋद्धि प्रदर्शन गरे भने त्यो स्वतः बौद्ध धर्म हुन्छ र महायानीहरूले प्रदर्शन गर्नासाथ त्यो स्वतः नै अबौद्ध जादु हुन्छ !

महायानीहरूले शील पालन गर्दैनन् भन्ने प्रश्नतिर जाऔं । यो केही थेरवादी भिक्षु र उनीहरूका अनुयायीले कल्पना गरेको पूर्णरूपमा मिथ्या कल्पना मात्र हो । यो कल्पनालाई नेपालीहरूका र तथाकथित केही विद्वान्‌हरूका दुईचारओटा गलत बुझाइहरूले अझ आड दिएका छन् ।

उनीहरूको सोचाइमा लामा भनेको एउटा भिक्षु हो भन्ने हुन्छ र लामाले विवाह गरेको देख्नेबित्तिकै उनीहरू कराइहाल्छन् कि "शील छैन" । 'लामा' भनेको भिक्षु भनेको होइन । 'लामा' को अर्थ 'गुरु' हो र गृहस्थ उपासक पनि हुन सक्छ । बुद्धका गृहस्थ उपासक उपासिकाहरू पनि चेलाचेली थिए र अझै उनीहरूका समेत पनि ५०० सम्म अनुयायी हुन्थे भन्ने कुरा पाली निकायमा पाइन्छ जस्तैः- (१) विसाखा, (२) अनाथपिण्डिक, (३) चूल, (४) उग्र, (५) चित्त, (६) हस्तालवक र (७) धर्मदत्त । तिब्बती भाषामा भिक्षुलाई 'घेलोङ' भनिन्छ न कि लामा । यो पुस्तकका लेखक साक्या पण्डित पनि पूर्ण उपसम्पदा प्राप्त भिक्षु हुनुहुन्थ्यो ।

धेरैजसो नेपालीहरूले सोच्दछन् कि कलेजी रंगको त्यो चीवर (कपडा) लगाउने वित्तिकै सबै भिक्षु नै हुनुपर्छ । वास्तवमा महायानमा उपासकहरूले पनि त्रिरत्नको प्रेमको प्रतीकस्वरूप कलेजी रंगको वस्त्र लगाउने चलन छ । साँच्चिकै भिक्षुहरूले जोडेर सिलाएको चीवर लगाएका हुन्छन् भने उपासकहरूले सग्लो वस्त्र नै लगाएका हुन्छन् । धेरैजसो नेपाली र केही (आलोचक) भन्तेहरूले समेत पनि यही फरक छुट्याउन सजिलोसँग सकेका छैनन् र यो कुराको ख्यालसमेत छैन । त्यसकारण धेरैजसो नेपालीहरूले 'लामा' भन्ने व्यक्तिलाई

देख्नासाथ उसले पहिरेको रातो रंगको चीवरले गर्दा ऊ भिक्षु हो भन्ने ठान्न पुग्छन् । उसको श्रीमती छ भन्ने थाहा पाउनेर्वित्तिकै 'शील छैन' भनेर चिल्लाउँछन् । मूलसर्वास्तिवादी विनय अनुसार उपासक गृहस्थ लामा (गुरु)हरूले पनि नसिलाइएको वस्त्र पहिरिँदा केही आपत्ति नहुने भएकोले उनीहरूले लगाउन गरेका हुन्छन् । मेरा आफ्नै मूल गुरु परमपूज्य श्री चोव्ये ठ्रीचेन् रिन्पोछे पनि लामा हुनुहुन्छ र उहाँ पूर्ण उपसम्पदाप्राप्त भिक्षु हुनुहुन्छ र जीवनभर आफ्नो संवरलाई राम्रोसँग पालन गरिराख्नुभएको छ । जब कि मेरा अर्को मूल गुरु परमपूज्य उग्र्येन रिन्पोछे गृहस्थ उपासक हुनुहुन्थ्यो र उहाँले नसिलाइएको रातो वस्त्र लगाउनु हुन्थ्यो ।

नेपालीहरूले लामामा शील हुँदैन भन्ने अर्को कारण के हो भने केही जातीय लामाहरूले जाँड रक्सी पनि प्रशस्त खाने र फेरि आफ्नो जात नै त्यही हो भने जसरी 'लामा' कहलाइने गर्छन् । त्यसले भ्रममा पारेको छ । यस्ता लामाहरू केही प्रसिद्ध सच्चा लामाहरूका सन्तान त हुन् परन्तु स्वयं चाहिं त्यस्ता सच्चा लामा (या गुरु) भने होइनन् । उनीहरूलाई सच्चा शीलमा रहने भिक्षु लामाहरूसँग मिसमास गरेर भ्रममा पर्नु हुँदैन ।

यो उपोद्घातको अन्त्य गर्नुभन्दा अगाडि केही प्रश्नको विषयमा कुरा गर्न चाहन्छु । महायानका बुद्धवचनका व्याख्या र तात्पर्यहरू एवं यो पुस्तकमा र थेरवादमा दिइने बुद्धवचनका व्याख्या एवं तात्पर्यमा केही भिन्नताहरू छन् त ? छन् । बुद्धका शब्द त थेरवाद र महायानमा पनि उस्तै छन् तर पनि ती शब्द र शिक्षाहरूलाई दिइएको अर्थचाहिं कहिलेकाहीं फरक परेको छ भने सामान्यतया अधिकांश दुवैमा उस्तै नै छ । यद्यपि थेरवादको अनुसरण गर्नेहरूले बारम्बार अरूमा आफ्नै व्याख्या र तात्पर्यहरू मात्र सच्चा मूलभूत हुन् भन्ने विचार अरूमा लाद्न खोजिरहन्छन् तापनि त्यसको कुनै पनि ऐतिहासिक ठोस आधार छैन । थेरवादीय व्याख्याको अधिकांश भाग त भदन्त बुद्धघोष र उहाँपछि मात्र लेखिएको हो जुन लगभग ५०० / ६०० ई.मा हो ।

उहाँले दाबी गर्नुभएको छ कि आफ्ना अट्टकथाहरू (अर्थकथाहरू) सबै श्रीलंकाको पुरानो परम्परामा आधारित भएर लेखिएको हो। यो पक्कै पनि ठीक हो। परन्तु बुद्ध वचनको महायानी व्याख्या त त्योभन्दा धेरै अगाडि सन् १०० मा नागार्जुनले गरिसकेका थिए र उनले पनि दाबी गरेका छन् कि त्यो पनि आफ्ना पहिलेका परम्पराहरूको व्याख्याका आधारमै गरिएको हो। त्योभन्दा अगाडि त साँच्चिकै निर्णय गर्न सकिने खालको प्रमाण अहिलेसम्म केही निस्केको छैन।

परन्तु प्रश्न छ, किन यी भिन्दै व्याख्या प्रणालीहरू उदाए त ? यहाँ फेरि यो पनि बिर्सनु हुँदैन कि भिन्नता भनेको केवल व्याख्या प्रणाली (hermeneutics) मा मात्र हो न कि बुद्धवचन स्वयंमा। मूलसर्वास्तिवादीहरूका संस्कृतभाषामा आगमहरू छन् जो पाली निकायका संस्कृत भाषाका रूप हुन्। जस्तै दीर्घागम पाली दीघनिकायको रूप हो। त्यस्तै मज्झिम निकायको बदला 'मध्यमागम' छ, अङ्गुत्तर निकायको ठाउँमा 'एकोत्तरागम' छ संयुत्त निकायको स्थानमा संयुक्तागम छ, खुद्दक निकायको क्षुद्रकागम छ इत्यादि। यिनीहरूलाई तिब्बती लामाहरूले ठाउँठाउँमा उद्धरण गरेको पाइन्छ। नागार्जुनले पहिलेको व्याख्या प्रणालीमै आधारित भएर यस्तै आगमहरूको व्याख्या गरेका थिए जुनचाहिं थेरवादीहरूले गरेको पाली निकायको व्याख्या भन्दाभिन्दै थियो। यसरी नागार्जुनले आफैंले नयाँ व्याख्या दिएको नभएर पुरानो व्याख्यालाई आधार मान्दै ती आगमहरूको व्याख्या गरेका हुन्।

त्यही भएर श्रीलंकाका एक प्रसिद्ध थेरवादी विद्वान् भिक्षु वाल्पोल राहुलले आफ्नो "Zen and the Taming of the Bull" भन्ने पुस्तकमा भनेका छन् कि "नागार्जुनले सन् १०० मा र असङ्ग एवं वसुबन्धुले सन् ४०० मा आफ्नै नयाँ दर्शन खडा गरेका होइनन् अपितु बुद्धवचनलाई नै पुनर्व्याख्या गरेका मात्र हुन्।" त्यही कारणले भदन्त आनन्द कौसल्यायनले पनि आफ्नो 'दर्शन' भन्ने पुस्तकमा भनेका छन् कि "केवल अनभिज्ञजनहरूले मात्र थेरवाद र महायान परस्पर विरोधी छन्

भन्दछन्। वास्तवमा बौद्धधर्मरूपी रथका यी दुई पाङ्ग्राहरू हुन्। थेरवाद नबुझिकन महायान बुझिंदैन र महायान नबुझिकन थेरवाद बुझिंदैन।" भदन्त आनन्द कौसल्यायनको यो वाक्यको विषयमै लेख्ने हो भने पनि ठूलै ग्रन्थ तयार हुन सक्छ परन्तु अहिले म यति मात्र भन्दछु कि हेवज्र तन्त्रले पनि सालाखाला यही अवधारणालाई सहमति जनाएको छ।

प्रश्न अझै छ, दुईथरी व्याख्याहरू किन त ? पाली निकाय र संस्कृत आगम दुवैबाट स्पष्ट थाहा हुन्छ कि, बौद्धधर्ममा तीन यानहरू थिए र हुन्छन् पनि। (१) श्रावकयान जसमा अर्हत्व प्राप्त गर्ने लक्ष्य हुन्छ। (२) प्रत्येकवुद्धयान जसको लक्ष्य प्रत्येकवुद्धता हासिल गर्ने भन्ने हुन्छ। (३) वोधिसत्वयान जसको लक्ष्य सम्यक् सम्वुद्धत्व लाभ गर्ने भन्ने हुन्छ। यद्यपि थेरवादीहरूले दाबी गर्ने गरेको पाइन्छ कि उनीहरूको पनि बोधिसत्व मार्ग छ तापनि थेरवाद भनेको मूलतः श्रावकयानकै विधि हो। पाली त्रिपिटकमा वोधिसत्वयानको वारेमा धेरै नै कम मात्र उल्लेख पाइन्छ। केही थेरवादी विद्वान् जस्तै भदन्त महाथेर नारद एवं अरूले पनि 'जातक' र चरियापिटकका टुक्राटाक्री विचारहरू जम्मा गरेर थेरवादीय 'वोधिसत्वयान' बनाउने प्रयत्न गर्नुभएको छ। परन्तु यत्रतत्रबाट दुईचार टुक्राटाक्री विचारहरू एकत्र पार्दैमा पूर्ण मार्ग त वन्दैन। भदन्त नारद महाथेरले आफ्नो "The Buddha and His Teachings" मा महायानको परात्मसमता र परात्मपरिवर्तनको अवधारणालाई वोधिसत्वको अभ्यासको भागमा पर्छ भनेर समेत उल्लेख गर्नुभएको छ। यो अवधारणा पाली निकायमा पाइँदैन। त्यही भएर उहाँलाई संस्कृत शब्दै राख्नु परेको छ, परन्तु महायानलाई फेरि श्रेयः दिनुभएको छैन। त्यस्तै चर्यापीटकका अर्थकथाकार आचार्य धर्मपाल (६००० A. D.) ले त्यसको व्याख्या गर्दाखेरि पनि "कसरी अभ्यास गरिन्छन् ?" भन्ने प्रश्नको उत्तरमा आचार्य असङ्गको बोधिसत्वभूमि (योगाचारभूमिको १५ औं अध्याय) बाटै केही धारणाहरूलाई थेरवादीकरण गरी ग्रहण

गर्नुभएको छ र यो कुरालाई स्वयं थेरवादी विद्वान् लेखक 'भिक्खु बोधि' ले पनि स्वीकार्नुभएको छ ।

मैले भनिहालें कि जातक र चरियापिटक आदिबाट एक दुई टुक्राटाक्री जम्मा गर्दैमा पूर्ण बोधिसत्वयान बनेको मान्न सकिंदैन । फेरि अर्को कुरा के पनि मिल्दैन भने थेरवाद परम्परामा श्रावकयानको मार्गलाई पूर्णरूपमा विस्तृत हिसाबले केलाएको पाइन्छ परन्तु बोधिसत्वयानको चाहिँ केवल पारमी पूरा गरेमा भइहाल्छ भनेर मात्र छोडिएको छ ॥ जबकि बोधिसत्वयान झन् लामो, झन् समृद्ध र झन् उच्च लक्ष्यसम्म पुग्ने खालको भए पछि त त्यसको विवरण पनि स्वाभाविक रूपमै झन् विस्तृत जटिल र धेरै हुनुपर्ने होइन र ? यो त गणेश हिमाल चढ्नलाई ३७ बोधिपक्ष, सत्त-विशुद्धि जस्ता कुराहरूले युक्त जटिल तरिका चाहिन्छ भने सगरमाथाको शिखरमा पुग्न ६ या १० पारमिता पूरा गरे भइहाल्छ भन्नु जस्तै भएन ? त्यसकारण थेरवाद भनेको श्रावकयान हो र त्यहाँ बोधिसत्वको बारेमा केही कुरा मात्र उल्लेख छ ।

बोधिसत्वयानको पूरा विस्तार कहाँ पाइन्छ त ? जब कि अर्हत् हुने मार्गको पूरा विस्तारमा चर्चा श्रावक पिटकहरूमा पाइन्छ । हो, यही नै महायानलाई बुझ्ने मूल प्रश्न हो । महायानले कहिल्यै पनि यो दाबी गरेन कि यसमा कसरी श्रावक अर्हत् बन्ने भन्ने कुरा सिकाइएको छ । अर्थात् श्रावक अर्हत् हुने मार्गको बारेमा विस्तारपूर्वक व्याख्या गरिएको छ भनेको छैन । महायानले सधैं यो बोधिसत्वयान हो भनेर दाबी गरेको छ । बुद्धवचनको यसको अभिप्राय; बुद्धवचनको यसले गरेको पुनर्व्याख्या र यसका आफ्नै पिटकहरूले बोधिसत्वको विशाल मार्गको बारेमा विस्तारमा बयान गर्दछन् । महायानले सधैं यो स्वीकारेको छ कि श्रावक पिटकहरू र श्रावकीय व्याख्या प्रणालीहरू श्रावकयानको हिसाबले ठीकै छन । महायानले त्यसरी टुक्राटाक्री जम्मा पारेर हाम्रो पनि श्रावकयान छ भनेर दाबी गरेको छैन । न त महायानीले त्यस्तो भ्रम पार्दै कतै हिंडेको भेटिन्छ । बरु केही श्रावकयानी अर्थात् थेरवादीहरूले

(श्रावकयान या थेरवादले होइन) सधैं नै महायानको पद्धति, व्याख्या प्रणाली र पिटकलाई नै बौद्धेतर या विकृत हो भनेर देखाइरहने कुचेष्टा गरी स्वयं शाक्यमुनि बुद्धका तथागतत्व, सुगतत्व, सम्यक्सम्बुद्धत्व, देव र मनुष्य दुवैको शास्तृत्व, लोकवेत्तृत्व, अनुत्तरत्व, पुरुषदम्यसारथित्व, जस्ता गुणहरूलाई अवमूल्यन गर्दै हिँडेको कुरा चाहिँ सर्वविदितै छ। किन कि एक श्रावक अर्हतमा यी सबै विशिष्ट गुणहरू हुँदैनन् ।

सङ्घनायक अग्रमहापण्डित भिक्षु प्रज्ञानन्द महास्थविरको जीवनीमा श्री आर. बी. वन्द्यज्यूले लेख्नुभएको रहेछ कि - महास्थविरले मध्यतिब्वतका श्मशानहरूमा केही अशुभभावनाहरू गर्नुभएको थियो परन्तु यसबाट उहाँको खोजीमा सन्तुष्टि नभएकोले उहाँ बर्मा जानुभएको हो... इत्यादि । यस्तो खालको भनाई भिक्षु महाप्रज्ञाज्यूको जीवनीका सम्बन्धमा पनि पाइन्छ। थेरवादीहरूले यसरी लेख्नुभएका लेखहरूमा तात्पर्यार्थ के निस्किन्छ भने तिब्वतमा विपश्यना खालका ध्यानविधिहरू थिएनन् र बर्मामा मात्र रहेछन् भने जस्तो हुन्छ। यस्तो किसिमको पूर्ण रूपमा गलत प्रभाव पार्ने लेखाई तिब्बतको बौद्धधर्मको विषयमा पूर्ण जानकारी नहुनाले गर्दा भएको हो। बौद्धधर्मका धेरै पहिले स्वयं शास्ताका पालादेखि नै दुई किसिमका प्रमुख परम्पराहरू हुन्थे (१) विदर्शणाधूरको (२) ग्रन्थधूरको। यस्ता दुई किसिमका परम्पराहरू केवल तिब्बती बौद्धधर्ममा मात्र नभएर थेरवाद बौद्धधर्ममा पनि छन्। महास्थविर प्रज्ञानन्द, पं. राहुल सांकृत्यायन आदि बसेको ल्हासा, मध्यतिब्वत भनेका गेलुक्पा परम्पराहरूले बढी प्रभाव पारेका क्षेत्र हुन्, तिब्वतमा यो परम्परालाई ग्रन्थधूरहरूको परम्परा मानिन्छ र विदर्शणाधूरको मानिन्न। उनीहरूको विशेषता नै भावनाभन्दा सूत्र र शास्त्रहरूको अध्ययन र अध्यापनमा हुन्छ। महास्थविर स्वयंले पनि एक गेलुग रिन्पोछे ('फोरङ्गा' होइन 'पाबोङ्का' रिन्पोछे हो) बाट उपसम्पदा प्राप्त गर्नुभएको थियो । यदि उहाँहरू खाम् साक्या जस्ता ठाउँहरूमा जानुभएको भए तिब्बती बौद्धधर्मका

विदर्शणाधूरहरूलाई पनि भेटनु हुने थियो जुन साक्यापा, निङ्मापा, काग्युपा परम्पराहरूमा भेटिन्छन्। महापंडित राहुल सांकृत्यायन त 'साक्या' मा जानुभएको पनि हो परन्तु त्यहां उहांले अध्ययन गर्ने काम गर्नु भएन, केवल ग्रन्थ सङ्कलनतिर मात्र ध्यान दिनुभयो। त्यसकारण उहांहरूले महामुद्रा (छाग्या छेन्पो), महासन्धि (झोक्छेन्) मार्गफलम् (लाम्ड्रे) जस्ता उपदेशहरूको नामसमेत सुन्नु भएन जव कि यी सबै विशेपगरी प्रभास्वर चित्त र सामान्यतया देवानुस्मृति, विज्ञानकसिण आदिलाई प्रयोग गरिएका विभिन्न प्रकारका शमथ र विपश्यनाका पद्धतिहरू हुन् जसको वारेमा अङ्गुत्तर निकायमा, दीघनिकायमा उल्लेख त छ परन्तु थेरवादीय परम्परामा हराइसकेको छ र आगम टुटिसकेको जस्तो देखिन्छ।

जसरी थाइल्याण्ड, वर्मा, श्रीलंका आदिका धेरै भिक्षुहरूले सांच्चिकै विपश्यना कसरी गर्ने भन्ने जानेका हुँदैनन् त्यसरी नै तिब्वतका धेरै घेलोङ्हरूले पनि विपश्यना कसरी गर्ने, भावना कसरी गर्ने भन्ने जानेका हुँदैनन् र अध्ययन एवं दानपतिको घरमा गएर पूजा गर्न मात्र जानेका हुन्छन्।

“The manuals of Buddhism" मा अग्गमहापण्डित डा. लेदी सयादो “Do you believe in Re-birth" मा के. श्री धम्मानन्दले र “The Buddha and His Teachings" मा नारद महास्थविर आदिले लेख्नुभएको छ कि तिव्वती वौद्ध धर्ममा र अन्य महायान निकायमा पाइने अन्तराभव (ति. वार्दो) को अवधारणा वौद्ध अवधारणा होइन। यदि केवल थेरवाद मात्र बौद्ध धर्म हो र त्यसका पाली त्रिपिटक मात्र वौद्ध त्रिपिटक हुन्, अरू कुनै पनि होइनन् भने त त्यो कुरा ठीक हुन पनि सक्छ। परन्तु समस्या त के छ भने १८ निकायहरूका धेरैले यो अन्तराभवको अवधारणालाई स्वीकार्दथे र यी अठारै निकायहरूको पनि आ-आफ्नो त्रिपिटक थियो र उनीहरूको दावी थियो कि थेरवाद जतिकै पुरानो र सच्चा वौद्ध धर्म उनीहरूको पनि हो। यो पनि बुझिराख्नु पर्छ कि प्रो.पी.बी. बापटका अनुसार- स्थविरवादवाट मूलसर्वास्तिवाद र

विभज्यवाद सँगै छुट्टिएका हुन् र ती दुवै उत्तिकै पुराना हुन् र आजको थेरवाद त्यही विभज्यवादबाट उत्पन्न भएको एक रूप हो। त्यसमा पनि जेतवनीय, महाविहारवासिन र अभयगिरिवसिन्मध्ये अभयगिरिवासिन् आदिका पीटकहरूलाई जलाई महाविहारवासिन्को व्याख्या प्रणाली लाई मान्य बनाएपछिको रूप यो थेरवाद हो। मूल सर्वास्तिवादका त्रिपिटक आगम आदिमा अन्तराभवलाई पूर्ण मान्यता दिइएको छ। त्यसकारण माथिका लेखकहरूले दिन खोजेको तात्पर्यजस्तो तिब्बतीहरूको सिर्जना यो होइन। ४०० ई. मा वसुवन्धुले समेत आफ्नो अभिधर्मकोषमा अन्तराभवको अवधारणालाई स्वीकार्नुभएको छ जुन उहाँले पहिलेको महाविभाषाकै आधारमा लेख्नुभएको थियो। उहाँले थेरवाद जस्ता निकायहरूको अन्तराभव नमान्ने युक्तिलाई सूत्रहरूको प्रमाण दिँदै खण्डन पनि गर्नुभएको छ। मैले ती सबै तर्कहरू त यहाँ उल्लेख गर्दिन परन्तु पाली सुत्तहरूमै पाइने दुईटा बुँदाको मात्र उल्लेख गर्न चाहन्छु।

अङ्गुत्तर निकाय (एकोत्तरागम)मा बताइएको छ कि पाँच प्रकारका अनागामीहरू हुन्छन् र तीमध्ये एक थरी 'अन्तरापरिनिर्वायी' हुन्। शुद्धावास आदि ब्रह्मलोकमा जन्मेर अर्हत् हुने अनागामीहरूको बेग्लै वर्गमा उल्लेख गरिसकेको हुनाले अन्तरापरिनिर्वायी अनागामीहरूलाई पनि त्यही वर्गमा गन्नु थेरवादीहरूको युक्तियुक्त भनाइ देखिँदैन। वरु मूलसर्वास्तिवादको व्याख्या युक्तियुक्त देखिन्छ जसमा अन्तराभवमा परिनिर्वाण हुने अनागामी भनेर मानिएको छ। याद होस् कि मूलसर्वास्तिवाद पनि श्रावक निकाय नै हो, महायान होइन। फेरि 'अभिधर्मकोष' र 'अभिधम्मत्थसंगहो' मा स्रोतापन्न, सकृदागामी र अर्हत्को बारेमा बयान गर्दा तिनीहरूको वर्गीकरण राम्रोसँग गरिएको छ र हुबहु मिल्छ पनि: परन्तु अनागामीको वर्गीकरण भने स्वयं पालीको अंगुत्तर निकायमा दिइएको छ तापनि अनुरुद्धाचरियले दिनुभएको छैन भने आचार्य बसुबन्धुले दिनुभएको छ किन होला ! विचारणीय छ।

दोस्रो, मज्झिम निकायमा महातण्हासंखयसुत्तमा र अंगुत्तर निकायको तिक निपातमा पनि उल्लेख छ कि जन्म हुनको लागि तीन कुरा चाहिन्छन् ऋतुमती माता, पिता र प्रत्युपस्थित गन्धर्व। यहाँ गन्धर्व भनेको गन्धर्व देवपुत्रहरू होइनन् किनकि प्रत्येक व्यक्ति मरेर गन्धर्वलोक गएर मात्र पुनः जन्म लिने त होइन। त्यसो भए यो गन्धर्व भनेको के हो ? कुन लोकमा र कहाँ छ यो गन्धर्व ? च्युतिचित्तमा पुगेको सत्वलाई गन्धर्व भन्न मिल्दैन किनकि च्युतिक्षणसम्म त्यो मनुष्य आदि जुन भवको हो त्यही भवको नै हुन्छ। प्रतिसन्धि चित्तचाहिं नयाँ भवको चित्त हो जुन प्रत्युपस्थित गन्धर्व हुन सक्दैन। प्रतिसन्धि हुनको लागि प्रत्युपस्थित (पचुपट्ठित) याने माता पिताको नजिक उपस्थित गन्धर्व के हो त ? यो याद गर्नुपर्छ कि च्युतिचित्त त मातापिताको नजिक उपस्थित हुँदैन। प्रतिसन्धान भएको चित्तलाई त प्रत्युपस्थित चित्त भन्न मिल्दैन। फेरि भगवान्को वचन व्यर्थ हुँदैन। त्यसैले यदि थेरवादी व्याख्या प्रणाली अनुसारको च्युति र प्रतिसन्धि मात्र भैदिएको भए यो 'गन्धर्व' को उल्लेख उहाँले किन गर्नुभयो त ! बुद्धघोषको अट्ठकथामा पनि यसरी कुरो चपाउन खोजिएको छ "गन्धब्बोति तत्रूपगसत्तो। पच्चुपट्ठितो होतीति न मातापितूनं सन्निपातं ओलोकयमानो समीपे ठितो पचुपट्ठितो नाम होति।" परन्तु त्यहीं फेरि "कम्मयन्तयन्तितो पन एको सत्तो तस्मिं ओकासे निब्बत्तनको होति " भन्न बाध्य भई उम्किन नसकेर फस्न पुगेको देखिन्छ। मिलिन्दपञ्हको मेण्डकपञ्हमा इद्धिवलवग्गोभित्र गब्भावस्संकन्ति प्रश्नमा पनि देवपुत्रले मानव तपस्वी-तपस्विनीकहाँ जन्मलिने वेलामा तपस्विनी ऋतुमती भएको वेला त्यहाँ उपस्थित भई प्रतिसन्धि ग्रहण गरेको कुरा उल्लेख छ। ( देवपुत्तो च तत्थुपगतो पचुपट्ठितो अहोसि) यहाँ देवपुत्र देवलोकबाट च्युत भएर मात्र त्यहाँ प्रतिसन्धि ग्रहण गर्न आएका हुन किन कि जहाँ प्रतिसन्धि हुन्छ त्यहीँ नै च्युति हुनुपर्छ, अर्को भवमा च्युति हुँदैन। जस्तै मान्धाता जातक-न्यायले यो जनाउँछ। त्यसकारण त्यहाँ आएर च्युति हुने सम्भावना छैन।

अतः पहिले नै देवलोकमै च्युत भएर मात्र त्यहां प्रत्युपस्थित हुने कुरा सिद्ध हुन्छ र सर्वास्तिवाद आदि र महायान, वज्रयानमा यही अवस्थाको सत्वलाई नै गन्धर्व भनिएको छ जुन अन्तराभवकै सत्व हो। कुनै दुई लोकको बीचको समयान्तरालमा हुने अवस्थाबाहेक यसको अर्को कुनै व्याख्या हुन सक्ने देखिदैन। यसले च्युति चित्तक्षणपछि प्रतिसन्धि चित्तक्षण आउँछ भन्ने सिद्धान्तमा कुनै विरोध पनि हुँदैन किन कि गन्धव्व या अन्तराभव पनि एक प्रकारको जन्म या प्रतिसन्धि भएको हुनाले च्युति चित्तक्षणपछि यो अवस्था आउँछ। यशोमित्रले (सन् ७००) लेख्नुभएको छ कि जुन निकायहरूमा अन्तराभवको कुरा छैन त्यहां शताव्दीयौं पछि आउँदाखेरि त्यसका शिक्षाहरू टुटेको हुनुपर्छ। मलाई दुःख लाग्छ कि; आफ्नो निकायको बौद्ध धर्मको जति गहिरिएर उपर्युक्त विद्वान् पण्डितहरूले अध्ययन गर्नुभयो त्यति गहिरिएर अन्य निकायको बौद्ध धर्मको अध्ययन गर्नुभएको रहेनछ। बरु उहाँहरूले पाली त्रिपिटकको व्याख्या प्रणालीमा यस्तो अवधारणा पाइँदैन भन्नुभएको भए बढी मिल्दो हुन्थ्यो होला।

अग्रमहापण्डित डा. लेदी सयादोद्वारा विरचित The manuals of Buddhism को 'आलिन् क्यान्' अर्थात् 'पञ्चआलोक' को अनुवाद आर् वि. वन्द्यज्यूले गर्नुभएको रहेछ। त्यसमा, पृष्ठ ४७० को प्रश्न नं. ३ को अनुवादमा उहाँले पञ्चआलोक भित्र १०७ पृष्ठमा लेदी सयादोले लेख्दै नलेखेको प्रश्न र त्यसको उत्तर पनि थपेर लेदीसयादोको प्रतिष्ठालाई घटाउनुभएको रहेछ। त्यो प्रश्न हो– "आलय विञ्ञाण (आलय विज्ञान) भनेको केही समाउने भएमा मात्र उत्पन्न हुने हो कि अथवा त्यसरी समाउने केही नभएमा पनि आफै आफ उत्पन्न हुने हो ?" त्यसको उत्तरमा उहाँले थप्नुभएको छ "समाउने भएमा यस जन्मबाट छुटने र समाउने केही नभएमा बीचमा केही अन्तराभवसत्वको रूपमा आफै आफ उत्पन्न हुने भन्ने कुरा साँचो होइन.... इत्यादि।"

यसमा, सर्वप्रथम त अन्तराभव हुनु र नहुनुसग आलयविज्ञानको सम्बन्ध छैन र अन्तराभव पनि षड्गति जस्तै आलम्बन नै हो जुन अन्य बौद्ध निकायहरूले पनि मानेका छन् । मूल सर्वास्तिवादको सप्तभव सूत्र (विभाषा ६०.५) मा अन्तराभवलाई पनि, शास्ताले एउटा अलग्गै भवको रूपमा लिएको स्पष्टै भेटिन्छ । मूल सर्वास्तिवादी पिटकमा पनि अन्तराभव मानिन्छ तापनि आलयविज्ञानलाई मानिँदैन र केवल षड्विज्ञान मात्र मानिन्छ । त्यस्तै माध्यमिक महायानीहरूले पनि त्यस्तै मान्छन् । दोस्रो, आलयविज्ञान भनेको स्थिर, अपरिवर्तनशील आत्मा जस्तो वस्तु पनि होइन र त्यो पनि क्षणक्षणमै उदयव्यय भैरहेको सन्ततिप्रवाह नै हो । आचार्य वसुबन्धुको 'त्रिंशिका विज्ञप्तिमात्रतासिद्धिः' मा भनिएको छ "तच्च वर्तते स्रोतसौघवत्" अर्थात् 'त्यो पनि स्रोतको पानी झैं प्रवृत्त भइरहेको हुन्छ ।' थेरवादमा भवाङ्गले जे काम गर्छ यसले पनि त्यही काम गर्छ । फरक यत्ति हो कि भवाङ्ग उच्छेद भएर प्रवृत्तिविज्ञान वीथिहरू उत्पन्न हुन्छन् भने यसको त्यसरी उच्छेद नभएर निरन्तर प्रवाह चलिरहन्छ, र अन्तमा सोपधिशेष निर्वाण लाभ गर्दा या महायानको आठौं भूमिमा प्रवेश गरेपछि मात्र उच्छेद अर्थात् निरोध हुन्छ । अतः यो आत्मा जस्तो नित्य पनि होइन, कूटस्थ पनि होइन । तिब्बती गुरु चोङ्खापाले आफ्नो 'आलयविज्ञानक्लिष्ट-मनोविज्ञानकारिका'मा भन्नुभएको छ कि- "आलयः समुदीरितः । हीनयानेऽपि शास्त्रेष्वासंसारस्कन्धमालयः ॥ भवाङ्गं मूलविज्ञानं पर्यायैर्विविधैरिति ।" (अनुवाद - थुप्तेन छोग् ड्डप् शास्त्री तथा प्रो. रामशंकर त्रिपाठी) अर्थात् श्रावकयानमा पनि शास्त्रहरूमा सांसारिक रूप स्कन्धहरू रहुन्जेलसम्म रहने यो आलयलाई भवाङ्ग, मूलविज्ञानजस्ता विभिन्न पर्यायबाट बताइएको छ ।

तर यो आलयविज्ञान हुनु र नहुनुको अन्तराभव हुनु र नहुनुसँग केही पनि सम्बन्ध छैन तापनि आर.वि.वन्द्यज्यूले किन लेदी सयादोले नलेखेको हुँदाहुँदै पनि कुनै सन्दर्भै नहुने गरी अनुवादमै समावेश गर्नुभएको होला ! विचारणीय छ ।

अर्को कुरा त्यही प्रश्नकै उत्तरमा अलि तल (पृ. १०९) मा "अन्तराभवसम्बन्धी यी विश्वासहरू झूठा हुन् भनी यस्ता दृष्टिहरूलाई त्रिपिटकादि ग्रन्थमा अस्वीकार गरिएका छन्" भन्ने लेखिएको छ। कुन चाहिँ त्रिपिटकको ग्रन्थमा (पछिका व्याख्यामा होइन) अन्तराभव सम्बन्धी यी विश्वासहरू झूटा हुन्" भन्ने लेखिएको होला हेर्न पाए हुन्थ्यो। त्यहीं अलिकति तल अन्तराभवको खण्डन गर्नको लागि एउटा युक्ति पनि दिइएको छ। "संसारमा एक जन्मबाट अर्को जन्ममा आउने जाने, सङ्क्रमण हुने भन्ने कुरा लोकव्यवहारमा मात्र हो। यस्तो कुरा धर्मको कुरो होइन, धातुको कुरा होइन।" त्यसो भन्ने हो भने त केही पनि सम्भव छैन। धर्मको कुरा भन्नु र अर्कोले सुन्नु पनि व्यवहार मात्र हो धर्मको कुरा होइन। च्युति पनि छैन, प्रतिसन्धि पनि छैन, व्यवहार मात्र हो। हामी कर्मका बन्धनमा पनि छैनौं। अब केही चाहिएन। किन अन्तराभवको खण्डन पनि चाहियो र ? त्यो युक्तिलाई नै मान्ने हो भने त अन्तराभव मात्र असिद्ध हुने होइन अग्रमहापण्डितज्यूले राम्रोसँग मानिराख्नुभएको च्युति-प्रतिसन्धि पनि सिद्ध हुँदैन, षड्गतिमा मात्र आवागमन हुन्छ भन्ने त कता कता। यसरी आफ्नै घुँडामा बञ्चरो पर्ने गरी नेयार्थको चर्चाभित्र नीतार्थ हाल्न पुगेर महापण्डितज्यूले आफ्नो लेखको महत्तालाई नै अन्तमा फिका पार्न पुग्नुभएको छ। नीतार्थबाट हेर्ने हो भने त अन्तराभव पनि त्यस्तै हो भन्ने त अन्तराभववादीहरूले स्वयं नै भनिराखेका छन्। व्यवहारमा त अन्तराभव पनि सन्ततिकै रूपमा चल्ने हो र एउटै आत्मा जस्तो नित्य वस्तु सर्ने भन्ने होइन। आचार्य वसुबन्धुले अभिधर्मकोषमा स्वयं भन्नुभएको छ कि–

**"नात्मास्ति स्कन्धमात्रं तु क्लेशकर्माभिसंस्कृतम्**
**अन्तराभवसन्तत्या कुक्षिमेति प्रदीपवत् ॥"**

अर्थात "आत्मा भन्ने कुरा केही छैन, केवल यिनै क्लेश र कर्मद्वारा अभिसंस्कृत भएको स्कन्धमात्र हो र त्यो पनि अन्तराभवको सन्तानद्वारा प्रदीप (बत्ती) जस्तै गरी कोखमा पुग्ने

हो।" यसैबाट स्पष्ट हुन्छ कि अन्तराभव भनेको कुनै अबौद्ध धारणा होइन।

यहाँ केही थेरवादीहरूले शास्तालाई विभज्यवादी भनेको पनि पाइन्छ। प्रो. लालमणि जोशीले आफ्नो ग्रन्थ (Discerning The Buddha) मा बुद्धलाई थेरवादी भन्नु त ऐतिहासिक रूपमा हास्यास्पद हुन्छ भन्ने कुरा उल्लेख गर्नुभएको छ। त्यसकारण बुद्धलाई न विभज्यवादी भन्न मिल्छ, न स्थविरवादी भन्न मिल्छ। न मूलसर्वास्तिवादी या अझै न महायानी या वज्रयानी। त्यसो भन्नु त बीउलाई नै त्यसबाट निस्केका फूलमध्ये एउटा फूल हो भन्नु सरह हो।

नेपालमा थेरवादीहरूले बितेका २०-३० वर्षदेखि थेरवाद मात्र सच्चा मूल बौद्ध धर्म हो र महायान आदि पछाडिका सिर्जनाहरू हुन् भन्ने कुरा प्रचार गर्दै आइरहेका छन्। अधिकांश यस्तो भएको माथि बताए झैं राइज डेविड्स् र १९औं शताब्दीको आङ्ल जर्मन समूह (Anglo German School of Buddhist Studies) को आधार लिनाले भएको हो। धेरै नेपाली विद्वान्हरूले पनि ऐतिहासिक तथ्य नै यही हो भन्ने सोचेको देखिन्छ। यस्ता प्रकारका थेरवादीहरू र विद्वान्हरूलाई पनि याद दिलाउन चाहन्छु कि सन् १९५० मा डा. एडवर्ड कोन्जेले (फ्रान्को बेल्जियम समूह) यस्तो धारणाको प्रमाणको लागि ऐतिहासिक एवं पुरातात्विक ठोस प्रमाण के छ भनेर प्रश्न राखिसकेका थिए। आज सन् १९९९ को अन्त्य सम्म पनि थेरवाद मात्र मूल सच्चा बौद्ध धर्म हो र महायान आदि पछाडिका सिर्जना हुन् भन्ने प्रमाणित गर्ने ठोस प्रमाण अगाडि सार्न कसैले सकेका छैनन्।

वज्रयानका ग्रन्थहरू लेखिएको भाषा पढ्न जान्दैमा वज्रयानको यथार्थ अभिप्राय सबै बुझेजस्तो गरी निर्धक्कताका साथ वज्रयानको विषयमा अन्धाधुन्ध लेख्ने र विश्लेषण गर्ने विद्वान्हरू धेरै भैसकेका छन्। **स्वयं महापण्डित राहुल सांकृत्यायनले पनि पुरातत्त्व निबन्धावलीमा त्यस्तै गर्नुभएको छ, जब कि वज्रयानको परम्परागत अध्ययन उहाँले कहीं पनि**

गर्नुभएको थिएन। त्यस्तै उहाँभन्दा एक खुड्किला अघि बढेर हाम्रै नेपाली विद्वान डा. **कुलचन्द्र कोइरालाले** पनि **'नेपालको सांस्कृतिक परम्परा र राजमुकुट' नामक पुस्तकमा** वज्रयानलाई **नकारात्मक पक्षमा खसाल्नुभएको छ।** वज्रयान भनेको अधिकांश सन्ध्याभाषामा चल्ने मार्ग हो भन्ने समेत ख्याल नगरेर उहाँहरू लगायत थुप्रै आधुनिक उपवज्रक एवं केही थेरवादीहरूले पनि यसलाई आलोचना गर्ने गरेको पाइन्छ। सन्ध्या भाषा बौद्धधर्ममा हुनै नहुने हो भने त बेग्लै कुरा हो, तर शास्ता स्वयंले नै त्यस्ता सन्ध्याभाषाहरू श्रावकनिकायमा समेत प्रयोग गर्नुभएको छ, वज्रयानको त कुरै छोडौं। सन्ध्याभाषाको नमूना यही हो-

**मातरं पितरं हन्त्वा राजानो द्वे च खत्तिये।**
**रट्ठं सानुचरं हन्त्वा अनीघो याति ब्राह्मणो॥**

(धम्मपद पकीण्णक वग्ग - २९४)

यो धम्मपदमा भेटिने श्लोक हो। यसको अर्थ पाली भाषाविज्ञ छु भन्दैमा कुनै महाविद्वान्ले पनि दिन मिल्दैन, परम्पराबाटै सुन्नुपर्छ। अन्यथा सम्पूर्ण बौद्ध धर्मको सार धूलोमा मिल्न पुग्छ। माता भनेको तृष्णा हो, पिता भनेको अहंकार हो भन्ने कुरा कसरी थाहा पाउने ? यही कुरा वज्रयानमा अधिकांश स्थानमा लागू हुन्छ। त्यसैले परम्परागत गुरुको अधीनमा अध्ययन नगर्दै वज्रयानलाई केलाउनु समेत हास्यास्पद हुन्छ। त्यही भएर यसलाई गुह्ययान भनिएको हो।

केही थेरवादीहरू र विशेष गरेर डा. बाबासाहेक आम्बेडकर प्रभावित जमातले बुद्धलाई निजीकरण गरेर केवल मानव मात्रका शास्ता भन्ने रूपमा हेर्ने र गान्धीजस्तै एक महामानव मात्र मान्ने गरेको पाइन्छ। उनीहरूको अभिप्रायमा बुद्धमा राम्रा मानवीय गुणबाहेक कुनै पनि लोकोत्तर गुणहरू भएको कुरालाई नदेखाउने या पन्छाउने प्रवृत्ति देखिन्छ। यो त स्वयं बुद्धप्रति र बुद्धताप्रति ठाडै अन्याय हुन जान्छ। उहाँ मानवको रूपमा हुनुहुन्छ त्यसैले मानव भन्दा त केही आपत्ति होइन परन्तु स्वयं उहाँले नै 'म मानव होइन, यक्ष होइन, देव

होइन आदि भन्नु भएको छ र 'बुद्धोति मां धारेहि' भन्नुभएको छ (अङ्गुत्तरनिकाय दोणसुत्त)। त्यसकारण उहाँमा भएका गुणहरूलाई कटाउने प्रवृत्ति राम्रो होइन। उहाँ देवताहरूका पनि शास्ता हुनुहुन्छ। उहाँ किन 'महादेव' नहुने त ? किन 'महायक्ष' नहुने त ? अतः बुद्धलाई साँघुरो बनाउनुभन्दा 'तथागत' या 'बुद्ध' नै भन्नु बेस होला जस्तो लाग्छ। फेरि कसैले महायानीहरूले बुद्धलाई देवता बनाए भन्ने आरोप पनि लाउँछन्। महायानले बुद्धलाई कुन रूपमा हेर्छ भन्ने कुरा त यही पुस्तकमा साक्या पण्डितले स्पष्ट पार्नुभएको छ। यही नै वास्तविक महायानको दृष्टिकोण हो। त्यो आरोप लगाउनेहरूले त महायानको राम्रोसँग अध्ययन नै नगरी उपबुजुक ठहरिएका मात्र हुन्। त्रिकायव्यवस्था नबुझेर त्यस्तो धारणा बनाउने गर्छन्। महायानमा पनि बुद्धलाई "शास्ता देवमनुष्याणां" भन्ने रूपमा नै मानिन्छ। देवताका पनि शास्ता भैसकेको हुनाले उहाँलाई देवता मानिँदैन।

त्यस्तो त थेरवादमा पनि शास्तालाई देवातिदेव भन्ने चलन पाइन्छ। यहाँ यो पनि याद राख्नु पर्छ कि थेरवादीहरूमा पनि आम्बेडकरी लबीले बाहेक बर्मा आदिका अधिंकाश थेरवादीले शास्तालाई गान्धी आदि जस्तो केवल एक महामानव मात्र मान्दैनन्।

यसै प्रसङ्गमा, अर्को भ्रमले पनि यहाँ जरा गाडेको छ। त्यो हो थेरवाद भनेको ज्ञानमार्ग हो र महायान भनेको भक्तिमार्ग हो रे! एक त बौद्ध धर्म भनेको नै ज्ञानमार्ग मात्र हो चाहे त्यो थेरवाद होस् चाहे महायान होस् चाहे वज्रयान होस्। दोस्रो, त्यस्तो भन्नेहरूले ठाने जस्तो पाराको भक्तिको अस्तित्व महायानमा कहीं पनि छैन। त्रिरत्नको शरण जानु, त्रिरत्नलाई या गुरु अथवा कल्याणमित्रलाई श्रद्धा, विश्वास गरेर उहाँलाई मार्गदर्शक मानेर आफैंले अभ्यास गर्नुदेखि बाहेक अर्को कुन खालको भक्ति उनीहरूले देखेका हुन् कुन्नि ? यही ग्रन्थ साक्षी छ। यदि त्यति गर्नु पनि भक्तिमार्ग भैहाल्छ भने 'श्रद्धा' इन्द्रिय र 'श्रद्धा'बल भनेका के रहेछन् र ३७ बोधिपाक्षिक धर्महरू कसरी

बन्ने रहेछन् कुन्नि ! आखिर महायान पनि ३७ बोधिपाक्षिक धर्मकै पञ्चमार्ग क्रम हो भने थेरवाद पनि ३७ बोधिपाक्षिक धर्म कै 'सत्त विसुद्धि' क्रम हो॥

बौद्ध धर्मलाई हेर्ने दृष्टिकोणका सम्बन्धमा बुझिराख्नु पर्ने महत्वपूर्ण कुरा के छ भने उन्नाइसौं शताब्दीको शुरुआततिर जब विज्ञानको cartesian model को उन्नति हुँदै गयो तब पश्चिममा त्यही विज्ञान (science) ले नै मानवका सम्पूर्ण समस्याहरू हल गर्छ र त्यही नै अन्तिम सत्य हो भन्ने धारणा तीव्ररूपमा फैलियो। त्यो धारणा हेगेल, कार्ल मार्क्स आदिबाट राजनीतिमा, फ्रोइडबाट मनोविज्ञानमा, बर्ट्रान्ड रस्सलबाट दर्शनमा व्याप्त भयो भने अझै फैलिंदै पूर्वका लेखक, चिन्तक दार्शनिक, राजनीतिज्ञहरूमा पनि अछूतो रहेन। स्वयं बौद्ध धर्ममा पनि यसको प्रवेश भयो र यसलाई राइज डेविड्स्, डा. आम्बेडकर, पं. राहुल सांकृत्यायन आदिबाट वैज्ञानिक (scientific) धर्मको रूपमा लिने र त्यो cartesian model अनुसार ठीक हुने मानवीय धारणा (अझ राम्रोसँगभन्दा भौतिक-मानवीय धारणा) बाट मात्र हेर्ने र त्यससँग नमिल्ने असामान्य पक्षहरूलाई फूलबुट्टा भरेको र यथार्थताबाट टाढा रहेको भनेर पन्छाउने गरियो। त्यसैको फलस्वरूप नेपालमा अझै पनि त्यही लबीका बौद्धहरू थुप्रै छन् जसले दुर्भाग्यवश डा. आम्बेडकरी व्याख्याका नेपाली अनुवादहरू मात्र धेरै पढ्ने सुन्ने मौका पाए र विज्ञानको पनि cartesian model लाई नै सर्बेसर्बा ठानेर बसेका छन्। त्यसबेला फ्रोइड, कार्ल मार्क्स, बर्ट्राण्ड रस्सल आदिले पुनर्जन्म, लोक, परलोकजस्ता कुरा कमजोर मानसिकताका उपज हुन् भन्ने प्रचार गर्थे र आफूले पूर्णरूपमा वैज्ञानिक भनाइ (scientific statement) प्रस्तुत गरेको भन्ने ठान्थे।

परन्तु बीसौं शताब्दीदेखि यता विज्ञान (science) ले धेरै पलटा खाइसकेको छ। विज्ञानको त्यो cartesian model अपर्याप्त देखियो र Max Plank को quantum hypothesis र आइन्स्टाइनको Theory of Relativity ले कतिपय ती

classical science का अवधारणाहरूलाई नाघेर वास्तविकताको झन् गहिराइमा पुगे। त्यति मात्र होइन अहिले त David Bohm को होलोग्राम, होलोभर्सको सिद्धान्तले विज्ञानलाई त्योभन्दा पनि झन् गहिरो आयाममा पसाएको - छ। आइन्स्टाइनले सन् १९५० तिर भनिसकेका थिए कि विज्ञानले मात्र मानवका सम्पूर्ण समस्याहरू हल हुँदैनन् र यसले सवै ज्ञान उपलब्ध गराउन सक्दैन । डेविड् वोमले त झन् आम्बेडकर प्रभृतिकाले रहस्यवाद भनेर पन्छाएका ज्ञानी सिद्धहरूका काल, दिक् (space and time) सम्वन्धी गम्भीर अनुभूतिहरूलाई समेत पनि scientifically प्रतिपादित गरे। त्यस्तै अग्रणी मनोवैज्ञानिक डा. हेलेन वेम्व्याखले "Life Before Life" र "Reliving Past Lives" भन्ने कितावमा आफ्नो बीसौं वर्षको शोधको निष्कर्ष स्वरूप 'पुनर्जन्म हुनैपर्छ' भन्ने चुनौती दिएका छन्। त्यतिमात्र होइन, भर्जिनीया विश्वविद्यालयको साइक्याट्री डिपार्टमेन्टका प्यारासाइकोलोजी शाखाका हेड इयान् स्टीभेन्सन (एम.डी.) ले "Cases Suggestive of Reincarnation" भन्ने चार खण्डको कितावमा विश्वव्यापी शोध गरेर "पुनर्जन्मको सम्भावनालाई वैज्ञानिक रूपमा नकार्न सकिन्न" भन्ने निष्कर्षमा पुऱ्याएका छन्। त्यसकारण यस्ता अतिभौतिकवादी थेरवादव्याख्या प्रणालीलाई न वैज्ञानिक मान्न सकिन्छ न त त्यसलाई स्वयं थेरवादमूलका अधिकांश देशहरू जस्तै श्रीलंका, वर्मा, लाओस्, थाईल्याण्ड, क्याम्वोडिया आदिमा प्रामाणिक मान्छन्। स्वयं अग्रमहापण्डित डा. लेदी सयादोले पनि त्यस्तो पुनर्जन्म, परलोक आदि पक्षलाई काटिएको बौद्धव्याख्यालाई खण्डन गर्नुभएको छ।

यो उपोद्घातलाई अन्त्य गर्नुभन्दा अघि पुन: यो स्पष्ट पार्न चाहन्छु कि यहाँ मैले यी कुराहरूलाई उठाउनुको प्रयोजन थेरवाद बौद्ध धर्मलाई आलोचना गर्नु किमार्थ होइन। यसलाई त महायान जत्तिकै शास्ताका प्रामाणिक वचन भनेर आदर गर्छु। यो त केही थेरवादीहरू र अन्य विद्वान्हरूले पनि महायान र वज्रयानप्रति गलत रूपमा फैलाएका अफवाह सम्बन्धी केही

बुँदाहरूमा प्रकाश पार्नको लागि मात्र लेखको हुँ। यो सन्दर्भमा यहाँ नाम उल्लेखित भएका अग्रमहापण्डित डा. लेदी सयादोलाई म थेरवादको उच्चकोटिको विद्वान् मान्छु भने डा. बाबासाहेब आम्बेडकरलाई पनि महामानव ठान्दछु र त्यही रूपमै आदर सम्मान गर्दछु। अन्तमा यो भन्न चाहन्छु कि खण्डन-मण्डन भनेको सम्यक्दृष्टिको प्राण हो जो विना बौद्ध सम्यक्दृष्टि मर्न जान्छ। आखिर थेरवादकै अभिधम्मका वर्मीज व्याख्याहरू विभावनी टीका र मनोरथपूरणीमा पनि आपसमा खण्डन मण्डन प्रशस्तै भेटिन्छन्।

अन्तमा यो मुनिमतप्रकाशलाई तिब्बती भाषाबाट अथक परिश्रम गरी नेपाली भाषामा अनुवाद गर्नुभएका हाम्रा खेन्पो भिक्षु वागीन्द्रशील र उपासक नारायणप्रसाद रिजाललाई सहर्ष धन्यवाद दिन चाहन्छु। त्यस्तै यसलाई प्रकाशन गर्न सम्पूर्ण आर्थिक जिम्मेवारी वहन गरी अपार पुण्य आर्जन गरेका उपासक पदम घलेलाई पनि धन्यवाद दिन चाहन्छुं।

**गच्छतः स्खलनं क्वापि भवत्येव प्रमादतः।**
**हसन्ति दुर्जनास्तत्र समादधति सज्जनाः॥**

**ये धर्मा हेतुप्रभवाः हेतूँस्तेषाँस्तथागतो ह्यवदत्।**
**तेषाञ्च यो निरोध एवंवादी महाश्रमणः॥**

सर्वदिग्विजयी भिक्षु महापण्डित आनन्दध्वज श्रीभद्र
(कुंगा ग्याल्छेन पाल साङ्पो) द्वारा रचिएको

# मुनिमतप्रकाश

**नमो गुरुमञ्जुघोषायादरेण**
(गुरुमञ्जुघोषलाई आदरपूर्वक वन्दना गर्छु)

**संहितयोराकर्यः सम्बुद्धो जिनपुत्राज्जातो ।**
**जिनसुताः कारुण्यशून्यतात्मकबोधिचित्तजाः ॥**

(हित र सुखको स्रोत सम्बुद्ध जिनपुत्रबाट जन्मिन्छन् जिनपुत्रहरू करुणा र शून्यतारूपी बोधिचित्तबाट जन्मिन्छन् ।)

**अतः जगत्को हितका निमित्तमा**
**प्रणाम गर्दै त्यहि बोधिचित्तमा**
**जिनपुत्रको नै अब भद्रमार्गमा**
**संक्षेपले भन्छु प्रवेशको क्रम ॥**

सम्यक्सम्बोधि ज्ञान लाभ गर्न चाहने मतिमान्ले महायानसूत्रालंकारबाट मार्गको निश्चय गर्नुपर्छ। त्यहाँ यसरी बताइएको छ–

**गोत्रं धर्माधिमुक्तिश्च चित्तस्योत्पादना तथा ।**
**दानादिप्रतिपत्तिश्च न्यामा [य्य सं] क्रान्तिरेव च ॥१॥**

**सत्वाना परिपाकश्च क्षेत्रस्य च विशोधना**
**अप्रतिष्ठितनिर्वाणं बोधिः श्रेष्ठा च दर्शना ॥२॥**

(अर्थात्- गोत्र, धर्मप्रति श्रद्धा, बोधिचित्तोत्पाद, दानआदि पारमिताको साधना, सत्वहरूको परिपाक, दोषरहित अवस्थामा प्रवेश, क्षेत्रको परिशुद्धि, अप्रतिष्ठित-निर्वाण, उत्तम बोधि र शास्ता ।)

## गोत्र

महायानसंग्रह विभागमा त्यस्तो बताइएको हुँदा अभ्यास गर्न चाहनेले सौभाग्यको आधार स्वरूप गोत्रलाई बुझेर निश्चय गर्नुपर्छ। त्यसलाई महायानसूत्रालंकारमा यस्तो बताइएको छ–

**प्रकृत्या परिपुष्टं च अश्रयश्चाश्रितं च तत् ।**
**सदसच्चैव विज्ञेयं गुणोत्तारणतार्थतः ॥**

त्यस अनुसार प्रकृतिगोत्र सबै सत्वहरूमा हुन्छ भने परिपुष्टगोत्र[1] बोधिचित्त उत्पाद भएका सत्वहरूमा मात्र हुन्छ, नभएकाहरूमा हुँदैन। संस्कृत भाषामा 'गोत्र' भन्ने शब्दमा गोको 'ओ' कारलाई 'उ' बनाएर 'ण' प्रत्यय गरेमा 'गुण' हुन्छ। त्यस्तै 'त्र' लाई अलग्याएमा 'तार' हुन्छ। अतः गुणमा आश्रित भएर सांसारिक समुद्रबाट पार हुनु नै

---

[1] श्रीलंकाका विद्वान् विपश्यना गुरु ञाणमातरश्रीका अनुसार जसले 'बुद्ध बन्छु' भन्ने संकल्प पहिले गरेको छ उसले सप्तविशुद्धिको जति अभ्यास गरे पनि संस्कारोपेक्षाज्ञानभन्दा माथि जान सक्दैन र पारमीको अभ्यास नै गर्नुपर्ने हुन्छ। यो नै परिपुष्ट गोत्र भइसकेको व्यक्तिले प्रकृतिगोत्रजस्तो सिधै स्रोत आपन्न हुन नसक्नुको भेद हो। त्यसैले उ बोधिसत्वयानमा लाग्नुपर्छ।

'गुणतार' हुनु हो। (गुणोत्तारणार्थेन गोत्रं वेदितव्यं, गुणा उत्तरन्ति अस्मादुद्भवन्तीति कृत्वा– महायानसूत्रालंकार, गोत्राधिकार, लक्षणविभाग)

गोत्र भएको लक्षण (चिन्ह) सूत्रालंकारमा यसरी बताइएको छ–

**कारुण्यमधिमुक्तिश्च क्षान्तिश्चादिप्रयोगतः ।**
**समाचारः शुभस्यापि गोत्रे लिङ्गं निरूप्यते ॥**

(अर्थात्– प्रयोग गर्नुभन्दा अघिदेखि सत्वहरूमा करुणा हुनु, महायान धर्ममा श्रद्धाविश्वास हुनु, सहनशीलता हुनु, कुशलधर्मको आचरणलाई राम्रोसँग परिपालन गर्नु गोत्र भएको लक्षण हो भन्ने बुझ्नुपर्छ।)

'प्रयोगको पहिले नै' भनेको धर्म अभ्यास गर्न थाल्नु भन्दा पहिले नै करुणा आदि हुनु भनेको हो। यस्तो भनिएको हुनाले धर्ममा प्रवेश हुनुभन्दा अगाडि देखि नै महाकरुणा हुनु, त्रिरत्नमा विश्वास (श्रद्धा) हुनु, अरूले अपमान गर्दा सहनशील हुनु, स्वभावैले नै कुशल कर्म गर्नमा श्रद्धा हुनु, यी स्वभावहरू जसमा भए पनि ती बुद्धको गोत्र भएका लक्षण हुन्।

गोत्रको आदीनव (शुद्ध हुन नदिने कुरा अर्थात् दोष)को बारेमा महायानसूत्रालंकारमा यसरी बताइएको छ–

**क्लेशाभ्यासः कुमित्रत्वं विघातः परतन्त्रता ।**
**गोत्रस्यादीनवो ज्ञेयः समासेन चतुर्विधः ॥**

यसअनुसार, क्लेशमा अभ्यस्त हुनाले भोग, सम्पत्ति र प्राणीहरू प्रति सम्हाल्नै नसक्ने राग र द्वेष उत्पन्न हुन्छ। कुमित्रबाट भन्नाले विशेषगरी कुटुम्बसँग अनावश्यक सम्बन्ध राख्नाले, अकल्याणमित्रले धर्म गर्न नदिनाले या दिए पनि सद्धर्ममा प्रवेश गर्न नदिएर विपरीत धर्ममा लगाउनाले, खासगरी पहिले नै अकल्याण मित्रसँग भेट भएमा उसबाट

सुन्दाखेरि नराम्रो ज्ञान बाहेक अरू केही लाभ हुँदैन भन्ने बुझ्नु पर्छ। उनीहरूको वचन राख्दाखेरि सद्धर्मसँग भेट नहुने हुन्छ। यो नै कुमित्रबाट भएको गोत्रको आदीनव ( दोष) हो। भोजन वस्त्र आदिको गरीबीको कारणले गर्दा धर्मको अभ्यासमा उत्साह नहुनु अर्को दोष हो। आफ्ना कुटुम्व र राजा आदिको अधिकारमा पर्नाले धर्ममा प्रवेश नपाउनु परतन्त्रताको दोष हो। चणकले भनेका थिए–

**बाल्यावस्थामा बाआमाको अधीनमा हुन्छ,**
**युवावस्थामा गृहस्थीको अधीनमा हुन्छ,**
**वृद्धावस्थामा छोरानातिको अधीनमा हुन्छ,**
**जड़ले कहिल्यै अधिकार (स्वतन्त्रता) पाउँदैन।**

अगोत्रक (गोत्र नभएको) को बारेमा सूत्रालंकारमा यसरी वताइएको छ,

**ऐकान्तिको दुश्चरितेऽस्ति कश्चित्**
**कश्चित् समुद्घाटितशुक्लधर्माः।**
**अमोक्षभागीयशुभोऽस्ति कश्चित्**
**निहीनशुक्लोऽस्त्यपि हेतुहीनः॥**

यसअनुसार (अगोत्रक पनि) आगन्तुक-अगोत्रक र सदा-अगोत्रक गरी दुई प्रकारका हुन्छन्। त्यसमा पनि आगन्तुक-अगोत्रक चाहिं शुक्ल धर्म (कुशल कर्म)को बीज नै नाश हुनाले, सधैं दुश्चरित्रको वन्नाले, शुक्ल पक्ष (कुशल पक्ष) को पुण्य नहुनाले र शुक्लबीज (कुशल कर्मको बीज) भए तापनि पुण्यको रसले नभिज्नाले गर्दा हुन्छ। सदा-अगोत्रक चाहिं चित्तमात्रीहरूको मत हो। माध्यमिकहरूले त्यस्तो नमाने तापनि संसारलाई उनीहरूले अनन्त मान्ने हुनाले उनीहरूको उद्देश्य अनुरूप अगोत्रक हुन्छ भन्ने ठान्छन्। जस्तै राजा प्रसेनजित्को कथावाट र चीनको एक वालकको कथावाट यो दृष्टान्त बुझ्न सकिन्छ।

# धर्माधिमुक्ति

धर्माधिमुक्ति भनेको शरणीय त्रिरत्नहरूप्रति श्रद्धाविश्वास हुनु हो। त्यसको लागि शरणगमनको बारेमा व्याख्या गर्नुपर्ने हुन्छ। त्यसमा;

१. शरणगमनको लक्षण चिन्नु।
२. त्यसको स्वभाव (स्वरूप) लाई निश्चय गर्नु।
३. निश्चय भएपछिको शिक्षा।
४. त्यसरी अभ्यास गर्नुका फाइदा (फल)

यी चार कुराको बारेमा क्रमश: बताइन्छ।

**१. शरणगमनको लक्षण:-**

उत्तम आश्रय (स्थान) मा आश्रय लिन्छु भन्ने प्रतिज्ञा गर्नु यसको लक्षण हो। 'शरणं-गच्छामि' भन्ने शब्दको अर्थचाहिं यस्तो हुन्छ - रक्षा गर्ने भएकाले 'शरण' हो र त्यसमा आश्रित भई (त्यसलाई) अपनाउनु 'गच्छामि' हो। सूत्रालंकारमा यस्तो भनिएको छ–

**उपद्रवेभ्य: सर्वेभ्यो अपायादनुपायत:**
**सत्कायाद्धीनयानाच्च तस्माच्छरणमुत्तमम् ॥**

(अर्थात् सबै उपद्रवहरूबाट, दुर्गतिबाट, अनुपाय (उपायहीन हुनु) बाट, सत्कायदृष्टिबाट र हीनयानबाट[२] पनि रक्षा गर्ने भएकोले उत्तम शरण हो।)

**२. स्वरूपको निश्चय गर्नु:**

यसभित्र शरणगमनको भेद र त्यसको विशेषताको बारेमा बताइन्छ। यसका भेदमा लौकिक शरणगमन र लोकोत्तर शरणगमन गरी दुई थरी हुन्छन्। लौकिकमा पनि

---

२ पहिलेका भारतीय आचार्य असंगले नै 'हीनयान' शब्द प्रयोग गरेकाले यहाँ पनि नबदलिएको हो।

मतिलौकिक र स्थानलौकिक गरी दुई थरी हुन्छन् भने लोकोत्तरमा पनि साधारण र असाधारण गरी दुई हुन्छन् । फेरि साधारणमा पनि श्रावक र प्रत्येक वुद्धको गरेर दुई थरी हुन्छन् । असाधारणमा पनि पारमिता[३] र वज्रयान गरी दुई किसिमका हुन्छन् ।

यिनका विशेषताहरू; १. हेतु (कारण) २. स्थान ३. काल र, ४. उद्देश्य, (प्रयोजन) का आधारमा वताइन्छ ।

लौकिक शरणगमनको हेतुमा 'भय'[४] र 'इच्छा' नै मूल रूपमा हुन्छंन् । श्रावक र प्रत्येकवुद्धमा ('भय' र 'इच्छा' को अलावा) श्रद्धा नै मूल हेतु हुन्छ । वोधिसत्वमा भने यी तीनको साथसाथै अझ करुणा नै मूल हेतु हुन्छ ।

स्थानमा लौकिक र लोकोत्तर गरी दुई थरीका हुन्छन् । त्यसमा लौकिक पनि अधम र उत्तम गरी दुई किसिमका हुन्छन् । अधमस्थान चाहिं ईश्वर, व्रह्मा, महादेवहरू अथवा पहाड र रुख आदिमा आफ्नो इच्छा अनुसार शरण जानु हो । सूत्रमा यस्तो भनिएको छ[५]– "भयले पीडित भएका कतिपय सत्वहरू सामान्यतया पहाड, जंगल अथवा ठूला रुखहरूका शरणमा जान्छन् । ती उत्तम शरणीय होइनन् र त्यसमा आश्रित भएकाले ठूलो भयबाट मुक्त हुँदैनन् ।"

मतिलौकिक शरणगमनमा उत्तम स्थान त्रिरत्नका शरणमा गए पनि यो जीवन र परलोकको भयबाट बच्न या

---

[३] पारमितायान भनेको महायान अन्तर्गतको सूत्रयान हो । यसलाई हेतुयान पनि भनिन्छ ।

[४] लौकिकमा सामान्य भय र इच्छामात्र कारण हुन्छ भने श्रावक प्रत्येक वुद्धको संसारको दु:खदेखि भय हुनु कारण हुन्छ । त्यस्तै इच्छा पनि संसारको दु:खवाट मुक्त हुने इच्छा हुन्छ ।

[५] धम्मपदमा पनि वताइएको छ, बहुं वे सरणं यन्ति पब्वतानि वनानि च । आराम रुक्ख चेत्यानि मनुस्सा भयतज्जिता (वुद्धवग्ग)

राम्रो (फलको) आशावाट लौकिक मति भएर शरण गइएको हुनाले संसारवाट मुक्त भईदैन ।

लोकोत्तर स्थानमा साधारण र असाधारण गरी दुई किसिमका स्थान हुन्छन् । साधारणमा पनि श्रावकले संघप्रति मूल उद्देश्य लिएर त्रिरत्नको शरणगमन गर्छन् भने प्रत्येकबुद्धले धर्मलाई मूल उद्देश्य राखेर त्रिरत्नको शरणगमन गर्दछन् । असाधारण स्थानमा पारमितायानीहरूले वुद्धलाई मूल उद्देश्य लिई त्रिरत्नको शरणगमन गर्दछन् । उत्तरतन्त्रमा[६] यस्तो भनिएको छ–

**त्याज्यत्वान्मोषधर्मत्वादभावात् सभयत्वतः ।**
**धर्मो द्विधार्यसंघश्च नात्यन्तं शरणं परम् ॥१/२०॥**
**जगच्छरणमेकत्र बुद्धत्वं पारमार्थिकम्**
**मुनेर्धर्मशरीरत्वात् तन्निष्ठत्वाद् गणस्य च ॥१/२१॥**

अर्थात्, दुई किसिमका[७] धर्म र आर्यसंघ पनि त्याज्य हुनाले, मिथ्याधर्मवाला हुनाले, असत् हुनाले र भयले युक्त हुनाले आत्यन्तिक परम शरण हुन सक्दैनन् ॥ मुनिको धर्म नै शरीर भएको र संघ पनि त्यसमै निहित हुने भएकोले लोकको शरण लिने एकमात्र स्थान पारमार्थिक वुद्धत्व (सम्यक्सम्बुद्धता) नै हो ।"

वज्रयानको[८] शरणगमन त गुह्यमन्त्र दिने वेला मात्र भनिन्छ, यहाँ भनिँदैन ।

---

[६] यो महायानको एउटा शास्त्र हो । आचार्यद्वारा गरिएको सूत्रको व्याख्यालाई शास्त्र भन्छन् । यो तन्त्र होइन ।

[७] 'आगम धर्म' र 'अधिगम धर्म' नै दुई धर्महरू हुन् । थेरवाद परम्परामा यिनलाई 'परियत्ति' र 'प्रतिपत्ति' भनिन्छ ।

[८] यहाँ गुह्य भनेको कुनै जानि विशेषलाई दिइने या आचार्यमुष्टि जस्तो होइन । किनकि अभिषेक लिन सवैलाई खुला छ र अभिषेकपछि यी कुराहरू सवैलाई खुला हुन्छन् । जस्तै भिक्षुहरूको

त्यस्तै त्रिरत्नको छनौट पनि विभिन्न प्रकारको हुन्छ जस्तैः- श्रावक र प्रत्येकबुद्धले बुद्धमा तीनकाय छन् भनेर मान्दैनन्। बोधगयामा बुद्ध भएका शाक्यमुनि आदिलाई नै साक्षात् भन्ने मान्छन्। धर्ममा पनि महायान धर्मलाई मान्दैनन् र श्रावकयानलाई मात्र मान्दछन्। त्यस्तै संघमा पनि बोधिसत्व संघलाई नमानेर श्रावकसंघका ८ पुद्गललाई[१] मात्र मान्छन्। पारमितापक्षका महायानीहरूले बुद्धलाई त्रिकायले युक्त मान्छन्, धर्ममा महायान नै मान्छन् र संघमा बोधिसत्व संघ मात्रै मान्छन्। तन्त्रपक्षका त्रिरत्नहरूको बारेमा यहाँ भनिंदैन।

कालमा लौकिक शरणगमन गर्नेहरूले यो जीवनमा र पछिका जीवनमा थोरै स्वार्थ प्राप्त गर्नु बाहेक आजीवन र संबोधिसम्म शरणगमन गर्ने नामसमेत थाहा पाएका हुँदैनन्।

लोकोत्तर शरणगमन गर्ने श्रावक र प्रत्येकबुद्धहरूले आजीवन बाहेक सम्बोधिसम्म शरण जान चाहँदैनन्। बोधिसत्वहरूले सम्बोधिसम्मको निमित्त शरणगमन गर्छन् र माथिका अरू चाहँदैनन्।

यो व्यवस्थामा कसैले 'आजीवन' भन्ने शब्दले यो जीवनको आयुलाई नमानेर 'मन-आजीवन' भन्न खोजेको हो भन्ने मान्छन्। मन-आजीवन भन्नुको अर्थ नै संबोधिप्राप्तिसम्म शरणगमन गर्नु भन्ने हुन्छ। परन्तु यो त चित्तोत्पादलाई चोर्ने गरेको मात्र हो। नत्र त साधारण र असाधारण शरणगमनको फरक पनि नहुने हुनाले प्रातिमोक्ष

---

उपोषथको वेलामा गृहस्थहरू बस्न पाईंदैन र विनय पनि गृहस्थले पढ्न नपाइने नियम छ। यो पनि त्यस्तै हो।

१ चारओटा मार्गस्थ पुद्गल र चारओटा फलस्थ पुद्गल गरी आठ पुद्गलहरू हुन्छन्।

र बोधिसत्व संवर पनि एकनास नै हुनजान्छ। सूत्रालंकारमा महायानको शरणगमन चार धर्मले युक्त छ भनेको पनि गल्ती हुन जानेछ। सूत्र र तन्त्र कुनैमा पनि यस्तो कुरा बताइएको छैन। यो त धर्मको बुझाई थोरै र लोभचाहिं धेरै भएको दोष हो।

उद्देश्यमा, लौकिक शरण जानेहरू यो लोक र परलोकको हितको उद्देश्य मात्र लिएर पुऱ्याइदिने जस्तो ठानी शरणमा जान्छन्। लोकोत्तरमा श्रावकहरू आफ्नो[10] हितको लागि अर्हत् हुन चाहन्छन्। प्रत्येकबुद्धहरू आफ्नो हितको लागि प्रतीत्यसमुत्पाद बोध गरेर बुद्ध नभएको क्षेत्रमा स्वयं ज्ञानलाभ गर्न चाहन्छन्। बोधिसत्वहरू परहितको लागि सर्वज्ञबुद्धत्वलाभको निमित्त शरणगमन गर्न चाहन्छन्। उत्तरतन्त्रमा यस्तो भनिएको छ–

**"शास्तृशासनशिष्यार्थैरधिकृत्य त्रियानिकान्**
**कारत्रयाधिमुक्तांश्च प्रज्ञप्तं शरणात्रयम् ॥१ १९॥"**

अर्थात् "शास्ता (बुद्ध), शासन (धर्म) र शिष्य (संघ) को प्राप्तिका निमित्त श्रद्धा विश्वास भएका तीन यानीहरूलाई लिएर तीन किसिमको शरणको व्यवस्था गरिएको हो।"

२. **शिक्षाका** (भेद) दुईटा छन्। सामान्य शिक्षा र विशेष शिक्षा। सामान्य शिक्षामा लिनुपर्ने (उपादेय) र त्यागनु पर्ने (हेय) गरी दुई थरी छन्। पहिलोमा चाहिं १. सत्पुरुषको संगत गर्नु। २. सद्धर्म श्रवण गर्नु। ३. धर्मअनुसार साधना गर्नु। सत्पुरुषको संगत भन्नाले पूर्णलक्षण भएका गुरुबाट

---

१० बुद्धता प्राप्त भएपछि मात्र सर्वसत्वको हित गर्न सक्ने क्षमता हुने भएकोले त्यसको तुलनामा प्रत्येकबुद्धता र अर्हत्वबाट केही सत्वको मात्र हित हुने हुँदा आफ्नो हितमात्र मानिएको हुन्छ। तीनै यानबाट उत्तिकै रूपमा सत्वको हित हुने भए त पाली त्रिपिटकमा भएको त्रियान व्यवस्था पनि अर्थहीन हुन जान्छ।

धर्म सुन्नु, धर्म अनुसार साधना गर्ने मित्रमा विश्वास गर्नु र कुटुम्ब एवं आफ्ना सम्बन्धी र सेवकहरूलाई धर्ममा प्रवेश गराउनु पर्छ (भनेको हो)।

सद्धर्म सुन्नु भन्नुको मतलब बुद्धले बताएको भनेर निश्चय भैसकेका त्रिपिटक र अभिषेक पाइएमा चार तन्त्रहरू सुन्नु पर्छ। अथवा वचनहरूको मतलाई खुलाइएका शास्त्रहरू जस्तै मैत्रेयनाथ, असंग, वसुबन्धु, नागार्जुन, आर्यदेव, दिङ्नाग, धर्मकीर्ति, आचार्य शान्तिदेव, गुणप्रभ आदिले रचेका असल धर्महरू सुन्नु पर्छ। तन्त्रमा पनि तीनओटा बोधिचित्तविवरण अथवा सिद्धहरूले रचेका सप्त[11] सिद्धि संग्रह अथवा आचार्य योगीश्वर विरूपाद, इन्द्रभूति र घण्टपाद आदिले रचेका असल स्रोतबाट आएका ग्रन्थहरू सुन्नु पर्छ। छोटकरीमा भन्दाखेरि त्यो धर्म बुद्धले भनेको हुनैपर्छ, संगायन गर्नेहरूले संग्रह गरेको हुनैपर्छ र सिद्धले भावना गरेको हुनैपर्छ, पण्डितले व्याख्या गरेको हुनैपर्छ र लोकचक्षुपाद[12]ले अनुवाद गरेको हुनैपर्छ। यी कुरा विद्वान्हरूमा प्रख्यात भएको भए ती बुद्धका शासन हुने हुँदा तीनको श्रवण, चिन्तन-मनन र भावना गर्नुपर्दछ। यसको विपरीत अन्य धर्म जति गम्भीर भए पनि त्यो बुद्धको शासन नहुने भएकाले बौद्धहरूले त्यसमा श्रवण, चिन्तन- मनन र भावना गर्दैनन्। उत्तम (गम्भीर) कुरा त तीर्थिकहरूमा र अन्य अधार्मिकहरूमा पनि पाइन्छन् तर पनि ती बुद्धशासन नभएका हुनाले त्यागिने नै हुन्छन्।

---

११ वास्तवमा त्यो अष्टसिद्धि संग्रह हो। तिब्बतमा सातओटाको अधिक प्रचलन भएकोले सप्तसिद्धि संग्रह भनिएको हुनुपर्छ।

१२ तिब्बती भाषामा लोक चक्षुपादलाई 'लोचावा' भन्छन् र यो बौद्ध ग्रन्थ अनुवाद गर्ने विद्वान्लाई सम्बोधन गर्ने शब्द हो।

धर्मअनुसार साधना गर्ने भन्नाले (हाम्रो अभ्यास) सामान्यतया त्रिपिटकसँग मिल्नु पर्दछ। (परन्तु) विशेष रूपमा कसरी लागू गर्ने भन्ने वारेमा (वताउँदा) चर्याचाहिं विनयसँग मिल्नु पर्ने हुन्छ, भावना अथवा ध्यानचाहिं सूत्रसँग मिल्नु पर्छ। व्याख्याचाहिं अभिधर्मसँग मिल्नुपर्छ र गुह्यमन्त्रचाहिं तन्त्रसँग मिल्नुपर्छ। यो भोटमा आजभोलि त्रिपिटकसँग नमिल्ने, चारतन्त्रसँग विरोध हुने र अद्भुत भनेर मानिएका धर्महरू धेरै नै छन्। यो के हो भनेर मैले छुट्याउन सकिन॥

वाह्य दैनिक चर्या कसरी गर्ने भन्ने वारेमा (यसरी वुझ्नू)। वस्दाखेरि त्रिरत्नमा आश्रित छु भन्ने सम्झनु पर्छ। हिंड्दाखेरि सामान्यतया त्रिरत्नलाई र विशेषगरी आफू पुगिने दिशाका त्रिरत्नहरूको शरणगमन (गरेको सम्झनु पर्छ।) मध्यदिशामा वैरोचन वुद्ध, पूर्व दिशामा, अक्षोभ्य, दक्षिण दिशामा रत्नसम्भव, पश्चिममा अमिताभ र उत्तरमा अमोघसिद्धि विराजमान भएका (भन्ने सम्झेर उहाँहरूलाई) स्तुति गरेर गएपछि आकस्मिक बाधाहरू हट्छन्, चिताएको पूरा हुन्छ र अन्ततोगत्वा बुद्धकै दर्शन लाभ पनि हुन्छ। भोजन गर्दा जे खाए पनि, जे पिए पनि पहिले नैवेद्य चढाउनु पर्छ। "देवादानविधि", आचार्य मैत्रीपाको "कुदृष्टिनिराकरण" र मेरो (लेखकको) "आदिकर्मिककृत्यम्" आदिमा वताइए अनुसार 'ॐ महागुरु वज्रनैवेद्ये आः हूँ' भनेर गुरुलाई एउटा नैवेद्य चढाउनु पर्छ। वुद्ध, बोधिसत्व र इष्टदेवहरूलाई अलग अलग भए त राम्रो हो, नत्रभने सामान्यतया "ॐ सर्ववुद्धबोधिसत्वानां वज्रनैवेद्ये आः हूँ" भनेर एउटा नैवेद्य चढाउनुपर्छ। अनि वलि खानेहरू[१३]लाई

---

[१३] अंगुत्तर निकायमा पनि शास्ताले वलिग्राहक देवतालाई वलि चढाउनु पर्छ भन्नुभएको छ र वलि भनेको वौद्ध धर्ममा मारकाट

एउटा बलि दिएर त्यसमा सामान्य भूतको मन्त्र "ॐ अकारो मुखं सर्वधर्माणाम् आद्यनुत्पन्नत्वात् ॐ आः हूँ फट् स्वाहा" भन्नु पर्छ। प्रेतको लागि ज्वालामुख बलिदान दिंदा "नमः सर्वतथागत अवलोकिते ॐ सम्भर सम्भर हूँ" भनेर पहिले मन्त्र पढी चार ओटा तथागतका[१४] नाम पछाडि पढ्नू भन्ने धारणीमा बताइएकोले त्यही (क्रमअनुसार) गर्नुपर्छ। कसैकसैले चार तथागतका नामलाई पहिले पढेर मन्त्र पछाडि पढ्ने विधि अपनाउँछन् तर यो क्रम बुद्धले नबताएको हुनाले अशुद्ध हुन जान्छ।

(प्रेतलाई) पानी दान दिंदाखेरि अन्न नमिसाएर (शुद्ध) पानी मात्र दान दिनुपर्छ। यदि मिसाइयो भने "पचाउनु गाह्रो" नामक प्रेतलाई प्राप्त हुँदैन भनिएकोले पानीमा अन्न मिसाउन बुद्धले भन्नु भएको छैन। यसपछि एउटा पिण्ड "ॐ हरिते स्वाहा" भनेर हारितीमातालाई दिनुपर्छ। अनि "ॐ हरिते वज्रयक्षिणि स्वाहा" भनेर हारितीका ५०० पुत्रहरूलाई एउटा पिण्ड दिनुपर्छ। नैवेद्यमा अधिकार पाएका सामान्य भूतलाई "ॐ अग्रपिण्डाशिभ्यः स्वाहा" भनेर एउटा पिण्ड दिनुपर्छ। यसबारे हारिती सूत्रमा[१५] बताइएको छ "मलाई शास्ता मान्नेहरूले हारिती यक्षिणीलाई पिण्ड दिनू" ।

---

कदापि होइन र आफ्नै भोज्य पदार्थको एक भाग मात्र या तोर्मा, चिउराको गोंजा आदि चढाउनु नै बलि अर्पण हो। भारतमा भातको तोर्मा बनाउने चलन थियो।

१४ चार तथागत यी हुन्– १. बहुरत्न तथागत, २. सुन्दरसद्रूप तथागत, ३. अनन्तकाय तथागत, ४. सर्वभयमुक्त तथागत।

१५ हारितीमातालाई पिण्ड दिनू भन्ने विनयमा पनि छ।

वज्रशिखर महागुह्य योगतन्त्रमा पनि भोजन गर्दा पिण्ड दिनू भनिएको छ। त्यस्तै कालचक्र आदि धेरै तन्त्र र सूत्रहरूमा पनि यस्तो बताइएको भेटिन्छ। यहाँ भोटमा आजभोलि बुद्धले बताएका बलि पिण्ड आदि न गरेर बोन सम्प्रदायमा बताएको जस्तो) मान्छेको मुटु जस्तो त्रिकोणात्मक बलि आदि गरेको देखिन्छ। त्यस्तो (तोर्मा) बुद्धको शासनमा नहुँदा सन्देहमा परेको छ। त्यसैले भोजनयोग पनि आ-आफ्नो ग्रन्थ अनुसार मिलाएर गर्नुपर्छ।

निद्रायोग(सुत्नेयोग)मा **"नाथनिर्वाणशै-याबच्छयीतेप्सितया दिशा"** भनेर **बोधिचर्यावतारमा बताइए झैं पूर्वतिर या उत्तर दिशातिर सिरान गराएर दाहिने कोल्टो फर्केर (बुद्धको परिनिर्वाण जाँदाको जस्तो गरी)** अमिताभको **ध्यानमा मन लगाएर शून्यतास्वभावको बुद्धको धर्मकायलाई सम्झेर सुत्नुपर्छ।** उठ्ने बेला आफूलाई बुद्धको रूपकाय भन्ने सम्झेर उठ्ने र चर्यापरिशोधनसूत्रमा बताए अनुसार आचरण गर्ने गर्नुपर्छ। अरू कुरामा आफूलाई सुख र आनन्द जे भए पनि गुरु र त्रिरत्नलाई अर्पण गर्नुपर्छ। रोग र दुःख जे आइपरे पनि गुरु र त्रिरत्नमा श्रद्धा गरिराख्नु पर्छ। मन्त्र जप्ने, आलम्वनमा (ध्यान) गर्ने, औषधि गर्ने, पाठ गर्ने आदि सबै कामहरू धर्म रत्नका शाखा भएका हुनाले तिनीहरूलाई तुच्छ नठानेर तिनीहरूमा प्रयत्न गरिराख्नु पर्छ। यस बारेमा कसैले भन्छन् कि "औषधि-उपचार, पाठ आदि गरियो भने धर्मरत्नमा विश्वास नगरेको मानिन्छ, औषधि-उपचार आदि गर्नुभन्दा त्रिरत्नको शरणगमन गर्नु नै उत्तम हो। औषधि खाएमा शरणगमनमा आपत्ति हुन्छ।" यदि त्यसो हो भने भैषज्यवस्तुमा भनिएको छ कि रोगी भिक्षुले वैद्य र औषधिलाई मान्नु पर्छ। खाने र पिउने वस्तुहरू पनि चार प्रकारका औषधिमध्ये एक हुन्।

सततभैषज्य)। अतः खाने पिउने गरेमा शरणगमन विग्रिन्छ भन्नु पऱ्यो। खानेपिउने गर्दागर्दै पनि औषधि खाएमा शरणगमनमा दोष हुन्छ भन्नु कसरी मिल्छ? विद्वान्ले देखेमा लाजै मान्नुपर्ने हुन्छ। अनि फेरि ज्यान दिनु परेपनि या बकसको लोभले पनि त्रिरत्नलाई न त्यागेरै जे कर्म गरे पनि त्रिरत्नकै सेवाको निमित्त भनेर गर्नुपर्छ।

अव विशेष शिक्षाको सम्वन्धमा सूत्रमा यस्तो वताइएको छ "जसले बुद्धको शरणगमन गर्छ, त्यो सम्यक् उपासक हो, त्यो कहिल्यै पनि अरू देवताहरूको शरणमा जाँदैन। सद्धर्मको शरणमा गएपछि हिंसा भावनालाई त्याग्छ। संघको शरणमा गएपछि तीर्थिकको पक्ष लिंदैन।" अरू कुरा पनि छन् जस्तै बुद्धको शरणमा गएपछि अरूदेवताहरूलाई शास्ता मान्दैनन्। धर्मको शरणमा गएपछि अधर्मलाई मार्ग मान्दैनन्। संघको शरणमा गएपछि संघमा प्रवेश नभएकालाई मित्र र पूजनीय मान्दैनन्। धर्मपाल र दशदिक्पाल आदि लौकिक[१६] देवतालाई वन्दना पूजा मात्र गर्दैमा शरणगमनको संवर विग्रिंदैन। तिनीहरूको शरणमा गएपछि भने शरणगमन-संवर पनि विग्रिन्छ। जस्तै आफ्नो सेवकले अर्कै मालिकलाई पूजा, वन्दना गरेमा आफ्नो मालिकको अधीनवाट बाहिर हुँदैन परन्तु अर्कै मालिकको शरण गयो भने आफ्नो मालिकको अधीनवाट वाहिर जान्छ। यो पनि त्यस्तै हो।

यहाँ भोटमा कसैले 'थाङ्ला' भन्ने देवतालाई नाथ मानेमा उसको शरणगमनमा आपत्ति हुन्छ भनेर पनि दिक्पाल, महायक्ष सेनापति र स्थानीय देवताहरूको समेत

---

१६ धेरैले महायान वज्रयानका देवीदेवताहरूको यो पक्षलाई नबुझेर महायानी वज्रयानीहरू देवीदेवताको पनि शरण जान्छन् भन्ने ठान्छन्।

शरणगमन गरेको देखिन्छ। त्यसो गरेमा शरणगमनमा दोष लाग्छ। यदि यिनीहरू वोधिसत्व संघ हुन् भनी मानिएको छ भने त्रिरत्नको शरणगमनभित्रै पर्न आउँछ। अन्यथा वेग्लै शरणगमन गरियो भने तीर्थिकसँग मिस्समास भएर जानेछ[१७]। कारण के हो भने तीर्थिकहरू पनि महादेव आदि लोकपालको नै शरणगमन गरेका हुन्छन्। कसैले 'धर्म (पुस्तक) लाई नाघियो भने श्रद्धा नभएको हुन्छ अथवा धर्मको व्यापार तथा (आफू भन्दा) तल राख्ने जस्ता काम गर्दा धर्म त्यागिने हुनाले धर्मको शरणगमन रहँदैन भनेर मान्दामान्दै पनि धर्म सुन्ने र सुनाउने कार्यलाई रोक लगाउँदा शरणगमनमा दोष लाग्दैन भन्ने ठानी सुन्ने सुनाउने काम नगर भन्ने गर्छन्। सामान्य रूपमा धर्म वेचविखन गर्दा त ठूलै दोष लाग्छ परन्तु किन्नेवालाले निरन्तर पठन-पाठन आदि गरिरहने भएकोले बेच्नेवाला आफू विग्रे पनि शासन विग्रँदैन। सुन्न या सुनाउन रोक लगाउने हो भने विद्वान्हरूको धारा टुट्न जान्छ। धर्म सुनाउने मानिस भएनन् भने त पुस्तकका ठेली धेरै भए पनि वुद्धको शासन विनाश हुन पुग्छ। त्यसकारण धर्मको व्यापारमा भए खाएको सानो दोष र सुन्न सुनाउन रोक लगाएको ठूलो दोष हो भन्ने ठान्ने तिनीहरू शरणगभनको सार नै नवुझ्का (मानिस) हुन्। अझै कसैले पहेंलो वस्त्रलाई नाघ्यो भने संघको शरणगमन रहँदैन भन्दाभन्दै पनि भिक्षु र त्रिपिटकधारीहरूमा दोष लगाई श्रद्धा पनि नगरेको देखिन्छ। त्यसमा पनि पहेंलो वस्त्र नाघ्दा अश्रद्धाको अंगमात्र हुन

---

१७ पालि त्रिपिटकमा पनि इन्द्र, ब्रह्मा लगायतका करोडौं देवीदेवताहरू शास्ताको शरणमा गई स्रोतापन्न आदि भएको कुरा उल्लेखित छ र आटानाटीय सुत्तमा यक्ष, यक्षसेनापतिहरूलाई मद्दत मागिएको छ।

जान्छ। परन्तु शरणगमनको सार बिग्रँदैन। भिक्षु र त्रिपिटकधारीलाई श्रद्धा नगरेर प्रतिघात गरेमा संघशरणगमनको दोष लाग्छ। यस्ता समूहका सबै भिन्नताहरूलाई राम्रोसँग बुझ्नु पर्छ। जान्नु पर्ने अन्य शिक्षाहरूको बारेमा विस्तारभयले गर्दा यहाँ लेखिएको छैन, सूत्र र शास्त्रहरूमा हेर्नुपर्छ।

**४. शरणगमनका फाइदाहरू:-**

यसरी शरणगमन गर्नुका फाइदा दुई थरीका छन्। अहिलेका फाइदा र अन्तमा हुने फाइदा। अहिलेका फाइदामा पनि वियोग र संयोगबाट गरी दुई किसिमका छन्। त्यसमध्ये वियोगका फाइदामा मिथ्याकर्ममा विश्वास गरेको आवरण शुद्ध हुन्छ। मनुष्य र अमनुष्यबाट हानि हुँदैन। शरीरको रोग र मनको पीडा हट्दै जान्छ। संक्षिप्तमा भन्दा प्रतिकूलताहरू सबै शोधन हुन्छन्। भित्री मनले नसोचेर मुखले भन्दा मात्रै पनि उपकार हुन्छ भनेर बताइएको छ।

उहिले एउटी बूढीआमाले बुद्धप्रति श्रद्धा पलाएर एकजना बूढा जड (केही नजान्ने)लाई एकजोडा वस्त्र चढाई धर्म सुनाउन आग्रह गरिछन्। ती वृद्धले धर्म सुनाउन नजानेकोले मनमा कष्ट भएपछि 'न जान्नाले नै मलाई दु:ख भयो' भनेर दोहोर्‍याई-दोहोर्‍याई भनेछन्। ती बूढीआमाले यसरी बुझिछन् कि अज्ञानको बीउबाट नै दु:खरूपी फल आउँदो रहेछ। यसरी बुझेपछि उनले सत्यको दर्शन पाइछन्। ती आचार्यले गर्दा संसाररूपी दु:खको समुद्रबाट पार भई स्तुति गरिछन्। त्यतिबेला एउटा चोरले ती वृद्धसँग भएको वस्त्र चोर्छु भन्ने संकल्प गरेर उनको पछि पछि लागेछ। ती वृद्ध घरभित्र पसिसकेपछि चोरले 'वस्त्र देऊ' भनेर माग्दा वृद्ध डराएर भने

"बा...हि...र....आ...उ. .न....स...क्नि.....न" "घरको प्वालवा...टै मा.....ग.." चोरले एउटा हातले माग्यो। वृद्धले भने 'मलाई पनि यजमानले दुवै हातले दान गरेका हुनाले तिमीले पनि दुवै हातले माग।' अनि उसले दुवै हात पसारेपछि वृद्धले उसका दुवै हातलाई समातेर डोरीले कसेर थाममा बाँधिदिए। अनि बाहिर आएर मैले जस्तै शरणगमन गर भनि प्रत्येकपटक त्रिरत्नको शरणगमन गर्दाखेरि लट्ठीले टाउकामा हानेर चोरलाई छोडिदिए। चोर पनि लडखडिँदै खोलाको छेउमा पुग्यो। कुनै अपरिचित व्यक्तिले "तिमी किन लडखडाएको ?" भनी सोध्दा उसले भन्यो, "म चोर हुँ तर मभन्दा पनि ठूलो चोर त त्यो श्रमण रहेछ। उसले मलाई प्रत्येक शरणगमन भन्दाखेरि एक एक पटक वेसरी लट्ठीले पिट्यो। बुद्धमा अभिज्ञा भएकोले तीनओटा मात्र रत्न बनाउनु भएको रहेछ। चारओटा रत्न बनाइदिएको भए म पक्कै पनि मर्ने थिएँ।" यसरी बुद्धमा श्रद्धा गर्दै पुलमुनि पानीमा पस्यो। त्यही बेलामा अनेकौं अमानुषहरू आएर पुलमा जान खोज्दै थिए। परन्तु जान सकेनन् र सोच्न थाले 'पहिले त हामी सजिलरी जान सक्थ्यौं, आज किन यस्तो भएको होला ? अनि त्यो मानिसलाई सोधे "तिमीले के विद्या जानेका छौ ?" उसले भन्यो "त्रिरत्नको शरणगमन थाहा छ, त्यो बाहेक अरू केही थाहा छैन।" त्यो सुनेर ती दुष्टहरूले पनि शरणगमनमा श्रद्धा गरे र त्यो देह त्याग गरेपछि देवलोकमा जन्म लिन पुगे भन्ने ख्याति छ। त्यो चोर पनि बुद्धमा श्रद्धा आएर भिक्षु भयो रे भन्ने सुनिन्छ।

संयोगका फाइदामा नामको लाभ र मानको लाभ पर्दछन्। यी मध्ये शरणगमन गएपछि बुद्धमार्गी भन्ने नामको लाभ हुनु नामलाभ हो। यसलाई उत्तम पुरुषको दर्जामा राखिन्छ। मानलाभमा देवतासहित लोकले पूजा गर्न योग्य हुनजान्छ। सामान्यतया राम्रोसँग सुरक्षा हुने स्थानमा

गइन्छ भने विशेष गरेर शासनप्रेमी देवताहरूले[१८] रक्षा गर्छन्। व्यापारीले साथी पाए जस्तै यो जीवनमा पनि चित्तमा आनन्द हुन्छ र जन्म जन्मान्तरसम्मै त्रिरत्नबाट न अलगिने गरी श्रद्धा विश्वास प्राप्त हुन्छ।'

अन्तमा हुने फाइदाहरूमध्ये आफूले पाउने फाइदा के हो भने बुद्धको शरणमा जानाले स्वयं बुद्ध वनिन्छ। धर्मको शरणमा जानाले अटुट धर्मचक्रको प्रवर्तन गरिन्छ। संघको शरणमा जानाले अनेक भिक्षुगणको संघ र वोधिसत्वको संघ जम्मा हुने शकुन प्राप्त हुन्छ। त्यस्तै अरूलाई हुने फाइदामा आफूले यसरी सिद्धिलाभ गरेको बलले नै विनेयजनहरू (ज्ञानमा पस्न योग्य व्यक्तिहरू) पनि क्रमशः बुद्धशासनमा पसेर त्रिरत्नको प्रत्यक्षता सिद्ध गर्छन्॥

---

१८ बौद्ध शासनको अहित गर्ने देवदेवी यक्षयक्षिणी आदि अमानुष पनि थुप्रै हुन्छन् र तिनीहरूबाट बचाउनको लागि नै शासनप्रेमी यक्षहरूले भगवान् शास्नालाई आटानाटीय सुत्तको विधि चढाएका थिए।

# चित्तोत्पाद

चित्तोत्पादमा[१९] श्रावकको चित्तोत्पाद र महायानको चित्तोत्पाद गरी दुई थरीका हुन्छन्। पहिलो श्रावक चित्तोत्पादमा पनि अर्हत्, प्रत्येकबुद्ध र सम्यक्सम्बुद्ध गरी तीन प्रकारका चित्तोत्पाद भए पनि तिनीहरू श्रावकयान अन्तर्गत पर्ने भएकोले यहाँ व्याख्या गर्न चाहन्न। महायानको चित्तोत्पादमा पनि चित्तमात्रीको र माध्यमिकको गरी दुई किसिमका हुन्छन्। चित्तमात्रीको चित्तोत्पाद परम्परा आर्य मैत्रेयनाथको परम्परा अनुसार आचार्य असंगको बोधिसत्वभूमिमा आधारित संवरविंशिकाको चलन हो। माध्यमिकको परम्पराचाहिं आर्य मञ्जुश्रीको परम्पराअनुसार आचार्य नागार्जुनले अवतंसक सूत्रबमोजिम चलाएको र बोधिचर्यावतार आदिको चलन हो। यसलाई जेतरी आदि आचार्यहरूले अपनाएका हुन्। ती दुई आचार्यहरूका परम्पराका लक्षण, चित्तोत्पाद गर्ने विधि, शिक्षाआदि र भिन्नताहरूको बारेमा र विशेष गरी माध्यमिक परम्पराका विधि एवं शिक्षा आदिको बारेमा मैले रचेको "चित्त उत्पादको विधि" भन्ने किताबमा स्पष्ट पारेर लेखिएको छ। त्यसमा हेर्नुहोला॥ मोटामोटी रूपमा भन्ने हो भने प्रातिमोक्षसंवर, बोधिसत्वको संवृत्ति बोधिचित्त उत्पाद र तन्त्रका अभिषेकहरू विधिबाट हुन्छन्। ध्यानसंवर, अनास्रवसंवर, परमार्थबोधिचित्तचाहिं विधिद्वारा उत्पन्न हुँदैनन्। त्यसोभए वैरोचनाभिसंबोधि भन्ने ग्रन्थमा "परमार्थ बोधिचित्त उत्पादको श्लोक तीनपटक पढ्नू" भनेकोसँग

---

[१९] चित्तोत्पाद या बोधिचित्तोत्पाद भनेको गुरु र त्रिरत्नको अगाडि सम्पूर्ण सत्वको हितको लागि बुद्ध बन्नेछु भन्ने सङ्कल्प गर्नु र त्यो भावलाई चित्तमा जगाइरहनु हो।

विरोध हुन्छ भन्ने हो भने यसका दुई किसिमका उत्तर छन् । ओंठे जवाफ र सिधा जवाफ। ओंठे जवाफमा:- महामुद्रालाई अभावना[२०] हो भन्छौ भने तत्वसंग्रहमा "महामुद्राको भावना गर्नू" भनेकोसँग पनि विरोध हुन्छ भन्ने मान्नु पर्‍यो। यदि तत्वसंग्रह योगतन्त्र हो, त्यसमा देवकायभावनालाई नै महामुद्रा भन्ने गौण नाम दिइएको हो, अनुत्तर पक्षको महामुद्रा[२१] कहाँ हो र ? भन्ने हो भने वैरोचनाभिसम्बोधि पनि चर्यातन्त्र हो र ज्ञानसम्भारको मन्त्रलाई परमार्थबोधिचित्तको गौण नाम दिइएको मात्र हो, पारमिता पक्षको परमार्थबोधिचित्त उत्पादको विधि भन्न खोजेको होइन। यदि वैरोचनाभिसम्बोधि तन्त्र हो तापनि त्यसको विधिलाई पारमितामा पारेमा के गल्ती होला र ? भन्ने हो भने, तत्वसंग्रह योगतन्त्र भए तापनि यसको विधिलाई अनुत्तर महामुद्रामा पारेर भावना गरे के गल्ती होला त[२२] ? यदि योगतन्त्र र अनुत्तरतन्त्र अलग कुरा भएकाले तिनीहरूको विधि मिसिनु हुँदैन भन्ने हो भने वैरोचनाभिसम्बोधि भन्ने गुह्यतन्त्र र पारमिताको विधिलाई मिसाएर पनि कसरी मिल्छ त ? यदि बेग्लै यानको विधि मिसिए पनि श्रद्धापूर्वक परमार्थचित्त उत्पादको विधि गरेमा के बिग्रिन्छ ? भन्ने हो भने, अलग तन्त्रको विधान मिसिए

---

२० भावना गर्नेवाला र भावना गरिने कुरा दुई अलग कुरा नै त्यहाँ नभएको अवस्थाको भावनालाई अभावना भनिन्छ।

२१ महामुद्रा, महासन्धि र महामाध्यमिक भन्ने कुरा महायान वज्रयानका अतिविशिष्ट विपश्यना विधिहरू हुन् ।

२२ यहाँ बुझ्नु पर्ने कुरा के हो भने तन्त्रयान र पारमितायान महायानका अलग यानहरू हुन् र तन्त्रयानमा पनि क्रिया, चर्या, योग र अनुत्तर गरी चार भिन्दै किसिमका विधिविधानहरू छन् ।

पनि योगतन्त्रको विधिको महामुद्रामा अनुत्तरको भावना गरेमा के विग्रिन्छ त ? त्यस्तो गर्न न कहाँ हुन्छ र, यस्तो गरेमा महामुद्रामा त हठभावनाको दोष लाग्छ भन्छौ भने परमार्थ बोधिचित्तको विधि गराएमा पनि हठविधि गरेको दोष लाग्छ। हठविधि गर्नाले के गल्ती हुन्छ ? भन्छौ भने हठभावना गर्नाले के विरोध हुन्छ ?। भावना विकल्प हो, महामुद्रा त निर्विकल्प भएको हुनाले विरोध हुन्छ भन्ने हो भने विधि पनि संवृत्ति हो, परमार्थबोधिचित्त परमार्थ हो अत: उस्तै खालको विरोध भइहाल्छ। त्यसकारण दर्शन, सिद्धान्त र तन्त्रको क्रम न बुझेका जडहरूले नाम मात्रै मिलेको कारणले गर्दा भ्रममा परेर अर्थको मर्म थाहा नपाएका मात्र हुन्।

अब सिधा जवाफ यस्तो छ– मोटामोटी रूपमा भन्दाखेरि सबै धर्मको सैद्धान्तिक व्यवस्था, यानक्रम बुझ्नु अति महत्वपूर्ण हुन्छ। यसमा प्रत्यक्ष भेद र गौण भेद बुझ्नु पर्छ। त्यसमा पनि सैद्धान्तिक पक्षमा श्रावकयानको परमार्थ महायानको संवृत्ति हुन पनि सक्छ। तन्त्रमा पनि परमार्थ बोधिचित्तको रङ र अकारसहितको भावना गर्नु भनेको पनि पाइन्छ। शून्यता र सर्वधर्मरहितता आदि शब्दले शून्यभावनालाई परमार्थबोधिचित्तको नाम दिएको पनि पाइन्छ। चन्द्रमालाई संवृति र वज्रलाई परमार्थको नाम दिएको पनि पाइन्छ। यस्ता कुराहरू थुप्रै भएकोले तिनीहरूको मतलब राम्रोसँग बुझ्नु पर्ने हुन्छ। तन्त्रको विधि र पारमिताको चित्त-उत्पाद मिसाएर मिसिँदैन। पारमिताका प्रणिधि र प्रस्थान बोधिचित्तका विधि सबै सूत्र र शास्त्रहरूमा बताइएका छन्। परमार्थ बोधिचित्तको विधि कुनै सूत्र र तन्त्रमा पनि बताइएको छैन। विशेष गरी माध्यमिकका आचार्य नागार्जुन र आचार्य शान्तिदेवको बोधिचर्यावतारआदिमा त बताइएकै छैन। चित्तमात्रीका

आचार्य असंगको[२३] 'संवरविंशिका' र अतीशको चित्त-उत्पादको विधानमा पनि परमार्थ बोधिचित्तको विधि वताइएको छैन। नबताइए पनि श्रद्धाले गरेमा के हुन्छ त ? विधिबाट उत्पाद गरेको बोधिचित्त त संवृतिबोधिचित्त हुन जान्छ, परमार्थ कहाँ हुन्छ र ? सबै सूत्रहरूमा अनुत्पन्न धर्ममा क्षान्तिलाभ भनिएको पाइन्छ परन्तु उत्पन्न धर्ममा क्षान्तिलाभ गर्ने भन्ने कुरा त कहीं पनि सुनिएको छैन। त्यसैले विधि नभएकोमा विधि गर्ने, परमार्थलाई संवृतिमा खसाल्ने, अनुत्पन्नलाई उत्पन्न गराउने, अवाच्यलाई वाच्य बनाउने, अनालम्वनलाई आलम्वन गराउने समेत गरियो भने त्यो भन्दा वढी अरू के मिसाउन बाँकी रह्यो त ? सूत्रालंकारमा भनिएको छ-

**"तमः प्रकारः कतमोऽयमीदृशो**
**यतोऽविपश्यन् सदसन्निरीक्षते ।"**

"भएकोलाई नदेखेर नभएकोलाई देख्नु जस्तो अन्धकारले ढाकेको अरू के होला ?" यो भनेको यस्तै खालका व्यक्तिहरूलाई हो। आँखा कमजोर भएकाले गर्दा भएको रूपलाई नदेखेर नभएको केश, पहेंलो शंख आदि देखे जस्तै जडहरूले पनि धर्ममा भनिएका पिटक व्यवस्था, अभिषेक आदि गम्भीर विधिहरूलाई नदेखेर प्रणिधि र प्रस्थान वोधिचित्त उत्पादमा तन्त्रका देवभावना गर्ने जस्ता कहीं नबताइएका काम गर्छन्। परमार्थवोधिचित्त-उत्पादमा अनुवाक (पहिले गुरुले भन्ने, अनि पछि चेलाले भन्ने) विधि अपनाउने जस्ता कुरा वुद्धले नभनेको काम भएकोले त्यसवाट वुद्धशासन दूषित हुन जान्छ। त्यो त अन्धकारमा

---

२३ असंगको संवरविंशिकाकै आधारमा चन्द्रगोमीले व्याख्या गरेका हुन्।

र्धामलो आंखा भएर वस्नु जस्तै हो। माथि भनिएको त्यस्तै व्यक्तिलाई हो।

त्यसो भए संवृत्तिवोधिचित्त र परमार्थ वोधिचित्त-उत्पत्तिका प्रत्यय के हुन् त ? सूत्रालंकारमा भनिएको छ–

**"मित्रबलाद् हेतुबलान्मूलबलाच्छ्रुतबलाच्छुभाभ्यासात् ।**

**अदृढदृढोदय उक्तश्चित्तोत्पादः पराख्यानात् ॥"**

अर्थात् संवृतिवोधिचित्त पनि मित्रको वलले, हेतुको बलले, मूलको बलले, श्रुत (सुनेको) वलले प्राप्त भएको चाहिं अस्थिर हुन्छ र पुण्यभावना (कुशलको अभ्यास) को वलले भएको चाहिं स्थिर हुन्छ। यी सवै अरूले वताएर उत्पन्न हुने चित्तोत्पादका प्रत्यय हुन्। यसरी आचार्यको अनुवाक (पछि पछि भनिएको वचन)लाई राम्रोसँग ग्रहण गरेर लिइएको सांकेतिक (कुरा) नै संवृतिवोधिचित्त उत्पादको हेतु हो। परमार्थवोधिचित्त उत्पादको हेतुको वारेमा महायान सूत्रालंकारमा भनिएको छ–

**"सूपासितसम्बुद्धे सुसम्भृतज्ञानपुण्यसम्भारे ।**

**धर्मेषु निर्विकल्पज्ञानप्रसवात् परमताऽस्य ॥"**

(सम्बुद्धहरूको राम्रोसँग उपासना गरेर, ज्ञान र पुण्यको सम्भारलाई राम्रोसँग पूरा गरेर धर्महरूमा निर्विकल्प ज्ञान उत्पन्न भएपछि यो बोधिचित्त परमार्थ हुन्छ)

अतः संवृत्तिबोधिचित्तमा जस्तै विधि अपनाएर यो उत्पन्न नहुने भएकोले नै परमार्थ भनिएको हो। त्यसैले संवृत्तिवोधिचित्त अरूबाट देखाइने (बुझाइने) हुन्छ भने परमार्थवोधिचित्त स्वयंले नै वुझ्ने कुरा हो। यसरी संवृत्ति र परमार्थ बोधिचित्त विधिवाट उत्पन्न हुन्छन् कि हुँदैनन् भन्ने कुराको भिन्नतालाई वुझ्नु पर्छ।

संवृत्ति बोधिचित्तको पनि 'प्रणिधि' र 'प्रस्थान' को शिक्षाका दुई परम्पराहरू छन्। त्यसमध्ये चित्तमात्रीहरूको परम्पराको शिक्षा 'संवरविंशिका' आदिमा बताइएको हुनाले

यहां भनिएको छैन। माध्यमिक परम्पराअनुसारको चित्त-उत्पाद गर्ने शिक्षामा प्रणिधिचित्त-उत्पाद र प्रस्थानचित्त-उत्पाद गरी दुई किसिमका शिक्षाहरू छन्। त्यसमध्ये पहिलो (प्रणिधि) मा तीन किसिमका छन्– संक्षिप्तमा, मध्यममा र विस्तारमा। संक्षेपमाचाहिं मनले लिइने 'सबै प्राणीहरूको हितको लागि बुद्धत्व लाभ गर्नेछु' भन्ने सोचाइ नै प्रणिधिबोधिचित्त हो। मध्यमशिक्षामा प्रणिधिचित्त त्यागिने हेतु (कारण)लाई चिनेर त्यसको प्रतिपक्षको भावना गर्ने तरिका हुन्छ। त्यो पनि तीन किसिमको छ। पहिलोमा यदि हरेस खाएर सम्भारहरू पूरा गरेको वुद्ध बन्नु दुर्लभ हुने रहेछ भन्ने सोचेर प्रणिधिका शिक्षाहरू पालन नगरेको हो भने त्यसको प्रतिपक्ष भावनाका निमित्त त्यसरी हरेस नखानको लागि महायान सूत्रालंकारमा यसरी बताइएको छ–

**"मनुष्यभूताः संम्बोधिं प्राप्नुवन्ति प्रतिक्षणम्।**
**अप्रमेया यतः सत्वा लयं नातोऽधिवासयेत्॥"**

"असंख्य सत्वहरूले मनुष्य भएर नै क्षण क्षणमै सम्बोधि प्राप्त गरेका हुन्छन्। अतः हरेस खाने काम नगर्नू।" त्यस्तै बोधि चर्यावतारमा पनि बताइएको छ–

**"तेऽप्यासन् दंशमशका मक्षिकाः कृमयस्तथा।**
**यैरुत्साहवशात् प्राप्ता दुरापा बोधिरुत्तमा॥"**
**किमुताहं नरो जात्या शक्तो ज्ञातुं हिताहितम्**
**सर्वज्ञनीत्यनुत्सर्गाद् बोधिं किं नाप्नुयाम्यहम्॥"**

अर्थात्

**"ती पनि डाँस, माखो र थिए कीरा र मच्छरै।**
**उत्साहको बल लिई पाए उत्तम बोधि नै॥**
**जन्मैले म मनुष्यै हुँ सक्छु जान्न हिताहित।**
**पक्डे सर्वज्ञको नीति बोधि पाउन्न मै किन ?॥"**

यसरी सोच्नु पर्छ। यस सम्बन्धमा एउटा कथा छ– पहिले एक समयमा एउटा रुखको पातमा ७ ओटा कीराहरू बसेका थिए। तिनीहरूलाई हावाले हुत्याएर लगेछ र महासागरमा (पातसहितै) खसालेछ। त्यहाँभित्र वैरोचनको एउटा ठूलो प्रतिमा थियो। भुमरिमा पर्नाले ती सातओटा कीराहरूले उक्त प्रतिमालाई ३ पटक परिक्रमा गर्न पुगेछन्। त्यसले गर्दा उनीहरू सातजना शूद्रपुत्रीको रूपमा जन्म लिन पुगे। उनीहरूलाई आफ्नो कुल (नीच मानिएको) र सम्पत्ति थोरै भएको देखेर दिक्क लागेर अरूको नोकर भएर दाउरा घाँस खोज्दै सम्पत्ति आर्जन गरी त्यसलाई सदुपयोग गरेर पुण्य आर्जन गरे। त्यसले गर्दा फेरि कृकि राजाका ७ कुमारी भई जन्मे। अनि काश्यप बुद्धलाई पूजा सत्कार गर्न थाले। त्यसबाट उनीहरूलाई भविष्यका बुद्ध बन्ने व्याकरण (भविष्यवाणी) प्राप्त भएको थियो।

त्यस्तै एकपटक एउटा कुक्कुरले लखेट्दाखेरि एउटा सुँगुर भाग्दैभाग्दै तीनपटक एउटा स्तूपको परिक्रमा गर्न पुगेछ जसले गर्दा उसलाई पछि अर्हत्व लाभ भएको थियो। एक ब्राह्मणपुत्रीले भगवान् बुद्धलाई एक पिण्डपात्रभरि भात चढाएकी थिइन्। त्यसकै पुण्यले गर्दा सबै जन्ममा उनले सुगति प्राप्त गरी अन्तमा प्रत्येकबुद्ध बन्ने भविष्यवाणी ( आगम) पनि प्राप्त गरिन्। परन्तु उनको पति ब्राह्मणपुत्रले भने, "गौतमले राज्यसमेत त्याग गरेर पनि अहिले एउटा पिण्डपात्रको भोजनका निमित्त झूटो बोल्दैछन्, बिचरालाई गाह्रै भएछ।" अनि भगवान्ले भन्नुभयो "तिम्रो ढोकाको छेउको न्यग्रोध (वर) को बीउ कत्रो थियो ?" उसले भन्यो, "सर्स्यूं भन्दा पनि सानो थियो।" भगवान्ले भन्नुभयो, "तिमी पनि झूटो नबोल" (तात्पर्य के भने बीज पहिले सानो भए पनि पछि ठूलो हुँदै विकसित भएर रुख बन्न पुग्छ। त्यस्तै पुण्य पनि अहिले बीज रूपमा सानै भए पनि

पछि बढाउँदै गएपछि बुद्धत्वसम्म प्रदान गर्ने हुन्छ।) यो सुनेर उसको विश्वास पलायो र उसलाई सत्यको[२४] दर्शन भएको थियो।

त्यस्तै भद्रकल्पिकसूत्रमा हर्रो या घाँसको बत्ती या एउटा गोबरको डल्लो मात्रै चढाएर पनि चित्त-उत्पाद ग्रहण गरेर अभिसम्बोधि (बुद्धता) लाभ गरे भनिएको छ। त्यसै सूत्रमा भनिएको छ "यसप्रकार बुद्धहरूलाई सानै दक्षिणा चढाएको परिपाकले पनि त्यस्तो हुन्छ। संसारमा पनि त्यसको त्यस्तो फल हुन्छ भने कुन विद्वान्ले बोधिचित्त उत्पाद गर्दैन होला त ?" (यस्तो सोच्दै आत्मबल बढाउनु पर्छ)

**दोस्रोमा–** आलस्यले गर्दा बोधिचित्त त्यागिएको हो भने अपनाउनु पर्ने प्रतिपक्षको कुरा आउँछ। कोही जड व्यक्तिहरूले पुण्य गर्दा गर्दै पनि यही जन्ममा तत्कालै फल नपाउनाले (दृष्टधर्मसुखविहार नमिल्नाले) गर्दा मन धमिलो पारेर पुण्य नगर्ने हुन्छन्। उदाहरणः- दान दिनाले सम्पत्ति (बढ्नुको सट्टा) घट्दै जानु, शीलको पालनले शरीर कमजोर हुँदै जानु, पुण्यको प्रयोग गरे पनि अधिष्ठान लाभ नहुनु, अथवा रोगीको लागि पूजा, पाठ, बलि, जप या उष्णीषविजयाआदि धारणीहरू पढ्दा पढ्दै उसको देहान्त हुनु जस्ता घटना भए भने यसले त केही पनि भएन भनेर त्यस्ता काममै अल्छी लागेर बोधिचित्तलाई त्याग्नेहरू पनि छन्। त्यसको उपचारको लागि (प्रतिपक्षको लागि) बोधिचर्यावतारमा यस्तो भनिएको छ–

**"एवं सुखात् सुखं गच्छन् को विषीदेत् सचेतनः**
**बोधिचित्तरथं प्राप्य सर्वखेदश्रमापहम् ॥"**

अर्थात्,

---

[२४] सत्यको दर्शन हुनु भनेको स्रोतआपन्न हुनु हो।

"सबै खेद श्रमै हर्ने वोधिचित्तरथै भिन्ना
मुखबाट सुखै जादा को होस खिन्न सचेत नि ? ॥"

यस्तो बताइएको हुनाले त्यस्तो मनन गर्नमा उत्साह उत्पन्न हुन पुग्छ। त्यसमा पनि मृत्यु त सात प्रकारले हुन्छ। १. आयु सिद्धिनाले, २. कर्म सिद्धिनाले, ३. पुण्य सिद्धिनाले, ४. आयु र कर्म दुवै सिद्धिनाले, ५. आयु र पुण्य दुवै सिद्धिनाले, ६. कर्म र पुण्य दुवै सिद्धिनाले, ७. आयु, पुण्य र कर्म तिनओटै सिद्धिनाले। त्यसमध्ये आयु सकिएको भए उष्णीषविजया, दुर्गतिपरिशोधनको दीर्घायु विधिआदिले उपकार गर्छन्। कर्म सकिएको भए मार्नलाई निश्चित गरिएका प्राणीहरूको प्राणहरण हुन नदिएर जीवन दिने (किनेर या अन्य जे उपायले गर्न सकिन्छ त्यो गरेर) गर्नमा बढाउन सकिन्छ। सामुन्ने पाठ गरिदिए पनि उपकार हुन्छ। पुण्य सकिएको भए पुण्य बढाउनको लागि गुरुपूजा गर्ने, त्रिरत्नको पूजा अर्चना आदि गर्ने, बुद्धपूजा गर्ने, धर्म पाठ गर्ने, संघदान गर्ने, भूतलाई बलि दिने (यो बलि भनेको प्राणी हत्या गर्ने होइन) आसक्ति हटाउन दान (त्याग) गर्ने, रोगको उपचारको निमित्त औषधि आदि सेवन गर्ने, मनको चञ्चलताको लागि आलम्बन लिने, सबैको उपकारको लागि अधिष्ठान र शुभ साइतआदि मिलाउने गर्नाले बाधा रोकिन्छ। एक एक कुरा सकिएमा ती ती बढाएमा हुन्छ, दुई दुई कुरा सकिएका भए ती दुवै कुरा बढाउनु पर्ने हुन्छ परन्तु धेरै मुस्किल हुन्छ। तर तीनओटै सिद्धिएर मृत्यु हुन लागेको भए कुनै उपायले पनि बचाउन सकिदैन। जस्तै आगो निभिसकेपछि धूवाँ निकालिरहन सकिदैन, झरना (मूल) नै सकेपछि पोखरी रहन सक्दैन, त्यस्तै हो। भगवान् बुद्धले पनि बचाउन नसक्नु, उपचार गर्दा पनि नहुनु सबै सकिएको चिन्ह हो। त्यसकारण उपचार लागेन भनेर श्रद्धा, विश्वास छोड्नु हुदैन। त्यो त बिछयौनामा मर्दा खेरि

बिछ्यौनै ठीक नभएर मरेको भन्नु या घरमा मर्दा खेरि घर नै ठीक नभएर मरेको भन्नु जस्तै हुन्छ। या भोजन गरेर मरेपछि भोजन नै ठीक नभएर मरेको र, औषधि उपचार गर्दागर्दै मरेमा औषधि नै ठीक नभएर मरेको भनी भोजन र औषधि गर्ने काम नै त्याग्न कहाँ सकिन्छ ? त्यो त आयुको अन्त भएको हो। उपचार र पुण्यकर्म ठीक नभएको होइन।

अझै कर्महरू पनि तीन प्रकारका हुन्छन्। यही जीवनमा फल भोग्न सकिनेलाई दृष्टधर्मवेदनीय, आउने जीवनमा फल मिल्नेलाई उपपद्यवेदनीय र त्योभन्दा पछाडिका जीवनहरूमा फल मिल्नेलाई अपरपर्याय वेदनीय भनिन्छ। अभिधर्मकोषमा बताइएअनुसार पाप या पुण्य जे भए पनि त्यसको फल यही जीवनमा भोग्नको लागि क्षेत्र[२५], मन र वस्तु यी तीनोटै कुरा उत्तम हुनुपर्ने भएकोले उत्तम क्षेत्रमा राम्रो मनले राम्रो वस्तुद्वारा कुशल कर्म गरेमा यही जीवनमा त्यसको शुभ फल भोगिन्छ भने नराम्रो मनले नराम्रो वस्तुद्वारा अकुशल कर्म गरेमा यही जीवनमै अशुभ फल भोगिन्छ। यस्तो कर्मलाई नै दृष्टधर्मवेदनीय भनिएको हो। त्यस्ता कुशल या अकुशल गरेका व्यक्तिहरू अत्यन्तै दुर्लभ हुन्छन्। त्योभन्दा हलुका किसिमको कर्म गरिएमा दोस्रो जीवनमा फल मिल्न पुग्ने हुन्छ। त्यसैलाई उपपद्यवेदनीय याने अर्को पटकको जन्ममा भोगिने कर्म भन्छन्। त्योभन्दा पनि अझै फिका कर्म पर्‍यो भने आउँदो दोस्रो जन्ममै फल मिल्न नसक्ने हुनाले त्यसभन्दा पछाडिका अरू जन्महरूमा फल मिल्छ। त्यही नै अपरपर्यायवेदनीय कर्म हो। त्यसकारण पापमात्र गरिराख्नेहरू पनि सुखी देखिनु या पुण्यमात्र गर्नेहरू पनि दुःखी देखिनुमा

---

२५ दृष्टधर्मफलं कर्म क्षेत्राशयविशेषत: ४/५५ (अभिधर्मकोष) अभिधर्मकोषमा वस्तुको उल्लेख छैन।

उपपद्यवेदनीय या अपरपर्यायवेदनीय कर्महरू भएको लक्षण हुनसक्ने भएकोले कर्मविपाकमा होस पुऱ्याउनु पर्छ (अर्थात् कर्म गरेर फल मिल्दैन भन्ने खालको मिथ्यादृष्टि आउन दिनु हुँदैन।)

**तेस्रोमा** – सांसारिक दोष देख्नाले पनि वोधिचित्त त्याग गर्ने कारण हुन सक्छ। त्यस्तो अवस्थामा जन्म, वृद्ध, रोगी र मृत्यु देखेर या दुर्जनहरूका विपरीत किसिमका आचरणहरू देखेर दिक्क मानी धेरै कल्पसम्म संसारमा रहन वाक्क लागेर बोधिचित्त त्यागिने हुन्छ। जस्तैः- भीमसेन भन्ने एक राजाले उहिल्यै त्यसैकारणले गर्दा बोधिचित्त त्यागेका थिए। त्यस किसिमको बोधिचित्तपरित्यागको उपचारका निमित्त उनीहरूले पञ्च स्कन्धलाई मायावत् देख्ने, कल्प र क्षणमा भेदै नदेख्ने, तीनै कालहरूको अभाव देख्ने प्रज्ञाको विकास गर्नुपर्छ। त्यसबाट बोधिचित्त थामिन्छ। अझै गुरु र देवको भावना गरेको पुण्यसँग सम्बन्धित परिणामनाद्वारा पनि बोधिचित्त थामिन सक्छ। जस्तैः- आचार्य दिङ्नागले बोधिचित्त त्याग्न आँट्दाखेरि इष्टदेव मञ्जुश्रीले रोकेका थिए। तिनीहरूको कथा पनि जतिसक्यो विस्तारमा भनिदिनुपर्छ। (यो सुनेर पनि आँट आउँछ)।

(यी त भए संक्षिप्त र मध्यम शिक्षा) अव विस्तारको शिक्षामा (बताइन्छ)। १. बोधिचित्तको उत्पत्ति हुने हेतु। २. यसलाई फैलाउँदै जाने प्रत्ययहरू ३. यसलाई बिग्रिन नदिने उपायहरू।

१. (बोधिचित्तको) हेतु आफू र अरूलाई दुःखबाट मुक्त गराउने इच्छा करुणा र सुखसँग संयोग हवस् भन्ने मैत्री यी दुईबाट उत्पन्न हुने भएकोले यी दुईलाई नै भावना गर्न प्रयत्न गर्नुपर्दछ भनी सूत्रालंकारमा बताइएको छ।

करुणाको ग्रन्थी मैत्री हो, त्यो दुःखबाट सम्यक्‌रूपमा उत्पन्न हुन्छ– "**करुणासेको मैत्री तद्दुःखे...**"

२. यसलाई फैलाउने प्रत्ययहरूमा उत्तम कल्याणमित्रको आश्रय लिनु, त्रिरत्नमा र इष्टदेवमा मनोविश्वास र श्रद्धा उत्पन्न गर्नु, सूत्रमा बताइए अनुसारका मारकर्महरूलाई बुझेर त्याग्दै जानु, मारकर्म नहोस् भनी दशैदिशाका बुद्ध बोधिसत्वमा स्तुति-प्रार्थनाहरू गर्नु, बोधिचित्तका अनुशंसाको मनन गर्नु, संसार एवं निर्वाणको दोषमा भावना गर्नु, बुद्ध बोधिसत्वहरूका ऋद्धि र अभिज्ञाआदि गुणहरू सम्झेर स्व-परको हित गर्न सकियोस् भन्ने उत्साह जगाउनु यी सात कुराहरू पर्छन्। यसरी भावना गरेमा सांसारिक दोष देख्दा पापदेशना गर्ने मन आउँछ। निर्वाणको दोष[२६] देख्दा शून्यतामा अत्यधिक भ्याम्मिनुबाट मन रोकिन्छ। आफ्नो र अरूको ठूलो हित हुने देखेमा अहिलेको र अन्तको फलमा उत्साह पैदा हुन्छ। गुरु र त्रिरत्नमा श्रद्धा गरी स्तुति गर्नाले मारकर्म आइलाग्दैन, बुद्ध वोधिसत्वहरूको अधिष्ठान चाँडै नै प्राप्त हुन्छ। यसप्रकार बाधाहरूलाई त्यागेर चाहिएको चीज लाभ गर्न सकिने हुन्छ र बोधिचित्त पनि वृद्धि हुँदै जान्छ।

३. वोधिचित्तलाई बिग्रिन नदिने उपायमा यसरी सचेत भई भावना गर्नुपर्छ कि, गुरु र त्रिरत्नमा श्रद्धा नगरी अरूको सम्पन्नतामाथि ईर्ष्या गरेमा बोधिचित्त बिग्रिन्छ। सत्वहरूको हितमा झन् झन् अघि नबढेर आफ्नो हितमा मात्र रुचि लिंदै जान थालेमा वोधिचित्त बिग्रिन्छ। ठूलो उपायमा प्रयत्न गर्न नसकेर 'मनलाई चिने मात्रै पनि पुगिहाल्छ' भन्ने

---

[२६] यहाँ शून्यतामा अत्यधिक भ्याम्मिनु निरोधसमापत्तितिर जानुलाई भनेको हो।

धारणा लिन थालेमा बोधिचित्त बिग्रिन्छ। बोधिसत्वहरूका गुणलाई बुझ्न नसकेर आफूले त्यस्ता गुणको खोजीमा प्रयत्नै गर्न छोडेमा बोधिचित्त बिग्रिन्छ। अत: यिनीहरूको उपचारस्वरूप श्रद्धा, उत्साहआदि कुराको जति सक्यो भावना गरिरहनु पर्छ। प्रणिधिबोधिचित्तको शिक्षा यही हो।

अब बोधिप्रस्थानचित्तका शिक्षाहरू पनि तीन किसिमका छन्। संक्षिप्तमा, मध्यममा र विस्तारमा।

**संक्षिप्तमा–** आफ्नो प्रयोगको क्षमताअनुसार अकुशल कर्मलाई त्यागेर कुशल कर्म गर्ने अभ्यास गर्नुपर्छ। कतै विवशताले गर्दा अकुशल कर्म गर्न पुगियो भने दिनमा गरेका अकुशलको राती प्रतिदेशना गर्नुपर्छ र रातमा गरेका अकुशलको दिनमा प्रतिदेशना गर्नुपर्छ। फेरि कुशल कर्महरू अलिकति मात्रै गरियो भने पनि ती सबैलाई सर्वसत्वहरूको हितको लागि उनीहरूको बुद्धताप्राप्तिका निमित्त परिणामना गर्नुपर्छ। राजाववादसूत्रमा भनिएको छ- "हे महाराज ! तिमीले गर्नुपर्ने कामकाज धेरै छन्। रातदिन दान आदिदेखि लिएर प्रज्ञापारमितासम्मका अभ्यासहरू गरिरहन सक्दैनौ। त्यसैकारण हे महाराज ! तिमीले सम्यक् सम्बोधिमा श्रद्धा, विश्वास, चाहना (प्रणिधि) गर्दै सधैं स्मृतिपूर्वक मन लगाएर भावना गर्ने गर। अरूले गरेका कुशल कर्महरूको अनुमोदन गर्ने गर। त्यसरी चढाएको (पुण्यसँग) सबै प्राणीको पुण्यलाई मिसाएर सबै सत्वहरूको निमित्त प्रत्येक दिन एकैनास गरी सम्पूर्ण बुद्धका धर्महरूलाई अनुत्तरबोधिमा परिणामना गरिदेऊ। हे महाराज ! तिमीले यस्तो गरेमा राज्य पनि गर्न सक्नेछौ, राजकाज पनि बिग्रिने छैन र बोधिसम्भार पनि पूर्ण हुनेछ।"

**मध्यममा–** रत्नकूटसूत्रमा चार कृष्ण धर्म (अकुशल कर्म) लाई त्यागेर चार कुशल कर्म अभ्यास गर्नू भनी यसरी बताइएको छ, - "चारओटा धर्महरू जुन व्यक्तिमा छन्

उसले बोधिचित्तलाई बिर्सिन्छ। १. सद्गुरु र पूजनीय व्यक्ति (माता, पिता आदि)लाई झुक्याउनु, २. पश्चात्ताप गर्न नहुने कुरामा (कुशल कर्म गरेकोमा) पश्चात्ताप गर्नु, ३. महायानमा लागेका व्यक्तिलाई अनादर र अपशब्द प्रयोग गर्नु, ४. कोही बदमासले अरूलाई (या स्वयं बोधिसत्वलाई पनि) दोषी ठहऱ्याउने काम गरेको र दोषारोपण गरेको देख्दा ऊ प्रति सानो मन गराउनु (अर्थात् उसको हित गर्न छोडिदिनु)।

त्यसैगरी चार किसिमका शुक्ल धर्म (कुशल कर्म) को अभ्यास छ भने सबै जन्ममा बोधिचित्तको स्मरण भई रहनेछ याने बिर्सिंदैन। ती चार धर्महरू के हुन् भने - १. जानी जानी झूठो नबोल्नु, २. कपट नगरी सत्वहरूको सधैं हिताशयी भएर रहनु, ३. सबै बोधिसत्वहरूलाई शास्ताको रूपमा देखिरहनु, ४. बोधिसत्वहरूले प्रशंसा गरेकोलाई आफूले पनि चारैतिर प्रख्यात बनाइदिनु र पूर्ण परिपाक भएका सत्वहरूलाई श्रावकयानमा नलगाएर अनुत्तरबोधिमा लगाउनु।

यी माथि भनिएका कुराहरूलाई त्यागने र ग्रहण गर्ने कुराको राम्रो अभ्यास गर्नुपर्छ।

**विस्तारमा** - यसमा पनि तीन किसिमबाट अभ्यास गर्नु पर्छ। त्यसमध्ये पहिलोमा प्रस्थानबोधिचित्तको उत्पत्ति हुने हेतु (कारण) चाहिं प्रणिधिबोधिचित्त हो। अतः त्यसमा मन लगाएर त्यसैलाई बढाउने उपायहरूको खोजी गर्दै बिग्रिने कारणहरूलाई त्यागिदिनु पर्छ। सांसारिक दुःख र निर्वाणको दोष बुझेर सत्वहरूलाई त्यो निर्वाण विषालु भोजन जस्तो हो भन्ने सम्झाई त्यता जानबाट रोक्नुपर्छ। दोस्रो बोधिचित्तलाई बढाउँदै जाने प्रत्ययहरूमा दशैदिशाका

बुद्धबोधिसत्व र गुरुसमेतलाई सम्झेर दिनमा तीनपटक र रातमा तीनपटक सप्ताङ्ग[२७] पूजा गर्ने ।

अझै विस्तारमा भन्ने हो भने, भद्रचरी प्रणिधान, त्रि-स्कन्ध सूत्र (उपालीपरिपृच्छा सूत्र), मैत्रेयप्रणिधान, आचार्य नागार्जुन विरचित विंशतिकारिका र आचार्य शान्तिदेव विरचित बोधिचर्यावतारमा बताइएअनुसार अभ्यास गर्नुपर्छ। त्यति सम्म गर्न सकिएन भने मेरै खेन्पो (उपाध्याय) शाक्य श्रीभद्रविरचित 'सप्ताङ्गपूजा' या मैले रचेको 'दशधर्मचर्या' अनुसार गरे पनि हुन्छ। अझै अनेकौं जातकहरूमा बताइएका जस्ता बोधिसत्वका चर्याहरू जति सकिन्छ त्यति अभ्यास गर्नुपर्दछ। तेस्रोमा बोधिसत्वको संवर बिग्रिन नदिने उपाय हो आकाशगर्भ सूत्रमा बताइए अनुसारका मूल आपत्ति र 'रत्नकूट' जस्ता अन्य सूत्रमा बताइएका मूल र अङ्ग आपत्तिहरूलाई हटाउनको लागि उपायहरू अपनाई आपत्ति लाग्नबाट बच्नु पर्छ। त्यस्तै तथागतका शताक्षरी आदिद्वारा अकुशल र आपत्तिहरूलाई शुद्ध पार्ने अनेकौं उपायहरू अपनाइरहनुपर्छ।

---

[२७] वन्दन-पूजन-देशनताय-मोदन-ध्येषण-याचनताय ॥ यच्च शुभं मयि संचितु किंचिद् बोधयि नामयमी अहु सर्वम् ॥ - भद्रचरी

# दानादिप्रतिपत्ति
## (दान आदि पारमिताहरूको अभ्यास)

यसमा आफूमा बुद्धका गुणहरूको सम्भार गर्नको लागि ६ पारमिताहरूको चर्या र सम्पूर्ण सत्वहरूलाई परिपाक गराउनको लागि (बोधिज्ञानको पात्र बनाई बोधिज्ञान दिलाउनको लागि) चार संग्रह वस्तुको अभ्यास गरी दुई किसिमका चर्याहरू पर्दछन् ।

त्यसमध्ये पहिलो षट्पारमिताको अभ्यास अन्तर्गत १. पारमिताको लक्षण २. भेद र ३. प्रत्येक पारमिताको[२८] शब्दार्थ गरी तीन किसिमले बताइन्छ ।

१. **लक्षणः-** संसार र निर्वाणदेखि पार (मुक्त) हुनु नै पारमिताको लक्षण हो ।

२. **भेदः-** यसभित्र (क) पारमिताको भेद गरिने आधार (ख) वर्गीकरण (ग) संख्याको निश्चयको बारेमा बताइन्छ ।

(क) भेदको आधार सम्यक् सम्बुद्धतालाई सिद्ध गर्नको लागि अपनाइने विशेष उपाय नै हो ।

(ख) पारमितालाई ६ प्रकारले वर्गीकरण गरिएको छ । ती ६ प्रकारहरू हुन्- १. दान २. शील ३. क्षान्ति ४. वीर्य ५. ध्यान ६. प्रज्ञा ।

१. **दानपारमिता-** यसभित्र (क) दानको लक्षण (ख) दानको स्वभाव (स्वरूप) को निश्चय र (ग) दानको फल गरी तीन किसिमले बताइन्छ ।

(क) **दानको लक्षण** भनेको आफूले अधिकार पाएको वस्तु अरूको हितको लागि दिनु हो । त्यसमा 'प्रयोग', 'मौल'

---

[२८] पालीमा पारम्= पर यानें बोधिमा+ ई= जानुबाट 'पारमी' भनिएको छ र पारमिताको पनि यही अर्थ लगाइन्छ ।

र 'पृष्ठ' सङ्कल्पले समाहित गरेमा दानपारमिता हुन्छ। (यहाँ प्रयोग भनेको शरणगमन र वोधिचित्त उत्पाद हो, मौल भनेको त्रिकोटि परिशुद्ध अर्थात् 'दिने, लिने र वस्तुको निःस्वभावसिद्धता बुझेको' दानको क्रिया हो भने पृष्ठ भनेको पूर्ण परिणामना हो।)

(ख) **दानको स्वभावको निश्चय** : यसभित्र तीन कुरा पर्दछन्। १. दानको प्रतिपक्षलाई चिन्नु, २. प्रत्येकको उपायको स्वभावमा विचार गर्नु र ३. तिनीहरूलाई अविपरीत (सुल्टोपट्टि) सिद्ध गर्नु।

(१) शुद्धदानसँग विरोध हुने दानलाई चिन्नु नै प्रतिपक्ष चिन्नु हो। जस्तै कञ्जुसले अरूलाई दान दिन नसक्नु, दान दिए पनि अशुद्ध दान दिनु, शुद्ध दान दिए पनि सम्वोधिको हेतु नबन्नु। यस्तो (प्रतिपक्षी) दान गरेमा दुई दोष लाग्छन्– यही जीवनमा दोष र अर्को जीवनमा सुखको विनाश। यही जीवनमा लाग्ने दोष हो कञ्जूसलाई सबैले घृणा गर्नु। जस्तै आचार्य आर्यदेवले भन्नु हुन्छ–

"आफूले भोग गर्दा यहाँ सुख हुन्छ, दान गरेमा अर्को जन्ममा सुख पाइन्छ, भोग र दान नगरेमा खेर गएर दुःख मात्र पाइन्छ, सुख कहाँ हुन्छ !" त्यस्तै 'शाक्य सुभाषित'मा भनिएको छ कि, "जड(मूर्ख)ले सम्हालेकोमा दुःखै मात्र भोग्छ, उपभोग गर्दाको सुख समेत भोग्न पाउँदैन। बारम्बार खोजेर हिंडिरहेको सम्पत्ति मूसाले जम्मा गरे जस्तो हो। भविष्यमा सम्पत्ति आवश्यक पर्छ भनेर अहिले दान गर्नुपर्छ भनी मुनिले बताउनुभएको छ।" यो सारांशपादको अर्थ पनि सम्झिनुपर्छ।

अर्को जीवनमा सुखको नाश हुने सम्वन्धमा प्रज्ञापारमितासञ्चयगाथामा भनिएको छ "कञ्जूस व्यक्ति प्रेतलोकमा जन्म लिन्छ, केही गरी मनुष्य भएर जन्मिहाल्यो भने पनि दरिद्र भएर जन्मिन्छ।" अतः कञ्जूस व्यक्ति

सम्पन्न हुन असम्भव हुन्छ। अशुद्ध दान गरे तापनि नुनिलो खेतमा बीउ रोपे जस्तै हुने हुँदा फल दिन सक्दैन। अलिअलि फल प्राप्त भए पनि वकुल्लाले मरेको माछा पाए जस्तो हुन्छ र राम्रोसँग भोग गर्न पाउँदैन। अलिअलि सुख सुविधा प्राप्त गरे पनि केरा एक पटक फलेर सिद्धिए जस्तै संसार र निर्वाणमध्ये अन्तमा कुनै एकमा फसेर सिद्धिन्छ[२९]।

(२) उपायको स्वभावमा विचार गर्नुमा दुई कुरा पर्छन्। (अ) हेतुको उपाय र (आ) फलको उपाय।

(अ) हेतुको उपायमा : वस्तुमा आसक्ति हुनु नै कञ्जूसको हेतु भएकोले त्यसको उपाय हो आसक्तिलाई नै त्याग्नु। जस्तै बोधिचर्यावतारमा भनिएको छ–

**अर्जन-रक्षण-नाश विषादैरर्थमनर्थमनन्तमवेहि।**

**व्यग्रतया धनसक्तमतीनां नावसरो भवदुःखविमुक्तेः॥**

अर्थात्, "कमाउँदा, बचाउँदा र नाश हुँदाको दुःखले गर्दा धन भनेको अनेकौं अनर्थको जरो हो भन्ने बुझ। धनमा आसक्त वुद्धि भएकाहरूलाई सधैं व्यग्रता हुने भएकाले गर्दा संसारको दुःखबाट मुक्त हुने अवसर नै हुँदैन।"

त्यस्तै अझै भनिएको छ "सम्पत्ति नभए खोज्नुको दुःख, अलिकति पाए थोरै हुनुको दुःख, धेरै भए इच्छा पूरा नहुनुको दुःख हुन्छ। अतः इच्छा पूरा गर्न पनि नसक्ने सम्पत्ति भनेको दुःखकै हेतु हो।" यो भनाइलाई पनि सम्झिराख्नु पर्छ। त्यस्तै राजा अनन्तकीर्ति र राजा मान्धाता पनि चार द्वीप, चन्द्र, सूर्य, तेत्तीस देवलोकका आधा भागसम्मको राजा भएर पनि इच्छा पूरा नभएपछि शक्र (इन्द्र) को पूरै सम्पत्ति लुट्छु भन्ने चिताउँदा चाँडै नै पुण्य सकिएर पृथ्वीमा खस्नु परेको थियो भन्ने प्रसङ्ग बुझ्नु बुझाउनु पर्छ।

---

[२९] दृष्टान्तमा श्रावस्तिको आगन्तुकसेठको कथा पनि छ।

(आ) फलको उपाय त दान नै हो। किनकि वस्तुप्रतिको आसक्तिले गर्दा कञ्जुस्याइँ, (दरिद्रता) जस्ता फल प्राप्त हुन्छन्। त्यसैले त्यसको उपायको लागि दान गर्ने अभ्यास गर्नुपर्छ। दान तीन प्रकारको वताइएको छ (उपालीपरिपृच्छा सूत्रमा) १. भिक्षु वोधिसत्वले गरेको दान २. गृहस्थ वोधिसत्वले गरेको दान ३. अनुत्पन्न धर्मक्षान्ति लाभ गरिसकेकाले (आर्यले) गरेको दान।

सामान्यतया भिक्षुबोधिसत्वले गर्ने दानमध्ये अभयदान, मैत्रीदान र धर्मदान पर्छन्। वस्तुदान(आमिष)मा कलम, कापी र मसी मात्र दान गर्नु भनिएको छ। भिक्षुले धेरै सम्पत्ति दान दिन रुचिलिनु भनेर त वताइएको छैन। भगवान् बुद्धले पनि राजा, मन्त्री, गृहस्थ र व्यापारीको जन्म लिएको बेलामा वस्तुदान दिनुभएको छ। बोधिसत्वको अन्तिम जन्ममा कुमारको क्रीडा गर्दा आफ्नो वस्तु सत्वलाई दिनुभएको थियो। नैरञ्जना नदीको नजिकमा भिक्षु हुने बेलामा घोडा र गहनाहरू सम्पत्ति मालिक शुद्धोदनलाई नै फिर्ता पठाइदिनुभएको थियो। किसानको छोरी सुजाताले सुनको कचौरामा खीर लिएर "मप्रति दया गरेर यो ग्रहण गर्नुहोस्" भनी चढाइसकेपछि त्यो कचौरालाई उहाँले नैरञ्जना नदीमा बगाइदिनुभएको थियो। यसमा केही तीर्थिकहरूले मनमा सोचेका थिए कि, गौतमले सम्पत्तिलाई हेला गरे। 'सम्पत्तिले गरीब नभएका राजालाई दिनुको बदला दरिद्रलाई दिनु पर्दथ्यो, सुनको कचौरा पनि दरिद्रलाई नदिएर पानीमा फ्याँकेको खेर फालेको हो'। परन्तु भगवान्ले उत्तम व्यक्तिको सम्पत्ति उत्तम नभएको (अधम) लाई दिएको भए यो जीवनमा उसले अलिकति सुख लाभ गरे तापनि अन्तमा पच्न नसकेर ऊ दुर्गतिमा पर्न जाने हुनाले नदिनुभएको हो। त्यो दरिद्र व्यक्ति सीधै दुर्गतिमा जाने हेतु भएकोले बोधिसत्वले त्यस्तो प्रयोग गर्नु हुँदैन भन्ने

सोचाइबाट भएको हो। त्यसैले भिक्षुले महादान (वस्तु दान) गर्न थाल्यो भने श्रवण, चिन्तन र भावनामा विघ्न आउने भएकोले भिक्षुले समाधि र प्रज्ञामा रुचि लिनु बुद्धशासनसँग मिल्ने हुन्छ भनिएको छ। सूत्रमा, भिक्षुले पिण्डपात्रमा बचेको मात्रै दान गर्नु त भनिएको छ, अरू दान दिनु भनिएको छैन। भिक्षु भनेको त देव र मनुष्यको दक्षिणीय (दक्षिणा दिन योग्य, पूजा गर्न योग्य) हो याने देवता र मनुष्य दुवैले भिक्षुलाई दक्षिणा गर्नु, पूजा गर्नु पर्ने हुन्छ। ऊ त यजमान होइन। यदि दक्षिणीय र यजमान उल्टो पऱ्यो भने लोकमा अनिकालआदि विपत्तिहरू आइलाग्ने हेतु हुन जान्छ।

गृहस्थ बोधिसत्वले दानहरूको दुई प्रकारले अभ्यास गर्नुपर्छ। १. दान दिने तरिका र २. शोधन गर्ने उपाय। दान दिने तरिकामा सर्वप्रथम, दान दिन नसक्नेले बानी पार्नको लागि अलिकति दिने अभ्यास गर्नुपर्छ। दान दिन सक्ने क्षमता हुँदै आएपछि अशुद्ध दान नगरेर शुद्ध दान दिने अभ्यास गर्दै जानु पर्छ। त्यस्तै शुद्ध दान पनि बुद्धता प्राप्तिको हेतु नहुने अवस्थावाट क्रमशः बुद्धता प्राप्तिको हेतु हुने गरी गर्दै जानुपर्छ। यी तीनमध्ये पहिलोको सन्दर्भमा बोधिचर्यावतारमा भनिएको छ–

**"आदौ शाकादिदानेऽपि नियोजयति नायकः"**
**तत्करोति क्रमात्पश्चाद्यत्स्वमांसान्यपि त्यजेत् ॥**
**यदा शाकेष्विव प्रज्ञा स्वमांसेऽप्युपजायते**
**मांसास्थित्यजतस्तस्य तदा किं नाम दुष्करम् ॥"**

"भगवान्ले सुरु सुरुमा सागआदि साना कुराहरू दान गर्न भन्नुभएको छ। त्यो गर्दै गएपछि क्रमशः आफ्नो मासुहरू पनि दिने हुनुपर्छ। जब आफ्नो मासुमा पनि साग आदिमा जस्तै प्रज्ञा उत्पन्न हुन्छ तब मासु हाड आदि दान गर्दा पनि केको कठिनाइ हुन्छ र ?" महागुह्योपायकौशल्य

सूत्रमा पनि 'सुरुमा एक डाडु पानी भए पनि दान दिने गर्दै अभ्यास गर्नू' भनिएको छ।

दोस्रोको सन्दर्भमा, दान दिन सक्नेहरूले अशुद्ध दानलाई रोकेर शुद्ध दान दिने अभ्यास गर्नुपर्छ। किनकि शुद्ध र अशुद्ध दान नचिनेर धेरै मानिसहरू दान दिए तापनि संसार र दुर्गतिको हेतु (कारण) नै बनिराख्ने दान गर्न पुगेका हुन्छन्। त्यसकारण त्यसलाई रोकेर शुद्ध दान दिन सिक्नु पर्छ। यसमा व्यासपरिपृच्छासूत्रमा भनिएका ३२ किसिमका अशुद्ध दानहरूलाई सारांशमा भन्ने हो भने मिथ्या श्रद्धा गरेर दिइएको, उपकारको प्रत्युपकार पाइयोस् भनेर गरिएको, तल्लो तहको वस्तु, आफ्नो स्वार्थको लागि आगो, पानी, राँको दान गर्नु, आफ्नो परिचयको लागि राजालाई दान दिनु, तर्साउन या मार्न लगाउनको लागि डाँका, गुण्डाआदिलाई दान गर्नु, प्रमादीहरूलाई जाँड रक्सी दान गर्नु, आफ्नो सत्कारको आशा राखी सत्वहरूलाई जम्मा गरी दान गर्नु, स्तुतिको लागि दान गर्नु, मस्तीको लागि गन्धर्वहरू (गायक, नर्तक आदि) लाई दान दिनु, ज्योतिषलाई नक्षत्र आदि हेरिदेला भनेर दान दिनु, मित्रलाई भनेर अवर्गको सम्पत्ति दान गरिदिनु, अर्काको अनाज पशु, पन्छीले खाएकोमा उत्साह हुनु, शिल्पीलाई दान दिनु, कसैको रोगलाई निको पार्न नदिने नियतले वैद्यलाई दान दिनु, भिखारी मगन्तेलाई रिसले गरेको दान, दानको फल छ कि छैन भनेर शंका लागी गरिएको दान, जवानीको मदले गरिएको दान, शोकले सताएर बौद्धमार्गमा श्रद्धा नभईकन पनि आफन्तहरूको करले वृद्धले गरेको दान, अरू देशमा दाताको नामले प्रख्यात हुनको लागि गरेको दान, भोजन दान नदिएमा लोकले नमान्ने भएकोले दान दिएमा मान्लान् भनेर दिइने दान, मन परेकी स्त्रीप्राप्तिको लागि उनका मित्रआदिलाई खुसी पार्न दिएको दान, सम्पत्ति धेरै भएर पनि

छोरा नभएबाट त्यसको लागि जति जे चाह्यो त्यो दिन्छु भनेर दिइने दान, यो लोकको दानले परलोकमा फल पाइन्छ भनी दिइएको दान, आमिषदान, भिखारी गरीव आदिलाई नदिएर धनीलाई दिनु आदि पर्दछन्। यसप्रकार अशुद्ध र शुद्ध दान वुझेर अशुद्धलाई छोडेर शुद्ध दानको अभ्यास गर्नुपर्छ।

तेस्रोको सन्दर्भमा, कुनै दान शुद्ध भए पनि वुद्ध वन्ने हेतु नहुन सक्छ। जस्तै कुनै कुशल कर्म (दान) ले सुगतिमा देव या मनुष्यको चोला प्राप्त हुन्छ। कुनै श्रावक तथा प्रत्येकवुद्धको दान निर्वाणलाभको हेतु वन्न जाने हुनाले त्यसलाई रोक्नको लागि उपायले निर्वाणको अन्तलाई र प्रज्ञाले संसारको अन्तलाई थिचेर वीर्यका वलले ती दुईलाई तुरुन्तै अन्त्य गर्नुपर्छ। यदि त्यसो गरियो भने, अलिकति दान दिए पनि चाँडै नै सम्यक् सम्बोधिको हेतु वन्दछ। अतः त्यसरी नै अभ्यास गर्नुपर्छ। सूत्रमा भनिएको छ, "जसले नायक जिनलाई सानो सेवा गर्छ त्यो अनेक सुगतिमा पुगेर अमरस्थान प्राप्त गर्छ"।

**अब शोधन गर्ने अभ्यास** (उपाय) - यस शोधन गर्ने अभ्यासलाई दुई किसिमले गर्नुपर्छ - १. चित्तले र २. प्रयोगले। चित्तले गर्ने उपायमा भिखारीलाई देखेमा दानपारमिता पूर्ण हुनेभयो भन्ने सम्झेर आनन्द मान्ने, परलोकमा अत्यधिक सम्पत्ति पाउने वीउ रोपियो भन्ने सम्झने, ती मगन्तेहरूलाई वुद्ध र बोधिसत्वका निर्माणकाय हुन् भन्ने सम्झिने उनीहरू मप्रति खुसी छन् भन्ने ठान्ने देवलोक र मनुष्यलोकमा कीर्ति फैलिन्छ भन्ने सम्झने र प्राणीको हित गर्दा यस्ता वस्तुले यसरी समेट्नुपर्छ भन्ने विचार राख्दै अलि उदार चित्त गराउने गर्नुपर्छ। सूत्रालंकारमा भनिएको छ, "भिखारीलाई देख्दा दान पारमिता पूरा हुनेभयो भनेर खुसी हुनू"। सूत्रमा पनि भिखारीलाई देखेमा वुद्ध हुन् भन्ने सम्झिनु पर्छ भनेर वताइएको छ।

दोस्रो, प्रयोगले शोधन गर्ने अभ्यासभित्र पनि तीन प्रकार छन्। तीमध्ये **पहिलोमा** व्यक्तिगत रुचिलाई लिएर व्यक्तिले आफूले चाहेअनुसार कसैले गुरुलाई चढाउन सक्छन् अरूलाई सक्दैनन्, कसैले बुद्धलाई चढाउँछन्, कसैले धर्मका निमित्त (लेख्न, पढ्न) दिन सक्छन्, कसैले संघलाई सत्कार गर्न चाहन्छन्, कसैले दरिद्रलाई दिने इच्छा राख्छन्। यसप्रकार कुनै निश्चित पक्षमा दान दिने, तर अरूमा नसक्ने हुन्छन्। त्यसमा आफूले सकेकोमा रुचि राखिराख्नुपर्छ र क्रमशः अरूमा पनि त्यस्तै गरी रुचि लिने अभ्यास गर्दै जानुपर्छ। **दोस्रोमा** समयलाई लिएर अभ्यास गर्नुपर्छ। जस्तै सधैं दान दिन नसके पनि विशेष दिन (पर्व) हरूमा दान दिन सकिने हुन्छ। त्यसैले त्यो विशेष[३०] दिनलाई मूल मानेर दिने अभ्यास गर्दै क्रमशः अरू दिनमा पनि दिन सिक्दै जानु पर्छ। त्यसमा पहिले आधा दिनसम्म माग्न आउनेलाई जे सकिन्छ दिन्छु भनी शुरु गर्न सकिन्छ, त्यसमा बानी भएपछि एकदिनभरिमा आउनेलाई दिन्छु भन्ने र त्यसपछि एक दिन र रातमा आउनेलाई दिन्छु भन्ने गर्दै क्रमशः एक महिना, एक वर्ष गर्दै समयलाई बढाएर बानी पार्दै जानुपर्छ। तेस्रोमा वस्तुलाई लिएर अभ्यास बढाउँदै जानुपर्छ। सुरुमा एक डाडु, पानी अथवा केही साग, खाने वस्तुको डल्लो, कपडा, एक धर्सो धागो, या टालो मात्रै दिएर भए पनि यो थोरै भए पनि महादान हो भन्ने सम्झँदै भविष्यमा सबै प्राणीहरूलाई चाहे अनुसार दान दिन समर्थ होऊँ भन्दै प्रणिधान गरेर दिने अभ्यास गर्नुपर्छ। केही नदिनुभन्दा एक डाडु पानी दिनु पनि राम्रो हो। झगडा

---

३० यहां विशेष दिन भनेका अष्टमी, पूर्णिमा, औंसी चतुर्दशी, दशमी र शास्ता एवं अन्य आर्यगुरुहरूसँग सम्बन्धित जन्म, निर्वाणआदिका शुभ दिनहरू पर्छन्।

गर्नुभन्दा नदिनु नै राम्रो परन्तु आफ्नो वस्तु लुटिएर जानुभन्दा त झगडा गरेरै भए पनि दिनु राम्रो। मार्नुभन्दा झगडा गर्नु, पिट्नु नै राम्रो। संक्षिप्तमा भन्दा सबैका सामु आफूले घमण्डीपन त्याग गर्ने हो भने कसैसँग पनि प्रतिघात (द्वेषभाव) हुँदैन र सबैको अनुमोदन प्राप्त हुन्छ। वोधिचित्त नहराउने हेतु (कारण) पनि बन्न पुग्छ। त्यसैले सूत्रमा भनिए अनुसार भोजन चाहनेलाई भोजन र वस्त्र, औषधि, पुष्पमाला, सम्पत्तिआदि चाहनेलाई ती ती वस्तु दिएर मतिशोधन गर्नुपर्छ। अनुत्पन्नधर्मक्षान्तिलाभ नभएसम्म टाउको खुट्टा आदि दिन सके तापनि नदिनू भनी बोधिचर्यावतारमा बताइएको छ–

**सद्धर्मसेवकं कायमितरार्थं न पीडयेत्।**
**एवमेव हि सत्वानामाशामाशु प्रपूरयेत्॥**
**त्यजेन्न जीवितं तस्मादशुद्धे करुणाशये।**
**तुल्याशये तु तत् त्याज्यमित्थं न परिहीयते॥**

"सद्धर्मको सेवा गर्ने शरीरलाई अरू सामान्य कुराको लागि पीडा दिनु हुँदैन। यसरी नै सत्वहरूको इच्छा आकांक्षालाई चाँडै चाँडै पूरा गर्दै जानुपर्छ। अत: करुणाको आशय अशुद्ध रहँदासम्म (याने शुद्ध नहुँदासम्म) जीवनलाई त्याग्ने (टाउको, हात, पाउ आदि दान गरिहाल्ने) काम गर्नु हुँदैन। आशय बराबर हुन पुग्यो भने त शरीरै पनि त्याग गर्नु पर्दछ, यसो गर्नाले कुनै हानि हुँदैन।"

कसैले भन्छन् कि वोधिप्रस्थानचित्त-उत्पाद गरिसकेका व्यक्तिले त जसले जे मागे पनि दिनुपर्छ नदिएमा चित्तोत्पाद बिग्रिन्छ। त्यसकारण दिन नसक्ने अवस्थासम्म त्यो चित्त उत्पादलाई गोप्य राख्नुपर्छ रे[३१]। परन्तु त्यो त त्रिपिटकको व्यवस्था नबुझेकोले भनेको हो। चित्तोत्पादलाई गोप्य राख्न

---

[३१] चन्द्रगोमीको 'विंशिका' मा त्यस्तो बताइएको छ।

खोजेको त आफ्नो कमजोरीलाई छिपाउन खोजेको मात्र हो।

अनुत्पन्नधर्मक्षान्ति (आर्य) लाभ गरिसकेकाहरूले गर्ने दानहरू तीन प्रकारका छन्। १. त्याग २. महात्याग र ३. अतिमहात्याग। यिनीहरू क्रमशः आफ्नो मन पर्ने कुरा दान गर्नु, आफ्ना छोरा, श्रीमती आदि इष्टहरू दान गर्नु र आफ्नो शिर, हात, पाउ आदि अङ्गसमेत दान गर्नु हुन्। जिनमातामा (प्रज्ञापारमितामा) "उपायकौशलवान् हुनाले सम्पूर्ण दानपारमिता पूर्ण गर्नको लागि चक्रवर्ती राजा आदिको रूपमा जन्मिएर मबाट जति चाहिन्छ त्यति वस्तुहरू लगेर दान गर, शील पालन गर..." आदि देखि लिएर "मलाई भित्री काय प्रति त आसक्ति छैन भने बाहिरी सम्पत्तिमा त भन्नै के पऱ्यो त" भनी विस्तारमा बताइएको छ। यो आगम प्रब्रजितहरूको दानमा पनि लागू हुन्छ भन्नेहरूले सूत्रको मत नबुझेको मात्र हो।

त्यो अवस्थामा नै हो, विश्वन्तर राजकुमारले छोराछोरीहरूलाई ब्राह्मणको सेवाको लागि दान दिएको, शिवि[३२] राजाले अन्धो ब्राह्मणलाई दान दिएको, खरायो (बोधिसत्व) ले घुमन्ते ब्राह्मणलाई शरीर दान दिएको। यस्तै जातकमा बताइएअनुसार राजा चन्द्रप्रभले ब्राह्मणलाई टाउको दान दिएको, राजा सुवर्णवर्णले आधा शरीर दान गरेको आदि कुराहरूको सूत्रमा बताइएअनुसार अर्थ बुझी अरूलाई पनि बुझाउनु पर्छ।

**३. दानलाई अविपरीत रूपमा सिद्ध गर्नु–**

यसमा दुई कुरा पर्छन्। १. चार गुण सिद्ध गर्नु। २. सात आसक्ति त्याग गर्नु। (चार गुणले युक्त दानको बारेमा) सूत्रालंकारमा यस्तो भनिएको छ–

---

३२ यी सबै 'जातकमाला' तथा पाली जातकमा छन्।

**दानं विपक्षहीनं ज्ञानेन गतं च निर्विकल्पेन ।**
**सर्वेच्छापरिपूरकमपि सत्वविपाचकं त्रेधा ॥**

"दानचाहिं विपक्षहरूले रहित हुनुपर्छ, निर्विकल्प ज्ञानले सहित हुनुपर्छ, सबैको इच्छालाई परिपूर्ति गर्ने हुनुपर्छ र सबै सत्वहरूलाई परिपाक गराउने हुनुपर्छ। त्यो दान तीन प्रकारको हुन्छ।"

यहाँ **विपक्षहीन भनेको कञ्जुस्याईले** रहित हुने भनेको हो, निर्विकल्प ज्ञान भनेको पुद्‌गल र धर्म नैरात्म्यको[३३] बोधसहित हुने भनेको हो । सर्वेच्छापरिपूरक भनेको धर्मअनुसार मिल्ने योग्य दान भनेको हो र सत्वलाई परिपाक गराउने भनेको, दानद्वारा सत्वहरूलाई जम्मा गराएर उनीहरूलाई आ-आफ्ना संस्कार अनुसार श्रावकयान, प्रत्येकबुद्धयान र महायानमा लगाउनु हो।

सात आसक्ति त्याग्ने सम्बन्धमा सूत्रालंकारमा यस्तो भनिएको छ -

**न च सक्तं न च सक्तं न च सक्तं सक्तमेव न च दानम् ।**
**न च सक्तं न च सक्तं न च सक्तं बोधिसत्वानाम् ॥**

अर्थात्, दानका ७ विपक्षहरूको आसक्तिलाई त्याग्नु। त्यसमा, १. भोगमा आसक्ति नहुनु २. विलम्बनमा आसक्ति नहुनु ३. यति मात्रै दिए पुग्छ भन्ने सन्तुष्टिमा आसक्ति नहुनु ४. प्रतिफल पाउनमा आसक्ति नहुनु ५. विपाकमा आसक्ति नहुनु ६. प्रतिकूलतामा आसक्ति नहुनु अर्थात् कञ्जुस्याइँ आदिलाई त्यागनमा आसक्ति नहुनु भनेको हो। ७. चञ्चलतामा आसक्ति नहुनु । यसभित्र दुई थरी छन्। एक-हीनयानमा[३४] आसक्ति नहुनु। दुई-विकल्प विक्षेपमा

---

[३३] दाता, दानव्य र दान सबै निःस्वभाव अर्थात् शून्यता देख्ने ।

[३४] श्रावकयानमा धर्मनैरात्म्य नहुने भएकोले यहाँ महायानको दृष्टिकोणबाट त्यसमा आसक्ति त्याग्नु भनिएको हो ।

**आसक्ति नहुनु ।** यो दान दिने, लिने र दान कार्यमा आसक्ति नहुनु हो । यसरी भोग, विलम्बना, मन्तुष्टि, प्रतिफल, विपाक, प्रतिकूल र चञ्चलता यी सात कुराको आसक्तिलाई विद्वान्ले त्याग्नु पर्छ ।

**३. दानको फल**

दानका फल दुई किसिमका छन् । १. अहिलेको फल २. अन्तिमको फल ।

**१. अहिलेको फल**– दानले अरूलाई सन्तुष्ट पार्नाले सम्पत्ति, यश, कीर्ति, सुखसम्पन्नता आदिको लाभ हुन्छ । बोधिचर्यावतारमा यस्तो भनिएको छ–

"अरूलाई सन्तुष्ट गराएमा भविष्यमा बुद्ध त भइन्छ नै, यही जन्ममा पनि सुसम्पन्नता, यश, ऐश्वर्य, कीर्ति सुख प्राप्त भएको किन देख्दैनौ ?"

सूत्रालंकारमा यस्तो भनिएको छ–

"दानकर्तालाई सम्पत्तिको इच्छा नभए पनि अत्यन्त चोखो (शुद्ध) सम्पत्ति लाभ हुन्छ ।" अत: अर्को जीवनमा पनि चाहेअनुसारको फल भोग गर्न पाइन्छ, अरूलाई चाहेको कुरा दान गर्न पाइन्छ, अझै पछि गएर दुर्देशमा, अनिकालको समयमा, दुर्भिक्षआदि भएको देश, काल, परिस्थितिमा जन्म लिनु नपर्ने आदि धेरै फल पाइन्छ । सञ्चयगाथामा यस्तो भनिएको छ– "बोधिसत्वको दानले प्रेतगतिलाई समाप्त गरिदिन्छ, दरिद्रता र क्लेशहरूलाई उच्छेद गर्दछ । भोग गर्दा अनन्त सम्पत्ति लाभ हुन्छ" आदि ।

**२. अन्तिमको फल**

बुद्धता लाभ हुँदा सागर समानका लौकिक र लोकोत्तर शिष्यहरू जम्मा हुन्छन् । लौकिक र लोकोत्तर कुशलबाट बनेका पूजा सामग्रीहरू बन्दछन् । गगनगञ्ज समाधिमा अधिकार सिद्ध हुने जस्ता धेरै फलहरू लाभ हुन्छन् ।

**२. शील पारमिताः-** शील पारमिताभित्र तीन कुराहरू बताइन्छन्- १. शीलको लक्षण बुझ्नु २. शीलको स्वभावलाई निश्चय गर्नु र ३. शील पालनको अनुशंसा (फाइदा)

**१. शीलको लक्षण**

परहितको लागि आफ्नो अकुशल कर्म त्याग्नु नै शीलको लक्षण हो। त्यो पनि प्रयोग, मौल र पृष्ठले समाहित भएमा शील पारमिता हुन्छ।

**२. स्वभावको निश्चय गर्नु**

शीलको स्वभावको निश्चय गर्नु भनेको शीलकै प्रतिपक्षलाई चिन्नु हो। शीलको प्रतिपक्ष के हो ? यो कदापि शील पालन गर्न सक्दिन भन्ने सोचाइ हो, शील पालन गरे पनि तीर्थिकहरूको जस्तो गुण धेरै नभएको शील पालन गर्नु हो, राम्रो गुण भए पनि श्रावकको[३५] जस्तो बुद्ध बन्ने हेतु नभएको शील पालन गर्नु हो। त्यसकारण यसवाट यो जीवनमा पनि दोष हुने र जन्मजन्मान्तरको सुसम्पन्नताको पनि विनाश हुने हुन्छ।[३६] यो जीवनमा के दोष हुन्छ ? दु:शील (शील राम्रो नभएका)लाई देव आदि सबै लोकले अपमान गर्छन्। त्यसलाई गुरु र त्रिरत्नको अगाडि जान लाज हुन्छ। गण र संघसँग बस्दा झस्किने हुन्छ। दानपति आदिले चढाएको वस्तु ग्रहण गर्न लाज मान्नु पर्ने हुन्छ।

---

[३५] परिभाषाले नै 'श्रावक' भनेको अर्हत्वलाभ गर्ने आशयले अभ्यास गर्ने पुद्गल हो। अर्हत्‌लाई 'श्रावकवुद्ध' पनि भन्छन्। परन्तु सम्यक्सम्वुद्ध (पालीमा सम्मासम्वुद्ध) वन्ने लक्ष्य र अभ्यास श्रावकयानमा हुँदैन, त्यसैले यो भेद गरिएको हो।

[३६] शून्यतादृष्टि भनेको शून्यताको प्रत्यक्ष अनुभूति गर्नु हो जुन महायानको विपश्यना या विदर्शणा हो। अप्रणिहित, अनिमित्त र शून्यता विमोक्षमुखको उल्लेख थेरवाद र महायान दुवैमा पाइन्छ।

मानिसहरूले त्यसलाई गिज्याउने, हेप्ने गर्छन्। अमानुषहरूले बाधा गर्छन्। देवहरूले त्यसलाई रक्षा गर्दैनन्। बुद्ध-बोधिसत्वहरूले पनि ऊप्रति चित्तले दु:ख मान्छन्।

सधैंको लागि सुसम्पन्नताको विनाश हुन्छ भनेको के हो ? समाधिराजसूत्रमा बताइएको छ "शीलभ्रष्ट (याने दु:शील भएको) व्यक्ति दुर्गतिमा पर्छ, वहुश्रुत (धेरै पढे जानेको विद्वान्) हुँदैमा मात्र त्यो वच्दैन।" शीलको अंग बिग्रियो भने नागलोकमा पतन हुन्छ भनिएको छ। पूरापूर दुर्गतिबाट मुक्त भएर सुगति पाए पनि प्राणिहत्याले गर्दा आयु छोटो हुन्छ, झूटो बोल्नाले गर्दा अपवाद आइलाग्छ, लोभले गर्दा आँटेको पुग्दैन, व्यापाद (हानि गर्ने विचार लिइराख्ने) ले गर्दा दु:ख उत्पन्न भइरहने हुन्छ। चोरी गर्नाले सम्पत्ति लुटिने हुन्छ, रण्डीबाजी गर्नाले शत्रु धेरै हुने हुन्छ। यसरी सर्वप्रथम त दुर्गतिमा जाने फल प्राप्त हुन्छ भने दोस्रो अल्पायुजस्ता नचाहिएका कुरासमेत आफूलाई आइपर्छन्। यो बेलामा दश अकुशल कर्म गर्दा प्राणीहरू नरकमा जन्मिन पुग्छन् भन्ने कुरा र शीलको अंग तोड्नाले रसना भन्ने नागराजको जन्म भएको कुरा पनि बुझ्नु बुझाउनु पर्छ।

**<u>दु:शीलको उपचार</u>**:- दु:शीललाई हटाउने उपायहरू दुई थरी छन्। १. हेतु (बीज) को उपचार २. फलको उपचार

१. हेतुको उपचार

दु:शील गराउने मूल हेतु धेरै मात्रामा क्लेश हुनु नै हो। त्यसकारण यसको लागि दुई किसिमले उपचार गर्नुपर्छ। १. तात्कालिक उपचार २. आत्यन्तिक (सदाका लागि) उपचार। १. तात्कालिक उपचारमा

सुबाहुपरिपृच्छासूत्रमा भनिएको छ कि बढी मात्रामा राग हुनेले शरीरलाई फोहोर, मासु, बोसो, छाला, कङ्कालको रूपमा सम्झिने (अशुभ भावना) गर्नाले शान्त हुन्छ। द्वेष बढी हुनेले मैत्री भावना (आदि चार ब्रह्मविहार भावना) गर्नाले र मोह बढी हुनेले प्रतीत्यसमुत्पादको मार्गले शान्ति हुन्छ। घमण्ड धेरै हुनेले धातुव्यवस्थानबाट क्लेश रोक्नु पर्छ। २. आत्यन्तिक याने जरै उखेल्ने अभ्यास त प्रमाणवार्तिकमा "मुक्तिस्तु शून्यतादृष्टेस्तदर्थाः शेषभावनाः।" " मुक्ति त शून्यता दृष्टिले हुन्छ। बाँकी ध्यान त्यसैको लागि हो।" भनिए झैं शून्यताको भावना नै हो। आर्यदेवले भन्नुहुन्छ, "अज्ञान त तत्वभावनाद्वारा ज्ञानले नै निरोध हुन्छ। जो निरोध हुन्छ त्यो उत्पन्न हुँदैन।" अतः शून्यता भावनामा बानी बसाल्नु पर्छ।

२. फलको (स्वयं दु:शीलको) उपचार

क्लेशमा आश्रित भैसकेपछि विपरीत चित्त उत्पन्न हुन्छ। त्यसले गर्दा शरीर (काय) र वचन (वाक्)का शील भ्रष्ट हुन जान्छन्। त्यसो भएमा शील हेरी उपचार गर्नुपर्छ। शीलहरू तीन किसिमका[३७] छन्। १. संवरशील २. कुशलसंग्राहक शील ३. सत्वार्थक्रियाशील। त्यसमध्ये,

१. संवरशील

यो पनि दुई प्रकारको छ। १. प्रातिमोक्ष संवर २. बोधिसत्व संवर।

---

[३७] विशुद्धिमग्गमा शीलका यस्तै प्रकारका वर्गीकरणहरू दिइएको हुन्छ।

त्यसमध्ये प्रातिमोक्ष संवरहरू पुनः दुई प्रकारका हुन्छन्। (क) गृहस्थ बोधिसत्वले पालन गर्नुपर्ने संवर (ख) प्रव्रजित (भिक्षु) ले पालन गर्नुपर्ने संवर।

(क) गृहस्थ बोधिसत्वले पालन गर्नुपर्ने भित्र पनि, शरणगमन गरेर शरण्यलाई (त्रिरत्नलाई) धारण गरिसकेकालाई उपासक भनिन्छ। त्यसमा प्राणीहत्यालाई त्यागेमा एकचारी उपासक भनिन्छ। चोरी कर्म समेत त्यागेमा किञ्चिच्चारी उपासक भनिन्छ। त्यसमाथि झूटो बोल्न पनि त्यागेमा वहुलचारी उपासक भन्छन्। अनि परस्त्रीगमन र मादक पदार्थसमेत त्यागेमा परिपूर्ण उपासक मानिन्छ। सूत्रमा भनिएको छ "उपासकहरूले शास्तावाहेक अरू कसैमा पनि आश्रित नभई दश कुशलकर्म चर्या गर्दछन्।" यसको अर्थ त्यही हो। त्यसो भए, दश अकुशल कर्मलाई त्यागेर दश कुशल कर्म गर्नुपर्ने हो भने पाँचशील मात्र लिएर कसरी मिल्न आयो त ? पाँचशील पालन गर्दा दश अकुशलकै त्याग गर्न सकिन्छ। जस्तै प्राणीको हत्यालाई त्यागनाले व्यापाद (हिंसा गर्ने चित्त)लाई स्वतः त्यागिन्छ, चोरी कर्म त्यागनाले अभिध्या (लोभ) पनि स्वतः त्यागिन्छ, झूटो बोल्न त्यागनाले चुगली गर्ने, बकवास गर्ने र कठोरवचन बोल्ने पनि त्यागिन्छ। उपासकत्व ग्रहण गर्नाले कर्मफलमा विश्वास हुने हुँदा मिथ्यादृष्टि पनि त्यागिन्छ। साँच्चिकै भन्ने हो भने उपासकले दश शील पालन गर्नुपर्छ तापनि संख्या ठूलो भएमा भय होला भनेर उपासकले पाँच आधारभूत शीलहरू मात्र लिए पुग्छ भनिएको हो।

अष्ट उपासकसंवरमा भनिएको छ कि पाँच अङ्गको विधि त प्रवेशको लागि नै हो। कसैको मतमा उपासकको संवरमा मिथ्यादृष्टि त्यागने प्रतिज्ञा लिइन्छ भन्ने पनि छ। परन्तु त्यो त त्रिपिटकको अध्ययन धेरै नगरेर मात्र भएको हो। वैभाषिक श्रावकहरूले परिपूर्ण उपासक (पाँचैशील

ग्रहण गरेका)लाई बाहेक अरू (कम शील लिएका)लाई उपासक[३८] मान्दैनन्। सौत्रान्तिकहरूले[३९] योगतन्त्र सर्वविद्को विधिभित्र "अलंकृत भएर पनि धर्मचर्या गर्दछ, प्रशान्त विशुद्ध संवरमा ब्रह्मचर्य पालन गर्दछ, सबै सत्वहरूमा दण्ड त्याग गर्दछ। भिक्षु, श्रमण, ब्राह्मण पनि त्यही हो" भनिएको आधार लिएर ब्रह्मचारी उपासक पनि मान्दछन्। स्थविरवादमा आजीवनको लागि अष्टशील ग्रहण गरेमा गोमिउपासक हुन्छ भन्ने स्थविरवादको उपदेश परम्पराबाट सुनिन्छ। त्यसलाई उनीहरूले गोमिउपासक भन्ने मान्दछन् र महायानीहरूले पनि यो अर्थलाई मान्दछन्। रत्नकूटसूत्रमा राजकुमार महाकरुणासत्वले आजीवनको लागि अष्टशीलको उपवास लिए पनि गोमी भन्ने नामकरण त गरिएको छैन। यो गोमी भनेको संस्कृत भाषाको शब्द हो। भाष्यमा गो शब्दका नौ अर्थहरू विद्वान्ले गरेको पाइन्छ। १. वचन २. दिशा ३. भूमि ४. ज्योति ५. गाई ६. आँखा ७. वज्र ८. सुगति र ९ पानी। अतः भोटभाषामा अनुवाद गर्दा अर्थ एकातिरमात्र ढल्न जाने हुनाले 'गौतम' जस्तै यसलाई पनि संस्कृत भाषामा नै राखिएको हो। मूल विनय सूत्र सर्वास्तिवादीहरूको संग्रह (ग्रन्थ) भएको हुनाले त्यसमा गोमी उपासक र ब्रह्मचारी उपासक भन्ने उल्लेख गरिएको छैन। त्यसैकारणले विनयधरहरूमा यी दुई विधिहरू नभाइएको हो। यी दुई थरीले गृहस्थी त्यागेकोले प्रव्रजितभित्र गनिए तापनि (प्रव्रज्याको) मूलविधि नअपनाएकाले यिनीहरू 'आदिप्रव्रजित' भनेर केही शास्त्रहरूमा प्रख्यात भएका पनि छन्।

---

३८ थेरवादमा पनि यो लागू हुन्छ।

३९ थेरवाद जस्तै अठार निकायमध्येको एक श्रावक निकाय।

यिनीहरूको पाप र पुण्यको हेतु र फल चिन्नुपर्ने हो तापनि अधिक विस्तारभयले गर्दा यहाँ उल्लेख गरिदैन ।

(ख) श्रमण र भिक्षुले पालन गर्नुपर्ने कुराहरू विनयमा बताइए अनुसार नै जान्नु पर्छ। यिनीहरू पनि वोधिचित्त र त्रिकोटिपरिशुद्धताले नभेटेमा श्रावकका शील हुन जान्छन् । यदि तिनीहरूले परहितको लागि पालन गरेमा वोधिसत्वको प्रतिमोक्ष संवर हुन जान्छ।

## २. बोधिसत्वसंवर

यसको लागि माध्यमिक र चित्तमात्रीहरूको परम्परा अनुसार चित्त उत्पाद गरेर आ-आफ्नो शिक्षा पालन गर्ने अभ्यास गर्नुपर्छ। दुवै परम्परामा चार कुकर्म त्याग्नुपर्छ र चार सुकर्मको अभ्यास गर्नुपर्छ। तिनीहरूको अभ्यास पनि संक्षेप र विस्तार गरी दुई किसिमले गर्न सकिन्छ। संक्षेपमा पनि विषय, समय र स्वभावलाई चिन्नु पर्छ। विषय भनेको दश अकुशल कर्मका विषय हुन्। उदाहरणको लागि प्राणीहत्याको लागि जनावर या मानिस आदि विषय हुन्। त्यसमा आफन्त भैसकेकालाई हत्या नगर्ने अभ्यास गर्ने। त्यसमा बानी भैसकेपछि जो आफन्त होइनन् त्यस्ता जनावर आदिप्रति पनि हिंसाको त्याग गर्दै जानु पर्छ। त्यसैगरी चोरीमा पनि पहिले आफन्तहरूका वस्तु नचोर्ने अभ्यास शुरु गर्नुपर्छ। त्यस्तै झूटो बोल्ने आदिमा पनि यही कुरा मिलाएर जान्नु पर्छ।

समयको हिसाबले पनि शुरुमा आधा दिन, एक दिन, रात दिन, आधा महिना, एक महिना गर्दै वर्षौंका लागि त्याग्ने बानी गर्दै जानुपर्छ। स्वभावलाई (अभ्यासको) चिन्नुभित्र यसरी बुझ्नु पर्छ : आ-आफ्नो स्वभावअनुसार दश अकुशल कर्महरूलाई एक एक गर्दै क्रमशः त्याग्दै जानुपर्छ (सजिलोबाट शुरु गरेर कठिनतिर जानुपर्छ) ।

त्यसमा पनि पहिले स्थूल किसिमका पाप र आपत्तिहरूलाई त्याग गर्ने, अनि मध्यम किसिमका पाप आदि त्याग गर्ने र पछि सूक्ष्म अकुशलहरू समेत त्याग गर्ने अभ्यास गर्नुपर्छ। यदि दोष लाग्यो भने तुरुन्तै शोधन गरिहाल्नुपर्छ। त्यसमा जुन प्रहरमा आपत्ति भयो (दोष लाग्यो) त्यो प्रहर नबित्दै प्रायश्चित्त गर्नुपर्छ भनेर मेरा गुरु भट्टारक[६०] महाभूमिपाण्डर (ड्राक्पा ग्याल्छेन)का मुखबाट आज्ञा भएको थियो। महासागर र मुर्दा संगसंगै नरहे जस्तै धर्म गर्नेहरू आपत्ति संगसंगै रहनु हुदैन। (यहाँ आपत्ति भनेको शीलको त्रुटि हो।) त्यस्तै दिनमा आपत्ति लाग्यो कि लागेन भनेर सुत्ने बेलामा विचार गर्नुपर्छ, नलागेको भए आनन्द मान्नुपर्छ र त्यसबाट आएको पुण्यलाई बोधिको लागि परिणामना गरिदिनुपर्छ। आपत्ति लागेको रहेछ भने आफ्नो मनमा अरूले के भन्लान् भनी लाज मानेर पश्चात्ताप गरी प्रायश्चित्त गर्नुपर्छ। जबसम्म दोष शुद्ध हुदैन तबसम्म नसुत्नू। बिहान उठेर पनि त्यस्तै गरी दोषको प्रायश्चित नभएसम्म भोजन नगर्नू भन्ने कुरा "लेगड्रुप" (सुसिद्धि = तीन किसिमका क्रिया तन्त्रमध्येको एउटा) मा भनिएको छ। दिनमा प्रमादी (बेहोसी) भएर गरेका दोषहरूलाई एक एक गरेर रातमा प्रायश्चित्त गर्नुपर्छ। बेलुकी गरेका दोषहरूको बिहान प्रायश्चित्त गर्नुपर्छ। शुभ गरेमा प्रमुदित खुसी हुनुपर्छ। यसरी भावना र अभ्यास गरेमा ती धार्मिकहरू महासागर झैं बन्छन् भनेर सूत्रमा बताइएको छ। सत्पुरुषले दुई काम गर्छन् - पहिले त आपत्ति हुने कर्मै गर्दैनन्, आपत्ति भइहाल्यो भने पनि तुरुन्तै सुधार गर्छन् भनेको यही हो।

---

[६०] तिब्बतमा 'साक्या' भनिने स्थानबाटै फैलिएकोले साक्यापा परम्परा भन्ने ख्याति भएको हो। संस्कृतमा त्यसलाई 'भूमिपाण्डर' याने 'सेतो भुईं' भनिएको हो।

उपवासको वेलामा विनयागममा देवपुत्र प्रत्यङ्गविपन्न आदिको कथा र प्राणीहत्यालाई त्यागेका सुपारमिता आदिका जातक कथा पनि यहाँ सुनाउनु पर्छ॥ यस्तै अरू दश कुशल कर्म गरेमा फाइदा र नगरेमा दोष हुने कुरालाई जातक कथा र सूत्रहरूमा भनिए जति सवै मिलाएर वुझ्नु पर्छ।

२. कुशलधर्मसंग्राहक शील

कुशल धर्म प्राप्तिको लागि अकुशल धर्मलाई जरोसहितै त्याग्ने चिन्तनमा सदा स्नेह भई रहनु नै कुशलधर्मसंग्राहक शील हो। यसको विभागमा शरणगमनदेखि लिएर बुद्धका गुणसम्मका कुशलधर्मसंग्रह गर्ने अभ्यास गर्नू भनी सुभाषित-रत्न-निधिमा भनिएको छ। आफूलाई आवश्यक पर्ने ज्ञानहरूलाई प्रत्येक दिन एक एक शव्दको दरले समात्दै (कण्ठ गर्दै) गएमा कमिला या माहुरीले जस्तै गरी धेरै समय नलगाएरै विद्वान् वन्न सकिन्छ। त्यस्तै आचरणसँग नमिल्ने कुरालाई जति सकिन्छ त्याग्दै जानुपर्छ र प्रत्येकमा जे दोष लाग्छ त्यसमा आ-आफ्नो विधि अनुसार पाप र आपत्तिको प्रायश्चित्त गर्नु पर्दछ।

३. सत्वार्थक्रिया शील

परहित गर्दा त्यससँग विरोध हुने कुरालाई जरैसहित त्याग्ने चिन्तनमा सदा स्नेह हुनु नै त्यसको लक्षण हो। यसमा अभ्यास गर्दा परहित हुने भएमा आफ्नो प्रातिमोक्षशील नै तोडिने भए पनि परहितको लागि चार पाराजिक कर्मसमेत गर्दछन्। जस्तैः- ब्राह्मणपुत्र नक्षत्रक र महाकरुणा सार्थवाहले[*1] गरेको कर्म। फेरि परहित हुने

---

*१ पालि हारित जातकमा वोधिसत्वले सत्य वाहेकका अरू शीलहरू परहितको लागि आवश्यक भएमा तोडे हुने देखाइएको छ।

भएमा आफ्नो कुशलधर्मसंग्राहक शील पनि त्यागिदिन्छन् । जस्तै बोधिसत्व सुपुष्पचन्द्र र शक्र सुनयन आदिले त्यस्तो गरेका थिए ।

शील अभ्यास गर्दा अविपरीत हुनको लागि चार गुणले युक्त हुनु र सात आसक्ति त्याग गर्नुपर्छ। सूत्रलंकारमा बताइएको छ –

**शीलं विपक्षहीनं ज्ञानेन गतं च निर्विकल्पेन ।**
**सर्वेच्छा परिपूरक मपि सत्वविपाचकं त्रेधा ॥**
**न च सक्तं न च सक्तं न च सक्तं सक्तमेव न च शीलम् ।**
**न च सक्तं न च सक्तं न च सक्तं बोधिसत्वानाम् ॥**

शील विपक्षले रहित हुनु भनेको दुःशील त्याग्नु (शील भ्रष्ट नहुनु) हो, निर्विकल्प भनेको अनात्मबोध गर्नु हो, सबैको इच्छा पूरा गर्नु भनेको शीलद्वारा अरूको काय-वाक्-चित्तको बचाउ गर्नु हो, सत्वविपाचक भनेको सत्वहरूलाई शीलद्वारा खुशी पारी तीन यानमा लगाउनु नै हो। यी नै चार गुण हुन् ।

**सात आसक्ति** त्याग्नु भनेको १. शीलको विपक्ष दुःशीलमा आसक्तिलाई त्याग्नु २. आलस्यमा (पछि गर्छु भन्ने भावमा) आसक्तिलाई त्याग्नु । ३. त्यति पालन गरे पुग्छ भन्ने खालको सन्तोषको आसक्तिलाई त्याग्नु ४. लाभ आदि प्रतिफल (यही जीवनका) पाउने आसक्तिलाई त्याग्नु ५. विपाक (पछिपछिको जीवनका) को आसक्तिलाई त्याग्नु ६. प्रतिकूलताको आसक्तिलाई त्याग्नु । यो भनेको त्यसको अनुशयलाई नहटाउने आसक्ति त्याग्नु हो । ७. चञ्चलतामा आसक्तिलाई त्याग्नु । यो पनि दुई थरीको छ जुन माथि दानमा बताइएजस्तै हो। यस्ता सात आसक्तिलाई अनुशयसहित त्याग्नुपर्छ ।

३. शीलपालनको फल

यसमा अहिलेको फाइदा र अन्तिमको फाइदा गरी दुई किसिमका फाइदा हुन्छन्। अहिलेका फाइदाहरूमा पनि यो जन्मका फाइदा र भावी जन्मका फाइदा गरी दुई थरीका फाइदा छन्।

यो जीवनमै हुने फाइदामा शीलवान्लाई कुनै पश्चात्ताप हुँदैन। त्यसले गर्दा चित्त पनि प्रसन्न रहन्छ र स्वस्थ हुन्छ। तीनओटै प्रज्ञाका हेतु जस्ता अनेक गुणहरू प्राप्त हुन्छन् भनेर समाधिराजसूत्रमा वताइएको छ – "हे समाधिराजा, शुद्धशीलको पालनमा नै शून्यताको भावना आश्रित हुन्छ। धर्मको स्वभाव बुझ्न सधैं समाधि चाहिन्छ, त्यो बालक जनले बुझ्दैनन्। कोशिस मात्र गर्नेले जान्दैनन्।" त्यस्तै अरू गुणहरूमा, शीलको सुगन्ध दशै दिशातिर फैलिन्छ। शीलवान्ले नगरवाट लिएको भिक्षा पनि सार्थक हुन्छ। ऊ देवताहरूको लोकमा पनि पूजनीय हुन्छ। संघमा बस्दा पनि ऊ सुन्दर र तेजस्वी देखिन्छ। शीलका फाइदाका सम्वन्धमा सूत्रहरूमा अरू पनि थुप्रै कुराहरू बताइएका छन्।

परलोकका फाइदाहरूमा "श्रद्धाले अक्षणमा[४२] जाँदैन, शीलले भद्रगति (सुगति) मा जान्छ" भने जस्तै शीलवान् व्यक्ति पछि सुगतिमा सात गुणहरूले सहित भएर जन्मिन्छ। ती सात गुणमा १. राम्रो कुलमा जन्म हुनु २. राम्रो रूप हुनु ३. धन आदिले सुसम्पन्न हुनु ४. प्रज्ञाले सम्पन्न हुनु ५. ऐश्वर्यले सम्पन्न हुनु ६. आरोग्यले युक्त हुनु ७. दीर्घायु हुनु

[४२] अक्षण भनेका नरक, प्रेत, पशु, दीर्घायु देवता, म्लेच्छ, बुद्ध नभएको देश, काल, परिस्थिति, मिथ्यादृष्टि भएको र मूकता यी अवस्थामा जन्मनु हुन्। यहाँ धर्म आदि सुन्ने र तर्ने समय या अवसर नै हुँदैन। त्यसैले अक्षण भनिएको हो।

पर्दछन् भनेर संक्षेपमा श्लोकबाट बताइएको छ। शील-सम्पन्न व्यक्ति जहाँ जहाँ जन्मिन्छ त्यहाँ त्यहाँ ती गुणहरू प्राप्त हुन्छन् भनिएको छ।

अन्तिमका फाइदामा सम्यक् सम्बुद्ध नै बनिन्छ भनेर सूत्रसञ्चयमा बताइएको छ। आकाशान्तसम्मका देवसहित सबै लोकका शास्ता भनी ख्याति हुन्छ र काय-वाक्-चित्तका कर्म शुद्ध हुनाले अरूले दोष देखाउँछन् कि भन्ने शंका हुँदैन र ३ निगृह्यवक्तृत्व प्राप्त गर्छ भनी सूत्रालंकारमा बताइएको छ–

**निगृह्यवक्तः पर्षत्सु द्वयसंक्लेशवर्जित**
**निरारक्ष असम्मोष गणाकर्ष नमोऽस्तु ते ॥**

यस्ता अनेकौं गुण प्राप्त हुन्छन् ।

**३. क्षान्तिपारमिता** :- यसमा तीन प्रकारका कुरा बताइन्छन् । १. क्षान्तिको लक्षण २. क्षान्तिको स्वभावको निश्चय ३. क्षान्ति अभ्यासको फल ।

१. क्षान्तिको लक्षण- अरूले आफूलाई अपकार गर्दा पनि मन क्षुब्ध नहुनु नै क्षान्तिको लक्षण हो। यो पनि प्रयोग, मौल र पृष्ठद्वारा समाहित भएमा क्षान्तिपारमिता हुन्छ।

२. क्षान्तिको स्वभावको निश्चय - यसभित्र (क) विपक्षलाई चिन्नु (ख) प्रत्येकको उपचारको स्वरूपलाई बुझ्नु र (ग) तिनीहरूलाई अविपरीत रूपमा सिद्ध गर्नु, यी तीन कुरा पर्दछन्।

(क) विपक्षलाई चिन्नु:- क्षान्तिको विपक्ष क्रोध हो। त्यसलाई चिन्नु भनेको अरूले अपवाद गर्दा आफ्नो मन क्षुब्ध भएको थाहा पाउनु हो। यो क्रोध अर्थात् क्षुब्ध हुने कामका अवगुणहरू दुई प्रकारका जान्नु पर्छ। १. यो जीवनका अवगुण २. सधैंभरिको लागि सुखको विनाश ।

१. यो जीवनका अवगुणका सन्दर्भमा बोधिचर्यावतारमा यसरी बताइएको छ -

**मनः शमं न गृह्णाति न प्रीतिसुखमश्नुते ।**

**न निद्रां न धृतिं याति द्वेषशल्ये हृदि स्थिते ।।**

"द्वेषरूपी काँडो हृदयमा भएसम्म मन शान्त हुन सक्दैन, प्रीति र सुखको अनुभव गर्न पनि सक्दैन, निद्रा पनि लाग्दैन, धैर्य पनि हुन सक्दैन।" अतः मनमा द्वेष छ भने उसको मन आनन्दित हुन र शरीरमा सुखलाभ हुन एवं मन र शरीर सही अवस्थामा रहन पनि सक्दैनन्। त्यसैले स्थिरता लाभ हुँदैन। आफू असन्तुलित भएपछि अरूको भर पर्नुपर्ने हुन्छ। बोधिचर्यावतारमा अझै भनिएको छ–

**पूजयत्यर्थमानैर्यान् येऽपि चैनं समाश्रिताः**

**तेऽप्येनं हन्तुमिच्छन्ति स्वामिनं द्वेषदुर्भगम् ।।**

"द्वेषी मालिक छ भने उसले धन, मान दिएका र उसकै आश्रयमा रहेका (नोकर आदि) ले पनि उसलाई मार्न खोज्ने हुन्छन्।"अतः नराम्रो द्वेषी स्वभावको मालिक भयो भने उसमा आश्रित भएका नोकर चारकहरू, जो उसैको सम्पत्ति भोग सामग्रीआदिले पालिएका छन्, तिनीहरूले पनि त्यो मालिकको हत्या गरेका दृष्टान्तहरू भेटिन्छन्। बोधिचर्यावतारमा अझै यस्तो भनिएको छ–

"**संक्षेपान्नास्ति तत्किञ्चित् क्रोधनो येन सुस्थितः**" संक्षेपमा भन्ने हो भने क्रोधी व्यक्ति आरामसित रहेको भन्ने कतै पनि छैन। अतः अति नराम्रो स्वभाव (द्वेषी) भयो भने यो जीवनमा र अर्का जीवनहरूमा पनि दुःख पाउँछ। उसले धर्म गरिहाल्यो भने पनि धर्ममित्र, कल्याणमित्र, पूजनीय व्यक्तिहरू सबैसँग मिलेर बस्न सक्दैन। त्यसैले आफू पनि पीडित हुनु र अरूले पनि धर्म गर्ने व्यक्तिको रूपमा नगन्नु बाहेक अर्को कुनै लाभ छैन। धार्मिक मानिस भएर पनि आफूसँग त्यो नराम्रो दोष हुनाले गर्दा बाँचुञ्जेलसम्म

आजीविका र भोगचलनको लागि सधैं झै-झगडा गरिरहन्छ। त्यो पनि आफैंले व्यहोर्न नसकेर छोरा-नाति आदिलाई गुहार्नु पर्ने हुन्छ। नपर्दासम्म झैझगडा गरी गरी अन्तमा मृत्यु भैसकेपछि पनि अरूलाई शोक पार्दै नराम्रो हुने बाहेक अरू कसैको पनि हित नहुने हुनाले क्रोधलाई त्याग्नु पर्दछ।

२. सधैंभरिको लागि सुखको विनाश हुने सन्दर्भमा आर्य रत्नकूटसूत्रमा भनिएको छ "द्वेष भनेको हजारौं कल्पसम्म आफूले कमाएको कुशलमूललाई भस्म पार्ने स्वभाव हो।" त्यस्तै बोधिचर्यावतारमा भनिएको छ–

**सर्वमेतत्सुचरितं दानं सुगतपूजनम्**

**कृतं कल्पसहस्रैर्यत् प्रतिघः प्रतिहन्ति तत् ॥**

अर्थात् "हजारौं कल्पसम्म गरिएको जुन दान, सुगतको पूजा आदि पुण्यकर्म छ, त्यो सबै क्रोधले नष्ट पारिदिन्छ।" रत्नावलीमा पनि भनिएको छ, "द्वेषले नरकमा हुत्याइदिन्छ।" अतः द्वेषले धेरै कल्पसम्म जम्मा गरेका कुशल कर्महरूलाई विनाश गर्ने भएकोले दुर्गतिबाट मुक्ति हुँदैन।

(ख) प्रत्येकको उपचारको स्वरूपलाई बुझ्नु -यसमा दुईओटा कुरा छन्। (१) हेतुको उपचार (२) फलको उपचार।

१. हेतुको उपचार - द्वेषलाई त्याग्नको निमित्त त्यसको बीज (हेतु) लाई त्याग्नु पर्ने भएकोले बोधिचर्यावतारमा "**दौर्मनस्याशनं प्राप्य द्वेषो तृप्तो निहन्ति माम्**" अर्थात् "दौर्मनस्य (नराम्रो मन गराउनु) रूपी भोजन पाएर अघाएको द्वेषले मलाई नाश गर्छ" भनिए अनुसार दौर्मनस्य याने मनमा खिन्नता या पीडा महसूस गरिरहनु नै द्वेषको हेतु हो। त्यसको उपचारको लागि पनि त्यहीं बताइएको छ–

**यद्यस्त्येव प्रतीकारो दौर्मनस्येन तत्र किम् ।**
**अथ नास्ति प्रतीकारो दौर्मनस्येन तत्र किम् ॥**

अर्थात् "त्यसको प्रतीकार छ भने मन किन दु:खाउने ? यदि त्यसको प्रतीकारै छैन भने फेरि किन मन दु:खाउने ?"

अत: मानिसको मृत्यु हुनु, भाँडो फुट्नु आदि कुरा फेरि बनाएर बन्दैनन् भने (त्यो बिगार्नेवालाप्रति) नराम्रो गरेर त तिनीहरूको केही उपकार हुँदैन। अत: त्यसको स्वभावै त्यस्तो हो भन्ने बुझेर मनलाई सन्तोष दिनुपर्छ। यदि घाउ, भत्केको घर जस्ता कुरा फेरि बनाएर बन्छन् भने (त्यो बिगार गर्नेप्रति) किन नराम्रो चिताउनु ? यसरी मनमा धेरै पीडा छैन भने कुनै अपराध भए तापनि धेरै क्रोध उत्पन्न हुँदैन। यसप्रकार द्वेषको हेतु र फल दुवैलाई प्रहाण गर्ने उपायमा प्रयत्न गर्नुपर्छ भनेर बोधिचर्यावतारमा भनिएको छ–

**"यः क्रोधं हन्ति निर्बन्धात् स सुखीह परत्र च ।"**

याने जसले होसियार भएर क्रोधलाई नाश गर्दछ ऊ यो लोक र परलोक दुवैमा सुखी रहन्छ।

२. फलको उपचार - यसमा १. दु:खाधिवासना क्षान्ति २. धर्मनिध्यान क्षान्ति र ३. परापकारमर्षण क्षान्तिको अभ्यास पर्दछन्।

१. दु:खाधिवासना क्षान्ति

आफ्नो र अरूको काय, वाक् र चित्तका सबै कुकर्महरूलाई प्रहाण गरी सबै कुशल पक्षहरूलाई सिद्ध गर्नको लागि अघिका बुद्धबोधिसत्वहरूले पनि तपस्या, जाडो, गर्मी, भोक, प्यास, रोग, दुष्टआदिको पीडालाई खपेर अत्यन्त कठिन कार्य बुद्धत्वलाभ गरेरै छाडे भने म आफूले पनि बुद्धताप्राप्तिको लागि परहित गर्न नरकको दु:ख त खप्नु पर्नेमा यस्तो सामान्य दु:खलाई सहन नसक्ने त कुरै भएन

भनेर दु:खाधिवासना क्षान्तिको अभ्यास गर्नुपर्छ भनी सूत्रमा बताइएको छ–

"धर्म अभ्यास गर्न एकान्तमा बस्दा हिंस्रक प्राणीले खाने, चोर डाँका आदिले दु:ख दिनेजस्ता दु:ख आइपरेमा मेरा सबै कर्मावरणहरू यो कार्यले गर्दा शुद्ध होऊन् म बुद्ध हुने क्षेत्रमा यस्ता अपवाद आइ नलागून् भनेर बुद्धक्षेत्रलाई शुद्ध गर्दै सत्वपरिपाक गर्ने अभ्यास गर्नुपर्छ।"

२. धर्मनिध्यान क्षान्ति

यसभित्र (क) संवृतिक्षान्ति र (ख) परमार्थक्षान्ति गरी दुई किसिमका छन्। संवृतिक्षान्ति भनेको आफूलाई अरूले अपकार गर्दा 'संसार सबै नै दु:खदायी छ, जस्तै आगोको स्वभाव तातो छ, पानीको स्वभाव भिजाउने छ, पृथ्वीको स्वभाव कडापन हो, वायुको स्वभाव चञ्चल छ भने आकाशको स्वभाव शून्य छ, प्राणीको स्वभाव नदाइएको छ, अत: तिनीहरूसँग रिसाउनु हुँदैन' भन्दै आफूलाई सम्झाउनु हो। बोधिचर्यावतारमा भनिएको छ "**यथाग्नौ दहनात्मके**" अर्थात् जलाउने स्वभाव भएको आगोप्रति किन द्वेष गर्ने ? त्यस्तै त्यहीँ बताइएको छ,

"**कियतो मारयिष्यामि दुर्जनान् गगनोपमान्**
**मारिते क्रोधचित्ते तु मारिता: सर्वशत्रव: ॥**

अर्थात् "आकाशसमानका दुर्जनहरूलाई कति मारेर सकुँला ? बरू आफ्नै क्रोधचित्तलाई मारियो भने त सबै शत्रुहरू नै नाश भइहाल्छन्।"

यदि प्राणीको स्वभाव राम्रो हो तर दोषचाहिँ आगन्तुक हो भने पनि तिनीहरूप्रति रिसाउनु राम्रो हुँदैन किनकि बोधिचर्यावतारमा बताइएको जस्तो "**कटुधूमे यथाम्बरे**" अर्थात् धूवाँ पीरो भयो भनेर आकाशप्रति द्वेष गर्नुजस्तै

हुन्छ। (धूँवा त आकस्मिक हो, त्यो हटेपछि आकाश त पीरो हुँदैन अनि किन आकाशलाई दोषी ठान्नु ?)

अझै आफ्नो दुष्कर्मलाई विचार गरेर पनि रिसलाई रोक्न सकिन्छ। यसरी "मैले पहिले अरूलाई अपकार गरेको हुनाले अहिले त्यसको फल आफूमा आइलागेको हो। त्यसमा किन रिसाउनु ?" अभिधर्मकोषमा यस्तो भनिएको छ–"कर्म भनेको वोक्रासहितको फल जस्तै हो, औषधि र पुष्प जस्तै हो।" वोधिचर्यावतारमा यस्तो भनिएको छ–

**"मयापि पूर्वसत्वानामीदृश्येव व्यथा कृता।**
**तस्मान्मे युक्तमेवैतत् सत्वोपद्रवकारिणः॥**
**तच्छस्त्रं मम कायश्च द्वयं दुःखस्य कारणम्।**
**तेन शस्त्रं मया कायो गृहीतः कुत्र कुप्यते॥**

"मैले पनि पहिलेका प्राणीहरूलाई यस्तै पीडा दिएको थिएँ। त्यसैले प्राणीहरूलाई उपद्रव गर्ने म जस्ताको लागि यस्तो हुनु ठीकै छ।"

"(ती अपकारीहरूले वोकेको) शस्त्र र मेरो शरीर दुवै नै दुःखका कारण हुन् भने उसले (त्यो अपकारीले) शस्त्र धारण गऱ्यो त मैले शरीर धारण गरें। अव कोसँग रिसाउने ? (गल्ती त दुवैले वारवर गरिएछ)।"

**कस्मादेवं कृतं पूर्वं येनैवं बाध्यसे परैः।**
**सर्वेः कर्मपरायत्ताः कोऽहमत्रान्यथाकृतौ॥**

"पहिले किन यस्तो कर्म गरेको हो जसले गर्दा अरूबाट यहाँ पीडित हुनु परिरहेछ ? सवै नै कर्मका अधीनमा छन्, म मात्र को हुँ जसले यसलाई तोड्न सक्छु ?"

**मोहादेकेऽपराध्यन्ति कुप्यन्त्यन्ये विमोहिताः।**
**ब्रूमः कमेषु निर्दोषं कं वा ब्रूमोऽपराधिनम्॥**

कसैले मोहले गर्दा नै अपराध गर्न पुग्छन् भने अर्काथरी (आफू) मोहैले मोहित भएर (नजानेर) क्रोध

गर्छन् । यीमध्ये कसलाई निर्दोष भनूँ ? कसलाई अपराधी भनूँ ?" यस्ता कुरा बताइएको हुनाले संवृतिधर्महरूलाई सम्झेर क्रोधलाई रोक्नु (उपचार गर्नु) पर्छ ।

२. परमार्थक्षान्तिको अभ्यास

आफूलाई अरूले अपकार गर्दाखेरि परमार्थतः विचार गर्दा रीस गर्ने स्थान 'म' रीस गर्ने (अपकार गर्ने) वाला शत्रु र स्वयं त्यो अपवाद पनि वास्तवमा असिद्ध हुने भएकोले निष्प्रपञ्चरूपमा रीस शान्त पार्नु पर्छ भनेर बोधिचर्यावतारमा यसरी बताइएको छ–

**एवं शून्येषु धर्मेषु किं लब्धं किं हृतं भवेत् ।**
**सत्कृतः परिभूतो वा केन कः सम्भविष्यति ॥**

"यसप्रकार सबै कुरा शून्य भएकोले के प्राप्त हुनु या गुमाइनु छ र ? कसले कसलाई सत्कार गर्न या तिरस्कृत गर्न सक्छ र ?"

**कुतः सुखं वा दुःखं वा किं प्रियं वा किमप्रियम् ।**
**का तृष्णा कुत्र सा तृष्णा मृग्यमाणा स्वभावतः ॥**

"सुख कहाँबाट हुन्छ ? दुःख पनि कहाँबाट हुन्छ ? प्रिय अथवा अप्रिय के हो ? स्वभावतः खोज्ने हो भने तृष्णा भनेकै के हो ? कहाँ छ त्यो तृष्णा ?"

**विचारे जीवलोकः कः को नामात्र मरिष्यति**
**को भविष्यति को भूतः को बन्धुः कस्य कः सुहृत् ॥**

विचार गर्ने हो भने जीवलोक भनेको के हो ? को यहाँ मर्छ ? को पछि हुनेवाला छ ? को पहिले थियो ? को बन्धु हो ? कसको को मित्र हो ?"

**सर्वमाकाशसंकाशं परिगृह्णन्तु मद्विधाः ।**

"मजस्ता व्यक्तिहरूले सबै धर्महरूलाई आकाश समानको (स्वभावहीन) रूपमा ग्रहण गर्नू।"[४३]

३. परापकारमर्षण क्षान्ति

यसमा (क) भावनाको क्षेत्र (विषय), (ख) समय र (ग) स्वभाव गरी तीन किसिमले क्षान्ति भावना गर्नुपर्छ।

(क) विषयको हिसाबले- सर्वप्रथम कुटुम्वहरूमा क्षान्तिको भावना गर्न सिक्नु पर्छ। त्यसपछि सामान्य जनमा र त्यसपछि शत्रुप्रति अभ्यास गर्नुपर्छ।

(ख) समयको हिसाबले- यसमा पहिले आधा दिनसम्म जोसुकैले अपकार गरे पनि सहने छु भनेर क्षान्तिको अभ्यास सुरु गर्नुपर्छ। विनयमा श्रमणले कसम ख्वाएर कसम नखानु भन्ने बताइएको हुँदा भिक्षुहरूले त्रिरत्नको अगाडि बसी प्रतिज्ञा गरेर क्षान्ति भावना गर्नुपर्छ। अनि क्रमश: एक दिन, एक दिनरात, आधा महिना, एक महिना एक वर्ष गर्दै समयलाई लम्ब्याएर क्षान्तिको अभ्यास गर्नुपर्छ।

(ग) स्वभावको हिसाबले- सबै प्राणीहरू आफ्ना कुटुम्ब भैसकेका हुनाले स्वभावैले उनीहरूमा क्षान्तिको भावना गर्नुपर्छ। सुहृल्लेखमा नागार्जुनले भन्नुभएको छ– "सम्पूर्ण पृथ्वीको माटोबाट वयरका दाना जत्रा गोली बनाएर आफ्ना पूर्वजन्मका आमाहरूको गणना गर्दा पनि पुग्नेछैन।"

(बज्र शिखर तन्त्र) मा यस्तो भनिएको छ–"आफ्ना पुत्रलाई पनि माया नगर्ने श्रावकहरू दुर्भागी हुन्। सबै प्राणीलाई माया गर्ने सौभाग्यवान् श्रीवज्रपाणि हुन्"।

---

[४३] शान्तिदेवले यो श्लोकमा आफूले जसरी समस्या समाधान गर्नुभएको थियो त्यसरी गर्नु राम्रो भन्ने सल्लाह दिनुभएको हो। यो शून्यताको विपश्यनासँग सम्बन्धित छ।

तदनुसार सबै सत्वहरू आमा या छोरा समानका हुनाले गर्दा आफूप्रति अपकार गर्नेहरूमा रीस नगर्ने बानी गर्नू भन्दै बोधिचर्यावतारमा भनिएको छ–

**यो हि येन विना नास्ति यस्मिँश्च सति विद्यते ।**
**स एव कारणं तस्य स कथं विघ्न उच्यते ? ॥**

"जसको अनुपस्थितिमा त्यो हुँदैन जो भएमा त्यो हुन्छ, त्यसलाई त्यसको कारण भन्छन् । त्यो कसरी विघ्न भन्न सुहाउँछ ?"

**तद्दुष्टाशयमेवातः प्रतीत्योत्पद्यते क्षमा ।**
**स एवातः क्षमाहेतुः पूज्यः सद्धर्मवन्मया ॥**

"त्यसकारण उसको त्यो दुष्टाशयलाई नै प्रत्यय बनाएर क्षान्ति उत्पन्न हुन्छ । त्यसैले त्यो त क्षान्तिको हेतु हो । मैले त्यसलाई सद्धर्मलाई जस्तै पूजा गर्नुपर्छ ।"

**अश्रमोपार्जितस्तस्माद् गृहे निधिरिवोत्थितः ।**
**बोधिचर्यासहायत्वात् स्पृहणीयो रिपुर्मम ॥**

"कुनै पनि परिश्रम नगरिकन घरमै खानि उत्पत्ति भएझैं आएको त्यो शत्रु त बोधिचर्याका निर्मित्त सहायक भएको हुनाले मैले प्रशंसै गर्न योग्य छ ।" यसप्रकार शत्रुविना क्षान्तिपारमिता नहुने भएकोले शत्रुलाई देख्नासाथ मेरो क्षान्तिपारमिता पूर्ण हुने भयो भन्ने सम्झी मनमा आनन्दको भावना गर्नू । बोधिचर्यावतारमा भनिएको छ–

**मारणीयः करं छित्वा मुक्तश्चेत्किमभद्रकम् ।**
**मनुष्यदुःखैर्नरकान्मुक्तश्चेत् किमभद्रकम् ॥**

"मारिनेवाला व्यक्तिलाई हात मात्रै काटेर छोडिदिँदा के अकल्याण हुन्छ ? मनुष्यको रूपमा (अलिकति) दुःख सहनाले नरकका दुःखबाट मुक्त भइन्छ भने के अकल्याण भयो त ?"

(ग) क्षान्तिका यी अभ्यासहरूलाई अविपरीत रूपमा सिद्ध गर्नु :- यहाँ पनि सूत्रालंकारमा भनिए अनुसार–

"**क्षान्तिर्विपक्षहीना ज्ञानेन**......" आदि चार गुण र "**न च सक्ता न च सक्ता** ......" आदि सात आसक्तिलाई अनुशयसहित त्यागेर अभ्यास गर्नु पर्छ ।

३. क्षान्ति अभ्यासको फल

यसमा अहिलेको फल र अन्तिमको फल गरी दुई किसिमका फल छन् । अहिलेको फलमा पनि यही जीवनमा प्राप्त हुने फलमा अरूले अपकार गर्दा पनि सहन सकिने भएबाट अरूको अपकार गर्ने चित्त र प्रयोग आफैं शान्त भएर जान्छ जसले गर्दा आफूलाई शारीरिक र मानसिक सुखलाभ हुन्छ र अन्तमा सबै शत्रु आफैं नै शान्त भएर जान्छन् । परलोकमा जाँदाखेरि पनि निर्भय भएर जान सकिने आदि विभिन्न लाभहरू हुन्छन् ।

परलोकका फाइदामा जुन जुन स्थानमा जन्म हुन्छ त्यहाँ त्यहाँ रूप राम्रो हुन्छ, दीर्घायु हुन्छ, आरोग्य हुन्छ, मनुष्य र अमनुष्यको शत्रु बन्दैन र चक्रवर्ती राजाआदि र देवसहितका सबै सम्पन्नताहरू स्वतः प्राप्त हुन्छन् । बोधिचर्यावतारमा बताइएको छ–

**प्रासादिकत्वमारोग्यं प्रामोद्यं चिरजीवितम् ।**
**चक्रवर्तिसुखं स्फीतं क्षमी प्राप्नोति संसरन् ॥**

"संसारमा घुम्दाखेरि पनि क्षान्तिको अभ्यास भएको व्यक्तिले प्रसन्नता, आरोग्य, दीर्घायु, चक्रवर्ती राजाका सुख आदि प्राप्त गर्दछ ॥" त्यस्तै पारमित सञ्चयगाथामा भनिएको छ "क्षान्तिले अत्यन्त राम्रो रूप लाभ हुन्छ, सुनौलो, सुन्दर र लोकले हेर्न लायकको हुन्छ ।" त्यस्तै सुहृल्लेखमा भनिएको छ - "क्षन्ति समानको अर्को कुनै तपस्या नभएकोले क्रोधलाई स्थान नदिनुहोला । बुद्ध स्वयंले स्वीकार गर्नुभएको छ कि क्रोधको प्रहाणबाट अवैवर्तिक पद प्राप्त हुन्छ ।"

अन्तको फलमा ३२ लक्षण र ८० अनुव्यञ्जन प्राप्त भई सवै जनालाई मनोहर लाग्ने काय प्राप्त हुन्छ भनी सूत्रालंकारको चर्याप्रतिष्ठाधिकारमा वताइएको छ–

"**सत्पौरुषं प्रपद्यन्ते त्वां दृष्ट्वा सर्वदेहिनः ।**
**दृष्टमात्रात् प्रसादस्य विधायक नमोऽस्तु ते ।**"

त्यस अनुसार जान्नु पर्छ ॥

**४. वीर्य पारमिता:–** यसभित्र तीन कुरा वताइन्छ। १. वीर्यको लक्षण २. त्यसको स्वभावलाई निश्चय गर्नु ३. वीर्यपालन गर्नुका फाइदाहरू -

१. वीर्यको लक्षण - अरूको हितको लागि कुशल कर्म गर्न उत्साह हुनु नै वीर्यको लक्षण हो। बोधिचर्यावतारमा बताइएको छ कि "**किं वीर्यं कुशलोत्साहः**" अर्थात् वीर्य भनेको के हो ? कुशल कर्म गर्नमा भएको उत्साह हो। यो प्रयोग, मौल र पृष्ठले समाहित भएमा वीर्यपारमिता हुन्छ।

२. वीर्यको स्वभावलाई निश्चय गर्नु - यसमा तीन प्रकारका कुरा पर्दछन्। (क) वीर्यको विपक्षलाई चिन्नु। (ख) ती प्रत्येकको उपचारलाई वुझ्नु र (ग) तिनीहरू अविपरीत रूपमा सिद्ध गर्नु।

(क) वीर्यको विपक्षलाई चिन्नु - वीर्यको विपक्ष आलस्य अर्थात् अल्छिपन हो। यसलाई चिन्नुको तात्पर्य के हो भने शरीर, मन र वचन तीनैवाट कुशल कर्ममा नलाग्नु, लागे पनि तीर्थिकहरूले झैं अकुशल कर्मलाई पनि कुशल सम्झेर त्यसमा उत्साहित हुनु, कुशल भए पनि संसार या

निर्वाणमध्ये[४४] कुनै एक अन्तमा पुग्नमा उत्साह हुनु यी सवै कुरा विपक्ष हुन् भनेर वुझ्नु हो।

यसका दोषलाई वुझ्नु पर्छ। यसका दोषहरू दुई प्रकारका छन्। १. यो जन्मको दोष २. सवै जन्मको सुख र लाभको विनाश।

१. यो जन्मको दोष - वोधिचर्यावतारमा भनिएको छ -

"हीनताबोध गरेर वीर्य त्याग्नेहरूले घाटा खानुवाहेक मुक्ति त कहाँबाट पाइन्छ र ? गर्व र वीर्य उत्पन्न गर्ने हो भने ठूलै क्लेशले पनि जित्न सक्दैनन्।" अतः हीनता र आलस्यले निश्चेष्ट भई समय खेर फाल्नेहरूलाई यही जीवनको आर्थिक व्यापार, वस्त्र, भोजन पनि प्राप्त हुन सक्दैन भने त्यस्ताले श्रुतमयी, चिन्तामयी र भावनामयी आदि कुशल (प्रज्ञा) पक्षहरूलाई कहाँ प्राप्त गर्न सक्लान् र ? संक्षेपमा भन्दा अल्छीहरूले वुद्धको दर्शन पनि पाउँदैनन्, गुरुको ज्ञान पनि सुन्दैनन् र कुशल धर्मको वाधा नै वन्न पुग्छन्। त्यस्तै राजाको राज्य बिग्रिन्छ, साधारण व्यक्तिहरूको पनि व्यापार आदि कुरा विग्रेका दृष्टान्तहरू प्रशस्तै छन्। त्यस्तै देवसहित लोकले गिज्याउने पात्र बनिन्छ भन्ने पनि बुझ्नु बुझाउनु पर्छ।

२. सधैंको लागि सुखको विनाश - प्रज्ञापारमितामा यस्तो भनिएको छ, "अल्छीहरूले आफ्नो हित गर्न सक्दैनन् भने अरूको हित त परै जाओस्"। त्यस्तै बोधिचर्यावतारमा भनिएको छ –

**जीवमत्स्य इवास्मीति युक्तं भयमिहैव ते**
**किं पुनः कृतपापस्य तीव्रान्नरक दुःखतः ॥**

---

[४४] श्रावकयानमा निर्वाण-अन्तमा पुग्न उत्साह हुनुलाई नै वीर्य मानिन्छ भने यहाँ वोधिसत्वयान अनुसार यसमा उत्साह हुनु पनि दोषभित्र पर्ने भएकोले त्यस्तो भनिएको हो।

"मार्नलाई पालिएको माछा झैं हुँ भनेर तिमी यहाँ अहिले नै डराउनु पर्ने हो। अझ पाप पनि गरेर नरकका तीव्र दु:खदेखि पनि नडराउने त कुरै हुँदैन।" यसको तात्पर्यलाई विचार गर्नुपर्छ। (अर्थात् अल्छी गर्नाले अन्तमा नरक आदि दुर्गतिमै फँसेर सधैंको लागि सुखको विनाश गर्न पुगिन्छ।)

**(ख) प्रत्येकको उपचारमा विचार**

यसमा दुई किसिमका उपचार छन्। १. हेतुको उपचार २. फलको उपचार

१. हेतुको उपचार– आलस्यको हेतुको बारेमा बोधिचर्यावतारमा वताइएको छ,

**अव्यापारसुखास्वादनिद्रापाश्रयतृष्णया ।**
**संसारदु:खानुद्वेगादालस्यमुपजायते ॥**

"काम नगरेर वस्नमा सुखको अनुभव गर्दै निद्रा (तन्द्रा) मा लठ्ठिने र नीच कुराहरूमा आश्रय लिने तृष्णाले गर्दा संसारको दु:खदेखि उद्वेग (छटपटाहट) पैदा नहुनाले आलस्यले जन्म लिन्छ।" अत: अल्छीहरूले कुनै पनि काम पूर्ण गर्न सक्दैनन्। नराम्रो कर्ममा आसक्त भई लौकिक तुच्छ कार्यहरूमा लाग्छन्। आलस्य भनेको कुशल कर्ममा लागे पनि इच्छा अनुसार त्यो काम पूरा गर्न नसक्नाले फेरि काममै लागिरहन नचाहने या आफू स्वयंलाई हीन (नसक्ने) ठानेर "म जस्ताले खै के कुशल कर्म गर्न सकुँला र ?" भन्ने सोच्न थाल्नु हो। निन्द्रा या तन्द्रालु हुने भनेको लठ्ठिएर वस्ने या लेट्ने गरेर कुशल कर्ममा नलाग्नु हो। त्यस्तै सुखको अनुभव गर्ने पनि खाने पिउने जस्ता सामान्य व्यर्थका कुरामा आसक्त भई दिन रात निद्रामा नै पूरा समय विताउनमा हुन्छ र कुशल कर्म नगरिने हुन्छ। संसारप्रति तीव्र वैराग्य उत्पन्न नभएर पनि जन्म, बुढ्याईं, रोग र मरणका दु:खलाई अलिकति पनि नबुझ्नाले कुशल कर्ममा

नलाग्ने अल्छीपना हुन्छ। तिनीहरूको उपचारको लागि बोधिचर्यावतारमा भनिएका यी उपदेशको मनन गर्नुपर्छ।

**क्लेशवागुरिकाघ्रातः प्रविष्टो जन्मवागुराम् ।**
**किमद्यापि न जानासि मृत्योर्वदनमागतः ॥**

"क्लेशरूपी माझीले पकडेको छ र जन्मरूपी जालीभित्र पसिसकेका छौ, अव पनि मृत्युको मुखमा आइसकेको थाहा पाउँदैनौ ?"

**स्वयूथ्यान्मार्यमाणांस्त्वं क्रमैणैवं न पश्यसि ।**
**तथापि निद्रां यास्येव चण्डालमहिषो यथा ॥**

"आफ्नै वर्गमा अरूलाई क्रमशः मारिन लागेको देख्दैनौ र चण्डालको भैंसी झैं अझै सुतेर वस्छौ ?"

**यमेनोद्वीक्ष्यमाणस्य बद्धमार्गस्य सर्वतः ।**
**कथं ते रोचते भोक्तुं कथं निद्रा कथं रतिः ॥**

"यमराजले चारैतिरवाट सवै वाटो बन्द गरेर (मृत्यु तिर मात्र डोऱ्याउँदै) हेरिरहेका छन् र पनि तिमीलाई कसरी निद्रा आउँछ, कसरी आनन्द छ ? कसरी खान रुच्छ, हँ ?"

**यावत्संभृतसम्भारं मरणं शीघ्रमेष्यति ।**
**सन्त्यज्यापि तदालस्यमकाले किं करिष्यसि ॥**

"आफ्ना सारा सामग्रीहरू (रोगव्याधि आदि निमित्तहरू) ले सुसज्जित भएर जब चाँडै नै मृत्यु आइहाल्छ तब त्यो कुवेलामा आलस्यलाई छोडेर पनि के गर्न सक्छौ र ?"

**इदं न प्राप्तमारब्धं इदमर्धकृतं स्थितम् ।**
**अकस्मान्मृत्युरायातो हा, हतोऽस्मीति चिन्तयन् ॥**

"यो पाइएको छैन, यो भर्खर शुरु गरेको छ, यो काम आधा भएको छ, अकस्मात् मृत्यु आइहाल्यो। अनि त "हाय ! म त ठगिएँ, वितें" भन्ने चिन्ता गर्दै रहन्छौ ।"

यस्ता कुराहरूबाट संसारको दोषलाई पटक पटक सम्झिने गरेमा अल्छीपन हट्छ ।

२. फलको उपचार- यी दुई प्रकारका छन्। (क) शुद्धचर्या गर्नु (ख) साधानाले सम्पन्न हुनु

(क) शुद्धचर्या गर्नु- गण्डव्यूहसूत्रमा आर्य मञ्जुश्रीले बोधिसत्व ज्ञानश्रीलाई बताएबमोजिमको शुद्धचर्या त्यही सूत्रअनुसार जान्नु पर्दछ। त्यसको शब्दार्थलाई सही रूपमा बुझ्न नसकिएमा महाचार्य ज्ञानगर्भले रचेको "शुद्धचर्यार्थसञ्चय" को अनुसरण गरी अभ्यास गर्नुपर्छ। त्यहाँ बताइएको छ कि– बोधिसत्वले घरभित्र बस्दाखेरि मोक्ष पाउने ठाउँ प्राप्त होस् भन्ने सम्झनू। त्यस्तै सुत्दाखेरि बुद्धको धर्मकाय लाभ होस् भन्ने सम्झनू। सपना देख्दा सबै धर्महरू सपना जस्तै हुन् भन्ने जान्नू। ब्यूँझिँदाखेरि अज्ञानबाट ब्यूँझिएको ठान्नू। उठ्दाखेरि बुद्धको रूपकाय लाभ भएको सम्झिनू। लुगा लगाउँदाखेरि 'ह्री' र 'अपत्रपा' याने (लाज र सर्म) को वस्त्र लगाएको सम्झिनू। त्यस्तै पटुका बाँध्दा कुशल कर्मसँग सम्बन्ध राखेको, आसनमा बस्दा वज्रासनलाभ भएको, आड लिई बस्दा बोधिवृक्षलाभ होस् भन्ने, आगो बाल्दा क्लेशका दाउरालाई जलाएको, आगो बल्दा ज्ञानको आगो बलेको, (भोजन आदि) पाक्दा ज्ञानामृत लाभ भएको, खाँदा ध्यानाहार प्राप्त भएको, बाहिर हिंड्दा संसारबाट मुक्त भएको, भऱ्याङ्बाट ओर्लंदा सत्वको हित गर्न संसारमा प्रवेश गरेको, ढोका खोल्दा मुक्तिको द्वार खोलेको, ढोका बन्द गर्दा दुर्गतिको द्वार बन्द गरेको, बाटामा हिंड्दा आर्यमार्गमा हिंडेको, उकालो चढ्दा सबै सत्वहरूलाई सुगतिसुखको बाटोमा लगाएको, ओरालो झर्दा तीन दुर्गति भेदन गरेको, सत्वलाई भेट्दा सम्बुद्धको दर्शन भएको, पाइला टेक्दा सबै सत्वको हितमा विश्वास गरेको, पाइला उचाल्दा सबै सत्वहरू संसारबाट मुक्त भएका, गहना पहिरेको देख्दा ३२ लक्षण र ८० अनुव्यञ्जन लाभ होस् भन्ने, गहना नभएको देख्दा धूताङ्गको गुण लाभ

होस् भन्ने, भाँडा भरिएको देख्दा गुणले भरिएको, खाली देख्दा दोषले रित्तिएको, धेरै प्राणीलाई खुसी भएको देख्दा धर्ममा आनन्द लिएको, वेखुसी देख्दा सांसारिक वस्तुमा बेखुसी भएको, सत्वको सुख देख्दा बुद्धको सुख लाभ होस् भन्ने, सत्वको दुःख देख्दा सबै सत्वहरूको दुःख शान्त होस् भन्ने, रोगीलाई देख्दा सवै सत्वहरू रोगवाट मुक्त होऊन् भन्ने, प्रियजनलाई देख्दा बुद्ध वोधिसत्वले सवैलाई मन पराएको सम्भिने। कुरूपलाई देख्दा सवै प्राणीहरूको कुमित्रमा श्रद्धा नहोस् भन्ने सम्भने, कृतज्ञता फर्काएको देख्दा बुद्ध बोधिसत्वप्रति कृतज्ञता फर्काएको सम्भिने। अकृतज्ञ भएको देख्दा मिथ्यादृष्टिप्रति अकृतज्ञ भएको सम्भिने, भिक्षुलाई देख्दा आर्यधर्ममा प्रवेश होस् भन्ने, तपस्वीलाई देख्दा सद्धर्ममा तपस्या गरेको, कवच लगाएको देख्दा सद्धर्म खोज्नको लागि कवच लगाएको, कवच नलगाएको देख्दा अकुशल कर्मको कवच नलगाएको, परवादीलाई देख्दा सबै परवादीलाई दण्डित गरेको, सत्वलाई प्रशंसा गरेको देख्दा बुद्धबोधिसत्व सबैलाई स्तुति गरेको, नगरलाई देख्दा मुक्तिको नगर देखेको, जंगल देख्दा देवसहितको चौतारो देखेको, धर्मदेशना गर्दा बुद्धधर्म विनाश नहुने प्रतिभान (क्षमता) भएको, नदी पार गर्दा भवसागरबाट पार भएको, स्नान गर्दा शरीर र मनको मयललाई पखालेको, गर्मी हुँदा क्लेशको पीडा हटेको, जाडो हुँदा निर्वाणको शीतलता लाभ गरेको, धर्मका चर्चा गर्दा बुद्धका सबै धर्म लाभ भएको, बुद्धको मूर्ति देख्दा सबै बुद्धहरूलाई देख्न आवरणले रहित चक्षु लाभ भएको, स्तूपलाई देख्दा सबै सत्वका पूजाको आधार भएको, हेर्दा सबै सत्वले हेर्न लायक भएको, बन्दना गर्दा देवसहित सबै सत्वलाई ऊर्जा प्राप्त भएको, चङ्क्रमण गर्दा सर्वज्ञसँग मिल्दो अर्थ प्राप्त भएको, बुद्धको गुणगान गर्दा अक्षय गुणपारमिता भएको भन्ने

चित्तोत्पाद गर्नुपर्छ।" त्यस्तै सुहाउँदो व्यापार गर्दा सात आर्यधर्महरू (धन) लाभ भएको, खेतीमा मलजल गरेको देख्दा अन्नरूपी वोधिचित्त उमारेको, वीउ रोपेको देख्दा सवै सत्वहरूमा वोधिचित्तको वीजारोपण भएको, गोरुमा जुवा लगाउँदा उपाय र प्रज्ञा युगनद्ध भएको, जोत्दा क्लेशको डल्ला पल्टाएको, वाली काट्दा ज्ञानको अन्न थुपारेको, सँग्राम (लडाईं) गर्दा आवरणहरूलाई वासना सहित निकालेको, अन्न धुँदा वुद्धको फल लाभ भएको, भऱ्याङ चढ्दा दशभूमिहरूलाई क्रमैसँग चढ्दै गएको, घरमा पुग्दा वुद्ध भूमिमा पुगेको भनेर सम्झनु पर्छ। यसप्रकार जे काम गरे पनि सधैं त्योसँग मिल्ने कुरा सम्झिनु पर्छ। यी अभ्यासहरू मन्दमति भएकाले पनि सजिलरी ग्रहण गर्न सक्ने भएकोले वताइएको हो। विस्तारमा वुझ्नलाई सूत्रमा नै हेर्नुपर्छ। योचाहिं वोधिसत्वको मानस-कर्म-प्रयोग हो। हिँड्दा, उठ्दा, सुत्दा र वस्दा (ईर्यापथ)मा त संप्रजन्यवान् हुनुपर्छ (होशसहित हुनुपर्छ) भनेर उपदेश दिइएको छ।

(ख) साधनाले सम्पन्न हुनु

वोधिचर्यावतारमा वताइएको छ कि प्रत्यक्ष होस् या परोक्ष होस् प्राणीको हितको लागि वाहेक अरू काम गर्नु हुँदैन। प्राणीको हितको लागि सवै कुरालाई वोधिमा परिणामना गरिदिनु पर्छ। यसअनुसार सामान्यतया 'स्वहित' र 'परहित' गरी दुई थरीका हित कर्म हुन्छन्। श्रावकहरूले 'स्वहित' पहिले गरेर पछि परहित गर्छन्[६५]। वोधिसत्वहरूले 'परहित' पहिले गरी 'स्वहित' पछि गर्छन्। यहां वोधिसत्वको

---

[६५] **श्रावकहरूको परहित भनेको फलको रूपमा हो भने वोधिसत्व यानको परहित भनेको मार्गको रूपमा हो।** त्यसैले त्यो महत्वपूर्ण भएको हो।

चर्चा भएको हुनाले अकुशल र अव्याकृत कर्महरू दुवैलाई उपचारद्वारा त्याग्नुपर्छ अथवा उपाय कुशलताद्वारा ती दुवैलाई कुशलमा परिणत गर्नुपर्छ। आर्यदेवले भन्नुभएको छ- "चित्तद्वारा बोधिसत्वलाई कुशल वा अकुशल सबै नै कुशल भएर जान्छ। त्यसको कारण चित्त नै मूल हुनाले हो॥" त्यस्तै आर्य असङ्गले भन्नुभएको छ कि महाउपाय हुने भएमा क्लेश पनि बोध्यङ्ग हुन जान्छ। भवसागर पनि शान्त हुन जान्छ॥ त्यसैकारणले जिनपुत्रहरू अचिन्तनीय हुन्छन् भनिएको हो॥ त्यसमा पनि वस्तु (आमिष) दानमा उदाहरण दिने हो भने सम्पत्तिलाई जोगाएर (दान नदिएर) खेर जान नदिएको अवस्थामा पनि परोक्ष रूपमा परहित नै गरेका हुन्छन् भने दान दिए भने प्रत्यक्ष रूपमै परहित गरेका हुन्छन्। यसरी मूलतः परहित नै गरेको हुँदा यो जीवनमा आफू सुखी र कीर्तिवान् हुन्छन्, सुसम्पन्न चेलाहरू जम्मा हुन्छन् भने परलोकमा सुसम्पत्ति प्राप्त भई अन्तमा सम्पूर्ण दानपारमिता पूरा भएर आफ्नो हित स्वतः नै पूरा हुन्छ॥

त्यस्तै धर्मदानको दृष्टान्त दिने हो भने अरूको हितको लागि धर्म सुन्दा परोक्षबाट अरूको हित हुन्छ भने, आफूले बुझिसके पछि अरूको अज्ञानरूपी अन्धकारलाई हटाउन धर्म सुनाउँदा प्रत्यक्ष रूपबाट अरूको हित हुन्छ। यसरी परहितद्वारा धर्मले उपकार गर्दा स्वतः लाभ हुने आफ्नो हितमा, यो जीवनमा विद्वान् हुनाले गर्दा विद्वान्को पंक्तिमा गनिनु, आफ्नो चित्त आनन्दित हुनु, सबै परवादीहरूलाई दमन गर्न सक्नु, देवसहित सबै लोकको विश्वासपात्र बन्नु, परलोकमा सबै ज्ञानहरू बुझेर प्रज्ञाको लाभ हुनु र उपायकुशलताले सम्पूर्ण प्रज्ञापारमिता पूरा हुनु आदि सबै पर्छन्।

(ग) वीर्यलाई अविपरीत रूपमा सिद्ध गर्नु-

यसभित्र पनि दुई कुरा पर्दछन्। १.चार गुण लाभ गर्नु र २. सात आसक्तिलाई त्याग गर्नु।

पहिलोमा "वीर्यं विपक्षहीनं...." आदि भनिएको हुँदा वीर्यको विपक्ष नहुने भनेको आलस्य नहुनु हो, निर्विकल्प[४६] भनेको अनात्मा बोध हुनु हो, सबैको इच्छापूर्ण गर्नु भनेको वीर्यमा आश्रित भई परहित गर्ने हो, सत्वहरू परिपाक गर्ने भनेको त्यो वीर्यले प्राणीहरूलाई तीनै यानमा लगाउनु हो।

दोस्रोमा सात आसक्ति भन्नाले, बोधिसत्वका वीर्यमा अराग आदि सात आसक्तिहरू हुन्। त्यसमा आलस्य, विलम्ब, सन्तोष, आशा, फलको आशा, प्रतिकूलता, विपक्ष र आसक्तिको अनुशयसहित त्याग गर्नुपर्छ।

३. वीर्यपालनको फल

यी दुई प्रकारका छन्। १. अहिलेको फल २.अन्तिमको फल। अहिलेको फलमा पनि, यो जीवनको फलभित्र लोकको काम र धर्मको काम सबै सिद्ध हुनु, त्यसैको बलले शिष्य, धर्मानुकूल वस्तु, सम्पत्ति, सम्पन्नताका गुण लाभ हुनु, त्यसले गर्दा यो जीवन आनन्दमय हुनु, मृत्युको बेलामा पनि पश्चात्ताप नहुनु, मानुष या अमानुषबाट बाधा गरिन नसक्नु, देवसहित सबै लोकको प्रार्थनीय हुन जानु आदि धेरै गुणहरूको प्राप्ति पर्दछन्।

परलोकमा हुने फाइदाहरू सञ्चयगाथामा यसरी वताइएको छ "वीर्यले गर्दा शुक्ल गुणहरूलाई छेक्दैन, अनन्तज्ञानले जिनको ढुकुटी प्राप्त गर्दछ"। त्यस अनुसार प्रत्येक क्षणमा सबै अकुशल कर्महरूलाई दमन गरी कुशल

---

[४६] यसैबाट स्पष्ट हुन्छ कि हिन्दूहरूको निर्विकल्प र बौद्ध निर्विकल्प एउटै होइन।

कर्ममा प्रगति गर्छ र आदिका कार्यहरू जस्तो पनि नभन्नै सिद्ध हुन्छ। त्यसले गर्दा सम्बुद्धका सबै गुण लाभ हुन्छन्।

अन्तको फलमा पछि बुद्ध हुँदाखेरि बल, अभय (वैशारद्य) आदि सबै गुणहरू प्रयत्नै नगरी स्वतः लाभ हुन्छन्। सबै सत्वको हितको कार्य कुनै रोकटोकविना नै सिद्ध हुन्छ भनी सूत्रालंकारमा बताइएको छ।

**बलादिबुद्धधर्मेषु बोधिरत्नाकरोपमा।**
**जगत्कुशलसस्येषु महामेघोपमा मता॥**
**सर्वसत्वार्थकृत्येषु कालं त्वं नातिवर्तसे**
**अवन्ध्यकृत्य सततमसम्मोष नमोऽस्तु ते॥**

"बल आदि बुद्धका गुणहरूमा बोधिरत्ननिधि समान र लोकको पुण्यरूपी बालीमा ठूलो मेघ समा भएका तथा सम्पूर्ण प्राणीको वाञ्छित कार्यहरूमा समयलाई अतिक्रमण नगरी सधैं कार्य गर्न नभुल्नुहुने तपाईंलाई वन्दना।

**५. ध्यान पारमिता:-** यसभित्र तीन कुरा बताइन्छन्। १. ध्यानको लक्षण २. त्यसको स्वभावलाई निश्चय गर्नु ३. ध्यान अभ्यासका फाइदाहरू।

१. ध्यानको लक्षण संबुद्ध हुनको लागि समाधि हुनु (चित्त एकाग्र हुनु) ध्यानको लक्षण हो। यसमा प्रयोग, मौल र पृष्ठ समाहित भएमा ध्यान पारमिता हुन्छ।

२. ध्यानको स्वभावलाई निश्चय गर्नु

यसमा तीन कुरा पर्दछन् (क) ध्यानको विपक्षलाई चिन्नु (ख) प्रत्येकको उपचारमा विचार गर्नु (ग) तिनीहरूलाई अविपरीत रूपमा सिद्ध गर्नु।

(क) ध्यानको विपक्षलाई चिन्नु

**ध्यानको विपक्ष भनेको 'चित्तको चञ्चलता' हो।** त्यसलाई चिन्नु भनेको आलम्बनमा चित्तलाई एकाग्र गर्न नसक्नु, सके तापनि तीर्थिकहरूको जस्तो विपरीत हुनु,

विपरीत नभए पनि निर्वाण तथा उच्च धातुहरू प्राप्त हुने कारण हुनु हो भन्ने कुरा बुझ्नु हो ।

यसका दोषहरू दुईओटा छन् । १. यो जीवनको दोष २. सदाका लागि सुखको विनाश ।

१. यो जीवनको दोषमा बोधिचर्यावतारमा यस्तो भनिएको छ "**विक्षिप्तचित्तस्तु नरः क्लेशदंष्टान्तरे स्थितः**" याने "**चित्त विक्षिप्त (चञ्चल) भइराख्ने मानिस सधैं क्लेशरूपी दाह्राको बीचमा रहेको हुन्छ** (अर्थात् जुनसुकै वेला पनि चपाइन सक्छ) । चित्त चञ्चल हुने मानिस नालीभित्र पानी नपसेको जस्तो या नदाइएको घोडामा चढेजस्तो हो र आफूलाई पनि कष्ट हुन्छ, आनन्द हुँदैन र अरूलाई पनि कष्ट दिएर आनन्दरहित तुल्याउँछ । त्यसको बलले गर्दा चित्त अनेकौं उल्टापाल्टा (विषयमा) पर्न खोज्छ र अनेक हानिहरू भोग्दै मृत्युक्षणमा पछुतो सहित मर्नुपर्ने हुन्छ ।

२. सदाका लागि सुखको विनाशका सन्दर्भमा वोधिचर्यावतारमा भनिएको छ –

"**तत्राप्यभ्यस्तविक्षेपनिवारणगतिः कुतः**" "अभ्यास भइराखेका विक्षेपहरूको निवारण त्यहाँ पनि कसरी हुनसक्छ र ?" अतः पहरावाट खसेको झर्ना, अथवा भुईंमा फ्याँकिएको केराउको गेडाजस्तै चञ्चल चित्तलाई सम्हाल्नै गाह्रो हुन्छ । त्यसले गर्दा अनेकौं अकुशल कर्महरू गरेर संसार र दुर्गतिको कारण वन्न जान्छ । **यदि समाधिमा स्थित भयो भने पनि अशुद्ध ध्यानले गर्दा तीर्थिकको मार्गजस्तो** विपरीत हुन जान्छ । समाधिराजसूत्रमा भनिएको छ, "**लोकले शून्यता भावना गरे पनि त्यसले वस्तुग्राहलाई त्याग्न सकेको हुँदैन** । उसमा पछि पनि **क्लेश** स्थिर **रहेको** हुन्छ । त्यो उदकले ध्यान भावना गरे जस्तै हो ।" उद**क १२ वर्षसम्म समाधिमा** बसेका थिए र **पनि परिणाम चाहिं अर्को जन्ममा मूसा भएर जन्मिनु** परेको **थियो** । अझै मैत्री र करुणा आदिको भावनासमेत

गरेमा त्यो विपरीत होइन तापनि (त्यतिन्नै मात्र) संसारको जरो काटिन सक्दैन भनेर प्रमाणवार्तिकमा वताइएको छ "**मोहाविरोधान्मैत्र्यादेर्नात्यन्तं दोषनिग्रहः**"।

"मैत्री करुणा आदि कुरा अज्ञानसँग विरोधी धर्म नभएकाले गर्दा पूरै दोष (अज्ञान) लाई काट्न सक्दैनन् ।" अतः ती (मैत्री-करुणा आदि सहित भएका) ध्यानहरूले पनि उच्च धातुहरूसम्म पुग्न त सकिन्छ परन्तु संसारवाट मुक्त हुन भने सकिँदैन । फेरि शून्यताको सही तरिकाले ध्यान गर्न सकियो भने पनि उपाय कुशलता भएन भने श्रावकहरूको निरोध अवस्थामा पतन हुन जान्छ सम्वोधि प्राप्त हुन सक्दैन[४७]॥ वैरोचनाभिसम्वोधिमा भनिएको छ, "वीरले उपायरहित ज्ञान र शिक्षाहरूको देशना गरेको श्रावकहरूलाई प्रवेश गराउन भनेर हो"[४८] ।

(ख) प्रत्येकको उपचारको स्वभावमा विचार गर्नु

यसभित्र हेतुको उपचार र फलको उपचार गरी दुई किसिमका उपचारको बारेमा बताइन्छ ।

१. हेतुको उपचार– **चञ्चलताको कारण नै [illegible] र सम्पत्तिमा आसक्ति** हुनु हो । अतः त्यसको उपचारको लागि (सम्पत्ति आदिको) आसक्तिलाई त्यागेर एकान्तको गुण

---

४७ श्रावक शून्यता-विमोक्षमुख र वोधिसत्वयानको शून्यता विमोक्षमुखको भेद यही हो ।

४८ वोधिसत्वगोत्र नै नभएकाहरूलाई पनि कल्याण गर्न उपाय पक्ष धेरै नभएको ज्ञान (श्रावकयान) वताउनु भएको हो । महायानमा "उपाय" को तात्पर्य सिधै निरोधमा नखसेर वुद्धत्वप्राप्ति गराउने उपायहरूलाई हो । योद्धाले जसरी आफू पराजित हुने थाहा भए पनि अघि सरेरै डटछ भने त्यसलाई 'वीर' भन्छन् त्यस्तै वोधिसत्वहरूले पनि संसारका प्राणी नरित्तिने थाहा हुँदाहुँदै पनि सबलाई तार्छु भन्ने आँट गरेरै अभ्यास गरेर वुद्ध बनेका हुन्छन् । त्यसैले उनीहरू पनि 'वीर' कहलाइन्छन् ।

**सम्झिनु पर्छ।** त्यसमा सत्वप्रतिको आसक्तिलाई त्याग्नु पर्ने कुरा **बोधि चर्यावतारमा यसरी बताइएको छ–**

**न पश्यति यथाभूतं संवेगादवहीयते ।**
**दह्यते तेन शोकेन प्रियसंगमकाङ्क्षया ॥**

"प्रियजनलाई भेट्ने इच्छाले गर्दा व्यक्तिले यथाभूत (जस्ताको तस्तै) देख्न सक्दैन। संवेग अर्थात् तीव्र दुःख देखेर उत्पन्न हुने वैराग्यबाट पनि ऊ च्युत हुन्छ र त्यही प्रियजनलाई भेट्न नपाएको शोकले जलिरहन्छ"।

**तच्चिन्तया मुधा याति ह्रस्वमायुर्मुहुर्मुहुः ।**
**अशाश्वतेन धर्मेण धर्मो भ्रश्यति शाश्वतः ॥**

"प्रियजनको त्यो चिन्ताले गर्दा आयु बारम्बार छोटो हुँदै जान्छ। क्षणभङ्गुर (चाँडै नाश हुने) धर्मले गर्दा शाश्वत (चिरस्थायी) धर्म पनि नष्ट हुन पुग्छ।"

**क्षणाद् भवन्ति सुहृदो भवन्ति रिपवः क्षणात् ।**
**तोषस्थाने प्रकुप्यन्ति दुराराध्याः पृथग्जनाः ॥**

"पृथग्जनहरू[९] एकै छिनमा मित्र बन्छन् भने एकै छिनमा शत्रु बन्न पुग्छन्। खुसी हुनुपर्ने ठाउँमा रिसाउँछन्। यी पृथग्जनलाई आराधना (सन्तुष्ट) गर्न अत्यन्त कठिन हुन्छ।

**ईर्ष्योत्कृष्टात् समाद् द्वन्द्वो हीनान्मानः स्तुतेमर्दः ।**
**अवर्णात् प्रतिघश्चेति कदा बालाद्धितं भवेत् ॥**

"आफूभन्दा उत्कृष्टसँग ईर्ष्या गर्छन्, समान दर्जाकासँग द्वन्द्व (प्रतिद्वन्द्व) गर्छन्, तल्लो दर्जाकासँग अभिमान गर्छन्, स्तुति गर्दा मात्तिन्छन्, दोष देखाइदिने हो भने द्वेष

---

[९] महायानको दर्शनमार्ग या श्रावकयानको स्रोत आपन्न भैसकेकाहरूलाई 'आर्य' भन्छन् भने त्यसमा प्रवेश नभएका जनिलाई पृथग्जन भन्दछन्।

(रीस) गर्न पुग्छन् । यस्ता बाल (अज्ञानी) जनहरूबाट कहिले हित होला ? अर्थात् कदापि हुँदैन ।"

**एवं तस्यापि तत्सङ्गात् तेनानर्थसमागमः ।**
**एकाकी विहरिष्यामि सुखमक्लिष्टमानसः ॥**

"यसप्रकार त्यो पृथग्जनको संगतले उसलाई पनि अनर्थ नै आइलाग्छ । अतः मनलाई क्लेशरहित बनाएर आरामसँग एक्लै विहार गर्छु ।"

**बालाद् दूरं पलायेत प्राप्तमाराधयेत् प्रियैः ।**
**न संस्तवानुबन्धेन किं तूदासीनसाधुवत् ॥**

"यी बालपृथग्जनहरूदेखि टाढै रहनु पर्छ, आइपुगेकाहरूलाई प्रिय ढंगले स्वागत गर्नुपर्छ । तर उसलाई स्तुति आदि गर्नको लागि नभएर उदासीन साधुले झैं गरी गर्नुपर्छ ।"

**धर्मार्थमात्रमादाय भृङ्गवत्कुसुमान्मधु ।**
**अपूर्व इव सर्वत्र विहरिष्याम्यसंस्तुतः ॥**

"फूलहरूबाट महलाई लिएर जसरी भमरो घुम्छ त्यसैगरी धर्मको अर्थ (तात्पर्य) लाई मात्र ग्रहण गरेर सबै ठाउँमा अपरिचित जस्तो भएर कुनै स्तुति प्रशंसा नलिइकन एक्लै घुम्छु ।"

**लाभी च सत्कृतश्चाहमिच्छन्ति बहवश्च माम् ।**
**इति मर्त्यस्य सम्प्राप्तान्मरणाज्जायते भयम् ॥**

"'म लाभी छु' 'मलाई सत्कार गर्छन्', 'मलाई धेरैले रुचाउँछन्' भन्ने जस्ता सोचाइ राखेका व्यक्तिलाई मृत्युदेखि डर लाग्छ ।"

**यत्र यत्र रतिं याति मनः सुखविमोहितम्**
**तत्तत्सहस्रगुणितं दुःखं भूत्वोपतिष्ठति ॥**

"सुखको मोहले विमूढ भएको मन जहाँ जहाँ पुग्यो त्यो त्यो नै हजार गुना बढी दुःख भएर उपस्थित हुन जान्छ ।"

**तस्मात्प्राज्ञो न तामिच्छेदिच्छातो जायते भयम् ।**
**स्वयमेव च यात्येतद्धैर्यं कृत्वा प्रतीक्षताम् ॥**

"त्यसकारण बुद्धिमान्ले त्यस्तो सुखको चाहना गर्नु हुँदैन, इच्छाले भय उत्पन्न हुन्छ। उत्पन्न भइहाल्यो भने यो आफैं जान्छ भनेर धैर्य गरी प्रतीक्षा गर्नुपर्छ।"

**नानाधिमुक्तिकाः सत्वा जिनैरपि न तोषिताः ।**
**किं पुनर्मादृशैरज्ञैस्तस्मात् किं लोकचिन्तया ॥**

"विभिन्न कुरामा रुचि र विश्वास भएका प्राणी (सत्व) हरूलाई बुद्धहरूले पनि सन्तोष पार्न सकेनन् भने म जस्ता अज्ञानीले झन् के खुशी पार्न सकुँला ? अतः लोकको चिन्ता गरेर के गर्नु ?"

**निन्दन्त्यलाभिनं सत्वमवध्यायन्ति लाभिनम् ।**
**प्रकृत्या दुःखसंवासैः कथं तैर्जायते रतिः ॥**

"जसले लाभ गर्न सकेका हुँदैनन् त्यस्तालाई उनीहरूले निन्दा गर्छन्। फेरि जसले लाभ गरेका हुन्छन् त्यस्तालाई होच्याउने (छेंडखान गर्ने) गर्छन्। स्वभावले नै उनीहरूको संगत दुःखदायी हुन्छ भने त्यस्तासँग कसरी प्रेम भैरहन सक्छ ?"

**न बालः कस्यचिन्मित्रमिति चोक्तं तथागतैः ॥**
**न स्वार्थेन विना प्रीतिर्यस्माद्बालस्य जायते ॥**

"तथागतहरूले बताउनुभएको छ कि बालजनहरू कसैका पनि मित्र हुन सक्दैनन्। किनकि कुनै पनि स्वार्थ नभैकन बालजनहरूको प्रीति (प्रेम) नै पैदा हुँदैन।"

यस्ता अर्थहरू बुझेर सत्वहरूप्रतिको आसक्तिलाई त्याग्नु पर्छ। अझै यी प्राणीहरू द्वेषी स्वभावका हुनाले बुद्धले समेत सन्तुष्ट पार्न सकेनन् भने म जस्तोले त के कुरा ? जस्तैः- देवदत्त अपच रोगले मरणासन्न अवस्थामा पुग्दा भगवान् बुद्धले सत्यवचनको अधिष्ठानद्वारा निको पारिदिनु भयो। त्यसमा देवदत्तले यो 'श्रमण गौतम कुशल वैद्य रहेछ,

वृद्धावस्थामा उसलाई जीविका धान्न दुःख गर्नपर्दैन' भनी अपमानको शव्द बोलेको थियो ।

त्यस्तै सुनक्षत्रले भगवान् बुद्धलाई 'लोकमा कोरक्षत्रीभन्दा अर्को कोही पनि सर्वज्ञ छैन' भन्दा बुद्धले भन्नुभयो 'तिम्रो सर्वज्ञ सात दिनमा अपच रोगले मर्नेछ ।' सुनक्षत्रले गएर कोरक्षत्रीलाई भन्यो "तपाईंलाई श्रमण गौतमले सात दिनमा अपच रोगले मर्छ भनेका छन् । अतः यो अवधिभरि तपाईंले ठीक मात्रामा मात्र भोजन ग्रहण गर्नुहोस् !" अनि ६ दिनसम्म उसले खाना नखाएर सातौं दिनमा आठौं दिन हो भन्ने भ्रम परेर उखुको फिंज आउने रस खाएर अपच भई मरेर वान्ता खाने प्रेत[४०] भएर जन्मलिन पुग्यो । त्यो प्रेतले सुनक्षत्रलाई भन्यो "भगवान् बुद्ध सर्वज्ञ सर्वविद् नै रहेछन्, मैले उनमा श्रद्धा, विश्वास नगरेकोमा पछुताएको छु । अवदेखि तिमीले उनीमा विश्वास गर्नू" । "श्रमण गौतममा त्यस्तो गुण कहाँ छ र ? तिमी त्यस्तो नभन" भनेर सुनक्षत्रले रोकी आफू गौतमकहाँ गएर भन्यो "तपाईंले कोरक्षेत्री सात दिनमा मर्छ भनेको त मरेन नि ?" बुद्धले भन्नुभयो, "मरेर पनि तिमीसँग भेट भएको थाहा पाएनौ ?" उसले भन्यो "थाहा त पाएँ तर देवलोकमा पो जन्मेछ" । बुद्धले भन्नुभयो "उल्टी खाने प्रेतको जन्म लिएर तिमीसँग कुरा गरेको विर्स्यौ ?" यो सुनेपछि त्यो लाजले गर्दा केही नभनेर गयो । यसरी सुनक्षत्रले बुद्धलाई सर्वज्ञ भन्ने थाहा पाइकन पनि विश्वास गर्न सकेन भने हामी जस्तामा अरूले विश्वास लिन्छ भन्ने छ त ? यस्ता कुरा बुझेर प्राणीहरू प्रतिको आसक्तिलाई त्यागिदिनुपर्छ ।

---

[४०] पाली स्रोतहरूमा कालकञ्जर असुर भई जन्मेको उल्लेख छ । सुनक्षत्र एक लिच्छवि हो ।

अव सम्पत्तिमा आसक्ति त्याग्न यसरी विचार गर्नू- सम्पत्ति कमाउँदा तीनै कालमा अकुशल कर्म हुन गएको हुन्छ। पहिले कमाउँदाखेरि पनि पाप, दुःख र नराम्रा कुरालाई ध्यान नदिएर शत्रु, मित्र र सामान्यजनसँग पनि झैझगडा गरेर कमाइन्छ। यसरी धर्मानुकूल नहुने गरी सम्पत्ति कमाउँदा शुरुमै अकुशल कर्म हुन जान्छ। बीचमा सम्हाल्ने बेलामा सम्पत्ति बढेपछि यो गुम्न जाला कि भन्ने पीडाले दुःख पीडामा परेर रातौं दिन काय, वाक्, चित्त नै तृष्णाको नोकर जस्तो हुन्छ र त्यसमै हतारिइरहेको हुन्छ। आफू हतारिने मात्र नभई कुटुम्बहरूले समेत सम्पत्ति बाहिर लैजाने र भित्र ल्याउने दुःख, पीडावाट कहिल्यै छुटकारा पाउँदैनन्। यो जीवनमा सबैसँग झगडिनु पर्छ भने परलोकमा दुर्गतिको कारणबाहेक अरू कुनै फाइदा नभएकोले वीचमा पनि अकुशल नै हुन्छ। अन्तमा पनि पूर्वजन्मको पुण्य सकिएर या अहिलेको कुसंगतले या कुटुम्बको अधिकारले या बलवान् शत्रुको बलले गर्दा शरद् ऋतुको वादलजस्तो अथवा वसन्त ऋतुको शीत जस्तो भएर तुरुन्तै विलाएर जाने हुनाले सकिएको दुःखले गर्दा अकुशल हुन जान्छ। आचार्य मैत्रेय भन्नुहुन्छ "आमिषले गर्दा कलह हुन्छ, निरामिष भए उत्तम सुख हुन्छ, आमिष सबै त्याग्नाले बकुलाले सुख पाएको हेर।" त्यस्तै बोधिचर्यावतारको आठौं परिच्छेदमा भनिएको छ,

**अर्जनरक्षणनाशविषादै**
**रर्थमनर्थमनन्तमवेहि**
**व्यग्रतया धनसक्तमतीनां**
**नावसरो भवदुःखविमुक्तेः ॥**

"कमाउँदा, जोगाउँदा र नाश हुँदाको दुःखले गर्दा धन भनेको अनेकौं अनर्थको स्वरूप नै हो भन्ने बुझ। धनमा

आसक्त मति भएकाहरूलाई भवसागरको दुःखबाट पार लाग्ने फुर्सद नै हुँदैन।"

**एवमादीनवो भूयानल्पस्वादस्तु कामिनाम्।**

**शकटं बहतो यद्वत्पशोर्घासलवग्रहः॥**

यसरी धेरै इच्छा भएका व्यक्तिहरूलाई दुःख बढी भैरहेको हुन्छ भने स्वादचाहिँ कमै हुन्छ। जस्तो कि गाडा तानिरहेको पशु (गोरु) ले मुखमा घाँसको मुठो चपाएको हुन्छ। यस्ता कुराहरूलाई सम्झेर सम्पत्तिप्रतिको आसक्तिलाई त्याग्नु पर्छ। अनि एकान्तका गुणहरूको पनि मनन गर्नुपर्छ। बोधिचर्यावतारमा भनिएको छ–

**"नावध्यायन्ति तरवो न चाराध्याः प्रयत्नतः।**

**कदा तैः सुखसंवासैः सहवासो भवेन्मम॥**

"न त वृक्षहरूले केही भन्छन् न त उनीहरूलाई प्रयत्नपूर्वक कुनै सत्कार गर्नुपर्छ। त्यस्ता सँगै बस्दा पनि आनन्द हुने वृक्षहरूसँग म कहिले सँगै रहन पाउँला?"

**शून्यदेवकुले स्थित्वा वृक्षमूले गुहासु च।**

**कदानपेक्षो यास्यामि पृष्ठतोऽनवलोकयन्॥**

"कहिले म शून्य देवालयमा, रुखमुनि या गुफाहरूमा रहँदै पछाडि फर्केर पनि नहेर्दै कुनै अपेक्षा नराखी हिँडुला?"

**अममेषु प्रदेशेषु विस्तीर्णेषु स्वभावतः।**

**स्वच्छन्दचर्यानिलयो विहरिष्याम्यहं कदा॥**

"स्वभावले नै फैलिएका (खुला) र आफ्नो भन्ने केही नभएका (आफूसँग कुनै सम्बन्ध नभएका) प्रदेशहरूमा स्वच्छन्द रूपमा घुम्नाले आश्रय (घर) हीन जस्तो भएर कहिले घुम्न पाउँला?"

**मृत्पात्रमात्रविभवश्चौरासम्भोगचीवरः।**

**निर्भयो विहरिष्यामि कदा कायमगोपयन्॥**

"सम्पत्तिका नाममा माटाको पात्र मात्र र चोरले पनि लग्न नमिल्ने खालको चीवर लिएर शरीरको पनि वास्ता नगरीकन म निर्भय भएर कहिले घुम्न पाउँला ?"

**कायभूमिं निजां गत्वा कङ्कालैरपरैः सह ।**
**स्वकायं तुलयिष्यामि कदा शतनधर्मिणम् ॥**

"शरीरको आफ्नो भूमिमा अर्थात् श्मशानभूमिमा गएर अरूका कङ्कालहरूका साथ आफ्नो सडेर जाने स्वभावको शरीरलाई कहिले तुलना गरूँला ?"

यस्तो कल्पना गर्दै एकान्तवासको गुणको चाहना उत्पन्न गर्नुपर्छ। त्यही भएर आचार्य शान्तिदेवले (बोधिचर्यावतारमा) चाँडै नै वनमा गइहाल्नु भनेर बताउनुभएको छ -

**चतुर्भिः पुरुषैर्यावत्स न निर्धार्यते ततः ।**
**अशोच्यमानो लोकेन तावदेव वनं व्रजेत् ॥**

"लोकले शोक गरेर चारजनाले उठाउनु भन्दा अघि नै वनमा गइहाल ।"

**असंस्तवाविरोधाभ्यामेक एव शरीरकः ।**
**पूर्वमेव मृतो लोके म्रियमाणो न शोचति ॥**

"कुनै पनि स्तुति प्रशंसा नभैकन एउटा एक्लो शरीरधारी (मान्छे) पहिले नै मरिसकेको भनेर मर्दाखेरि पनि लोकले त्यति शोक गर्नेछैन ।"

**न चान्तिकचराः केचिच्छोचन्तः कुर्वते व्यथाम् ।**
**बुद्धाद्यनुस्मृतिं चास्य विक्षिपन्ति न केचन ॥**

"नजिकमा रहेर सेवा गर्ने पनि कोही हुँदैन, शोक र पीडा मान्ने पनि कोही हुँदैन। बुद्धानुस्मृति[५१] आदि गर्नमा पनि उसलाई कसैले विक्षिप्त पार्न सक्दैन ।"

---

[५१] बुद्धानुस्मृति, धर्मानुस्मृति, संघानुस्मृति, शीलानुस्मृति त्यागानुस्मृनि, देवानुस्मृति, कल्याणमित्रानुस्मृति आदि पर्छन् ।

**तस्मादेकाकिता रम्या निरायासा शिवोदया ।**
**सर्वविक्षेपशमनी सेवितव्या मया सदा ॥**

"त्यसकारण, एकान्तवासको मैले सधैं सेवन गर्नुपर्छ किनकि यो रमणीय छ, कुनै कठिनको कुरा होइन, कल्याणकारक पनि छ र सबै विक्षेप (चञ्चलता) हरूलाई पनि शान्त गराउँछ" ।

यस्ता कुरा र अझै पनि वैराग्य आउने कुराहरूको मनन गर्ने गर्नुपर्छ। जस्तै जातकमा भनिएको छ, "अहो, क्लेशले युक्त भएका लोकहरू स्थिर र बलिया छैनन्, आनन्द पनि छैन, कौमुदी (नाटक)[५२] उत्सवको यो शोभा पनि सम्झना मात्र रहन्छ।" भनाइको तात्पर्य के भने कौमुदी नाटक आदिको प्रदर्शन र सुख जस्ता (अनुभूतिहरू) सबै अनित्य हुनाले तुरुन्तै नाश हुन्छन् । त्यसबेलामा 'अघि यस्तो भएको थियो' भन्ने सम्झिनाले असन्तोषको कारण बन्न जान्छ। यस्तो सम्झेर एकान्तमा गएर बस्नु पर्दछ।

२. फलको उपचार

यो स्वयं ध्यान नै हो। ध्यान तीन प्रकारका हुन्छन्। १. लौकिकसँग मिल्ने ध्यान २. श्रावकसँग मिल्ने ध्यान र ३. महायानको असाधारण ध्यान

१. लौकिकसँग मिल्ने ध्यान भनेको ध्यानका सात ओटा मनस्कार र प्रथम अर्पणाध्यानको जति सक्दो अभ्यास गर्नु हो। यसको बारेमा पछि दिइने भावनामार्गमा हेरेर बुझ्नु पर्दछ।

२. श्रावकसँग मिल्ने ध्यानमा अनित्य आदि संसारका दोषहरू सम्झेर मार्गमा दुई तरिकाले प्रवेश गरिन्छ। पूर्वागत अभ्यास र मूलअभ्यास। पूर्वागत अभ्यासमा अधिक

---

[५२] जातक कथाहरूमा त्यो समयमा भारतमा अनेकौं उत्सवहरू मनाइन्थे भन्ने कुरा पाइन्छ।

राग हुनेले अशुभ भावनादेखि शुरु गर्ने। अधिक विकल्पहरू आइरहने हो भने आनापान स्मृति (आश्वास प्रश्वास स्मृति) गर्नु भनेर अभिधर्मकोषमा वताइएको छ।[५३]

**"तत्रावतारोऽशुभया आनापानस्मृतेन च अधिरागवितर्काणां**........................"।

मूल अभ्यासमा पाँच[५४] मार्ग र सैंतीस बोधिपाक्षिक धर्म अनुसार भावना गर्नुपर्छ। त्यसमा चार स्मृत्युपस्थानहरू सम्भारमार्गमा, चार सम्यक् प्रहाणहरू उष्मामा, चार ऋद्धिपादहरू मूर्धामा, पाँच इन्द्रियहरू क्षान्तिमा, पाँच बलहरू लौकिकाग्रधर्ममा, आर्य अष्टाङ्गिक मार्ग दर्शनमार्गमा र सात वोध्यङ्गहरूको अभ्यास भावनामार्गमा गरिन्छ। श्रावकयान को महायानसँग आलम्बन र क्रम पनि नमिल्ने भएकोले श्रावकयानको यो विषयलाई यहीं छोडिन्छ।

३. महायानको भावनामा, चित्तमात्रीको चलन अनुसार आचार्य असंगका दाजुभाइले भनेको क्रमचाहिं "यानसञ्चय" नामक ग्रन्थमा हेरेर जान्नुपर्छ जुन यहाँ बताईंदैन। माध्यमिकको चलन अनुसार आर्य पितापुत्र (नागार्जुन र आर्यदेव) को क्रम वोधिचर्यावतारको ध्यानपारमिता भन्ने परिच्छेदमा दिइएवमोजिमको हो र त्यसको अभ्यास गर्ने तरिका यहाँ वताइन्छ।

यसमा पनि आचार्यले बोधिचित्तभावनादेखि शुरु गर्ने भनेको भए पनि त्यो भन्दा पहिले चार ब्रह्मविहारका[५५]

---

५३ यो धारणा विशुद्धिमार्ग आदिमा पनि पाइन्छ।

५४ मूल सर्वास्तिवाद अनुसार 'पाँच मार्ग' को वर्गीकरण गरिएको छ जुन महायानमा पनि मान्य छ भने थेरवादमा (विशुद्धिमार्गअनुसार) सात विशुद्धिमार्गको रूपमा वर्गीकरण गरिएको छ।

५५ श्रावकयान (थेरवादसमेत) मा चार ब्रह्मविहारको अभ्यास भए तापनि विपश्यनाको माथिल्लो अभ्यासको लागि अपरिहार्य मानिंदैन भने

भावना गरेमा बोधिचित्तको भावना गर्न सजिलो हुने भएकोले त्यसको बारेमा बताइदैछ। सूत्रालंकारमा भनिएको छ -

**अनुकम्पक सत्वेषु संयोगविगमाशय ।**

**अवियोगाशय सौख्यहिताशय नमोऽस्तु ते ॥**

अतः माथिका तीनओटा अर्थात् सुखसँग संयोग गराउने आशय, दुःखबाट वियोग गराउने आशय, र महासुखबाट सधैं अवियोग गराउने आशय यी तीनओटा सुखाशय हुन् भने उपेक्षाचाहिँ हिताशय हो। अर्थात् मायाँले प्राणीहरूप्रति सुखको संयोग होस् भन्ने ठान्नु नै मैत्री हो, उनीहरू दुःखबाट रहित होऊन् भन्ने ठान्नु कारुणा हो, ती दुईबाटै वञ्चित नहोऊन् भन्ने ठान्नु मुदिता हो र शत्रु या मित्रप्रति द्वेष या राग आदि आठ लौकिक धर्मका हिसावले समान ठान्नु उपेक्षा हो। यो चार ब्रह्मविहारको अभ्यास गर्दा मैत्री र करुणा दुईओटामै समेटेर अभ्यास गर्नुपर्छ। सूत्रालंकारमा भनिएको छ,

"**करुणासेको मैत्री तद्दुःखे ....**" ।

"करुणाको ग्रन्थि मैत्री हो, त्यो दुःखबाट उत्पन्न हुन्छ।"

यसमा पहिले मैत्री भावना गर्दा मैत्री भावना गर्ने आलम्बन, भावना गर्ने तरिका र त्यसरी भावना गरेका फाइदाहरू बताइन्छ।

मैत्री भावना गर्ने आलम्बन

यसमा सुख र दुःख दुवै नभई उपेक्षित रहेका प्राणीहरू, सुखको हेतु सद्धर्मसँग संयोग नभएका प्राणीहरू

---

बोधिसत्वयानमा शून्यता विमोक्षमुखविपश्यनाभन्दा अगाडि नै यो चार ब्रह्मविहारलाई अपरिहार्य मानिन्छ।

र संयोग भए पनि बुद्ध र बोधिसत्वका गुण प्राप्त नभएका सत्व (प्राणी) हरूलाई मैत्री भावना गर्नुपर्छ।

भावना गर्ने तरिका

सबै प्राणीहरू कुटुम्ब हुन् भन्ने ठानेमा मैत्री भावना गर्न सजिलो हुनेछ। केही सूत्रमा आमालाई सम्झेर भावना गर्नू भनिएको छ भने वज्रतीक्ष्ण आदि केही तन्त्रमा छोरालाई सम्झी भावना गर्नु भनिएको छ। परन्तु कुनै पनि प्राणी आफ्नो पिता, भाइ, मित्रआदि त भएकै हुन्छन्। त्यसैले आफ्नो नजिकको जो छ त्यसलाई लिएर भावना गर्नू। त्यसमा पनि प्राणीले सुख पाएर मात्र नपुग्ने भएकोले सुख र सुखको हेतु सहित पाऊन् भन्ने हृदयदेखि नै भावना गर्नू। यसमा सुख भनेको शरीर र मनमा धर्म अनुसार सुख प्राप्त भएको हो र सुखको हेतु भनेको 'प्राणीहरूको सद्धर्मसँग संयोग होस्' भन्ने हो किनभने धर्माचरण गर्नाले सधैं सुखलाभ हुन्छ। यसरी पटक पटक बानी पार्नाले सबै सत्वहरूप्रति आमाले एउटै छोरालाई गरेजस्तो माया उत्पन्न हुन्छ।[५६]

भावना गर्नुको फाइदा

सूत्रमा बताइएको छ कि करोडौं क्षेत्रभरिका पूजा विशेषले महापुरुषलाई दिनदिनै चढाएको पुण्यको तुलनामा मैत्री भावनाले कमाएको पुण्य यति धेरै हुन्छ कि त्यसको गणनै गर्न सकिँदैन। रत्नावलीमा भनिएको छ "धर्मनाथ, तीन सय किसिमका भोजनहरू प्रत्येक दिन दान गरेको र एक क्षण पनि मैत्री भावना गरेको पुण्यको तुलना गर्न

[५६] भावनाका विस्तृत विधिहरू गुरुमुखबाटै लिनुपर्ने भएकोले यहाँ छोटो परिचय जस्तो मात्र बताइएको हो।

सकिँदैन।" अतः उसले पछि गएर ब्रह्मलोकमा[५७] जन्म प्राप्त गर्छ। त्यहाँ जन्मेन भने पनि देव, मनुष्यको मैत्री आदि आठओटा गुण प्राप्त गर्छ र अन्तमा आएर वुद्ध हुनपुग्छ। जस्तैः राजा मैत्रीवलको जातक कथा या गङ्गा यमुनाको सँगममा परेर आमा छोरीको मृत्यु भएर ब्रह्मलोकमा जन्म भएको कथा छ।

करुणा भावना

करुणाको भावनामा चार प्रकारका कुरा छन्।

१. करुणाको भावना गर्ने आलम्वन– यी पनि महायानसूत्रालंकारमा भनिए अनुसार दश प्रकारका छन्।

(क) कामवासनाले कामसुखमा आसक्त हुनेहरू।

(ख) कुशलकर्ममा लागेकोमा मारले पीडित पारिएकाहरू।

(ग) दुर्गतिको दुःखले च्यापिएकाहरू।

(घ) चाण्डाल आदि सधैं दूषित कर्म गर्नेहरू।

यी चार थरीका व्यक्तिहरू कर्मविपाकको विषयमा भ्रान्ति हुनेहरू हुन्। त्यस्तै -

(ङ) संसारबाट कहिल्यै पार नहुनेहरू।

(च) तीर्थिकहरूका मार्गमा लागेर सधैं अनेक मिथ्यादृष्टिका डोरीले बलियोसँग बाँधिएकाहरू।

(छ) शमथको सुखक्लेशमा आसक्त हुनेहरू।

यिनीहरू विष मिसिएको भोजनले जस्तै गरी पतन भएका हरू हुन्।

(ज) मार्गभ्रष्ट हुनेहरू। यिनीहरू अभिमानी हुन् किनकि यिनीहरूले मोक्षमार्गलाई बिराइसके।

---

५७ यहाँ ब्रह्मलोकमा जाने भनेको कम्तिमा पनि चार ब्रह्मविहारबाट अभ्यासबाट प्रथमध्यानमा पस्ने भनेको हो।

(झ) घुमाउरो बाटोमा पसेकाहरू। यिनीहरू अनिश्चित हीनयानमा लागेकाहरू हुन्।

(ञ) कमजोर बल हुनेहरू। यी बोधिसत्वसम्भार पूरा नभैसकेकाहरू हुन्।

यसरी यी दश प्रकारका सत्वहरू बोधिसत्वले करुणाका निमित्त आलम्बन गर्ने विषय हुन्। अझै ६ पारमितासँग विरोध हुने क्रिया गर्ने ६ थरीका सत्वहरू पनि करुणा गर्ने स्थान हुन्। तिनीहरूमध्ये कञ्जूसलाई, दु:शीललाई, क्रोधीलाई, अल्छीलाई, काम (विभिन्न सांसारिक कुरा) को इच्छाले चञ्चल भइरहेकालाई, दुष्प्रज्ञावान् तीर्थिकहरूलाई करुणाको आलम्बन बनाउनु पर्छ।

संक्षेपमा भावना गर्दा, सूत्रालंकारमा "सुमेरु पर्वतमाथि बसेर हेरे झैं गरी शान्तितिर अभिप्रेरित मन हुनेहरूमाथि त करुणा गर्नु हुन्छ भने भवतिर अभिप्रेरित मन हुनेहरूमा त झन् कुरै के गर्नु ?" भनिएअनुसार भवसागर र निर्वाण यी दुवै नै करुणाका स्थान हुन्। त्यसमा पनि श्रावक र प्रत्येकबुद्धले आफ्नो हित पनि पूरा गरेका हुँदैनन् र अरूको हित पनि पूरा गर्न सक्दैनन्। कथंकदाचित् तिनीहरू बुद्धता प्राप्ति गर्ने तर्फ लागें भने अरू पृथग्जनलाई लाग्ने समयभन्दा ४० महाकल्पभन्दा बढी लामो समय पनि लाग्ने भएकोले घुमाउरो वाटामा परेका भनेर करुणाका स्थान हुन जान्छन्।

त्यस्तै संसारका दु:खहरूको हेतु र फल भोग्ने हिसाबले भन्दाखेरि देव र मनुष्यका नोकरचाकर, सम्पत्ति आदि सबै भए पनि चित्तलाई अकुशलले समातेर प्रयोगमा भने गुरु, त्रिरत्न र सत्वहरूलाई दु:ख दिने विपरीत धर्ममा पस्नेहरू बाण फ्यौंकिए झैं गरी दुर्गतिमा खस्ने हुनाले

तिनीहरू करुणाका विशेष स्थान हुन्। फल भोग्नेहरूमा पनि तीन दुर्गति, सुगतिका दरिद्र, रोगी शरीरवाला, शोकले ग्रस्त मन भएका, प्रियसँग वियोग भएका, अप्रियसँग संयोग भएका, शरीर वृद्ध भएका, मनले हरेस खाएका, माथिल्लो अवस्थाबाट तल गिरेर चाहेको अनुसार लाभ नभएकाहरू सबै करुणा गर्ने स्थान हुन्। यहाँ निर्वाणका[५८] दोष र संसारका दुःखको बारेमा जे जति सकेको सम्झाउनु पर्छ।

२. करुणा उत्पन्न हुनुको कारण

सूत्रालंकारमा बताइए अनुसार करुणाका तीन आलम्बन हुन्छन्। १. सुखवेदनाबाट भएको विपरिणाम दुःख २. दुःखदुःख ३. ती दुईको हेतुको उपेक्षाबाट भएको संस्कारधर्म दुःख। सूत्रमा 'जे जति वेदना छन् ती सबै दुःख हुन्' भनेको अभिप्राय पनि त्यही हो। यसरी तीन ओटा दुःखहरू करुणा उत्पन्न हुने आलम्बनप्रत्यय हुन्। हेतुप्रत्ययचाहिँ करुणाको बीज हो, अधिपतिप्रत्यय चाहिँ कल्याणमित्र हुन्। समनन्तरप्रत्यय चाहिँ स्वभाव हो। यसरी चार प्रत्ययबाट[५९] करुणा उत्पन्न हुन्छ।

३. करुणाको भावना कसरी गर्ने ?

यसमा तीन किसिमका कुरा छन्। तीर्थिकहरूले पुद्गललाई आलम्बन गरी करुणा गर्दछन्। त्यो कसरी ? यी नित्य, एउटै स्वतन्त्र शाश्वत आत्मा भएका प्राणीहरू साँच्चिकै भएको र एकमात्र स्वतन्त्र दुःखबाट मुक्त होऊन् भन्ने भावना गर्छन्। श्रावकहरूले धर्मालम्बन करुणा गर्दा

---

[५८] यहाँ अप्रतिष्ठित निर्वाणलाई नभएर प्रतिष्ठित याने सोपधिशेष र निरूपधिशेष निर्वाणलाई भनेको हो।

[५९] पट्ठान पालिमा २४ प्रत्ययहरूको उल्लेख गरिएको भए पनि ती सबै यी चार प्रत्यय अन्तर्गत नै समाहित हुन पुग्छन् र यी चार प्रत्ययको उल्लेख त्यहाँ पनि पहिले गरिएको छ। त्यस्तै अभिधर्मकोषमा छ हेतु, चार प्रत्यय र पाँच फल गरेर छुट्याइएको छ।

स्कन्ध, धातु, आयतन आदि अनेक धर्मसँग सम्बन्धित भएका यी अनेकौं प्राणीहरू धर्ममात्रको दुःखबाट मुक्त हे।ऊन् भन्ने भावना गर्छन्। यी माथि भनिएका दुई विधिहरू महायानीहरूले गर्दैनन्, किनकि यसमा प्रज्ञा र शून्यतासँग विरोध हुन्छ। बोधिसत्वहरूले त अनालम्बन महाकरुणाको भावना गर्छन्। त्यसमा 'यी माया समानका सबै प्राणीहरू माया समानका दुःखका हेतु र फल सहितबाट मुक्त होऊन्' भन्ने भावना गर्छन्।[६०]

४. करुणाको भावनाबाट हुने फाइदाहरू

महायानसूत्रालङ्कार अनुसार अधिमुक्तिचर्याभूमिमा (सम्भारमार्ग र प्रयोगमार्गमा) रही अभ्यास गर्दा आफू र अरूमा समान रूपमा दुःखबोध नहुने हुँदा त्यसमा शुरु शुरुमा तर्सिने पनि हुन्छन्। आशयविशुद्धिभूमिमा (दर्शन मार्गदेखि सातौं भूमिसम्म) पुगेपछि मात्र समान दुःख बोध हुने भएकाले त्यहाँ अति आनन्द हुन्छ। आर्य धर्मसञ्चयसूत्रमा लोकेश्वरले यसरी भन्नुहुन्छ, "भगवन्, बोधिसत्वले धेरै धर्मज्ञान सिक्नु पर्दैन। बोधिसत्वले एउटै धर्मलाई राम्रोसँग बुझेर धारण गऱ्यो भने बुद्धका सबै धर्महरू उसको हत्केलामा आउँछन्। त्यो एउटै धर्म के हो भने महाकरुणा[६१] हो। भगवन्, महाकरुणाले बुद्धका सबै

---

[६०] यहां यो बुझिराख्नुपर्छ कि बोधिसत्वहरूले गर्नुपर्ने मूल करुणा अभ्यास अनालम्बन करुणाकै हो तापनि त्यसमा एकै पटक अभ्यास गर्न नसकिने भएकोले क्रममा सत्वालम्बन, धर्मालम्बन हुँदै अनालम्बनतिर लाग्ने गरिन्छ। अर्थात् बोधिसत्वयानमा श्रावकयानी करुणा अभ्यास पनि समाहित भएकै हुन्छ र अनालम्बन करुणा भनेको शून्यता र महायानको विशिष्ट करुणा दुवैको एकलोलीभून (युगनद्ध) अभ्यास हो जुन श्रावक, प्रत्येकबुद्धमा पाईदैन।

[६१] महाकरुणा भनेको नै शमथ र विपश्यनाको पूर्णयुगनद्ध (एक लोलीभूत) अभ्यास हो। त्यसैले यो स्वयं नै एक पूर्ण पर्याप्त मार्ग हुन

धर्महरू हत्केलामा आउँछन्" । अतः अहिलेका र अन्तका फाइदाहरू[६२] करुणाबाटै आउँछन् । यसरी मैत्री र करुणा उत्पन्न गरेमा बोधिचित्त उत्पन्न गर्न सजिलो हुन्छ ।

**बोधिचित्त भावना**

बोधिचित्त भावना तीन प्रकारका छन् । १. परात्मसमता भावना २. परात्मपरिवर्तन भावना २. भावना गर्ने अन्तिम उपाय[६३]

१. परात्मसमता

बोधिचर्यावतारमा भनिएको छ–

**"परात्मसमतामादौ भावयेदेवमादरात् ।**

**समदुःखसुखाः सर्वे पालनीया मयात्मवत् ॥**

"पहिले आदरपूर्वक परात्मसमताको भावना यसरी गर्नू- सबै प्राणीहरू दुःखमा र सुखमा पनि मसँग समान नै

---

गएको हो । त्यसैकारणले महायानलाई उपाय (करुणा) र प्रज्ञा (शून्यता) को युगनद्ध मार्ग पनि भनिन्छ ।

[६२] यहाँ परमार्थ फाइदाको मात्र कुरा गरिएको हो नत्र भने थेरवाद आदिका ग्रन्थहरूमा बताइएका ११ ओटा मैत्रीका लाभ जस्ता खालका प्रशस्त व्यावहारिक फाइदाहरू त स्वतः नै हुन्छन् र थेरवादी चतुर्ब्रह्मविहार त थेरवाद अनुसारै पनि लोकोत्तर अभ्यास होइन ।

[६३] यी भावनाहरू बोधिसत्वयानमा मात्र पाइने र बुद्धता दिलाउने विशिष्ट भावना हुन् र श्रावकयानमा कहीं पनि चाहिँदैनन् । अतः श्रावकयानभित्रै रहेर जातक र चर्यापीटक आदिमा छोडिएका छिटफुट पारमीआदि अनुकरण गरी बोधिसत्व या बुद्ध बन्न खोज्नु बयलगाडा चढेर चन्द्रमामा पुग्न खोज्नु मात्र हो, कदापि सम्भव हुँदैन । श्रीलंकाका विद्वान् भदत्त श्री नारदमहाथेराले पनि आफ्नो 'The Buddha and His Teachings' किताबको ४० औं अध्याय 'Bodhisatta Ideal' मा 'परात्मासमता' र 'परात्मपरिवर्तन' भन्ने महायानी संस्कृत शब्दै अनुकरण गर्नपुगेका छन् ।

भएका हुनाले आफूलाई झैं उनीहरूलाई पनि मैले रक्षा गर्छु।"

यसरी पहिले परात्मसमता बोधिचित्तको अभ्यास गर्ने। त्यो यसरी गर्नुपर्छ–

"आकाश समानका सबै प्राणीहरू पहिले मेरा बाबु, आमा, कुटुम्ब नभएका कोही पनि छैनन्। आचार्य नागार्जुले सुहृल्लेखमा भन्नु हुन्छ "आमाको गन्ती गर्न बयरका दाना जत्रा डल्ला वनाएर गन्ने हो भने पृथ्वीले पनि पुग्दैन।" यस्ता आगम र युक्तिहरूबाट सबै प्राणीहरू आफ्नो नजीकका हुन् भन्ने निश्चय गरी आफूलाई सुखलाभ भएमा सबै प्राणीहरूमा यस्तै सुखको लाभ भए हुन्थ्यो भनी हृदयदेखि नै भावना गर। आफूलाई दु:ख आइपर्दा आफू र सबै प्राणीहरू पनि यस्तो दु:ख र दु:खको हेतुबाट मुक्त होऊन् भन्ने हृदयदेखि नै भावना गर। त्यो अवस्थामा मनमा यस्तो असजिलोपन उत्पन्न हुन सक्छ कि मेरो दु:ख अरूले हटाउन सक्दैनन् भने मैले पनि अरूको दु:ख हटाउन सक्दिन। यस्तो श्रावकको मति आयो भने बोधिचर्यावतारमा भनिएको यो कुरा बुझ्नु पर्छ–

**तद्दुखेन न मे बाधेत्यतो यदि न रक्ष्यते।**
**नागामिकायदु:खान्मे बाधा तत्केन रक्ष्यते॥**

"यदि त्यो अर्काको दु:खले मलाई के बाधा छ? भनेर अरूलाई नबचाउने हो भने पछि आइलाग्ने दु:खले पनि अहिले बाधा दिएको छैन, फेरि किन त्यसबाट बचाउ गर्ने प्रयत्न गर्छौ त?"

यसरी आफू स्वयंले पनि बिहानैदेखि भोक, रोग आदि नलागून् भनेर किन प्रयत्न गर्नुपर्‍यो त? आफू त तत्क्षणमै व्यय हुने भएकोले तुरुन्तै अर्को उदय हुन्छ। तर पनि त्यसमा अज्ञानको वासनाले गर्दा बिहानैदेखि त्यतिखेरसम्म

पनि म नै हुँ भन्ने भ्रान्ति हुन जान्छ। वोधिचर्यावतारमा भनिएको छ -

**अहमेव तदापीति मिथ्येयं परिकल्पना ।**
**अन्य एव मृतो यस्मादन्य एव प्रजायते ॥**

"त्यतिखेर पनि उही म नै हुने हुँ भन्ने यो कल्पना मिथ्या हो। किनकि मर्ने अर्कै हो र जन्मिने फेरि अर्कै हो।"

उदाहरणका लागि– मूर्खहरूले यस्तो ठान्छन् कि "पोहोर साल यो खोलाले कपडा बगाएको थियो। अहिले त्यही खोला फेरि तर्नुपर्ने भयो।" तर पोहोरको लुगा बगाउने पानी अलगै थियो र अहिले आफू तर्ने खोलाको पानी बेग्लै छ। त्यस्तै भूतकालको चित्त पनि 'म' होइन र भविष्यकालको चित्त पनि त्यही 'म' नभएर अलगै हो। यसमा यस्तो भन्न सकिन्छ, भविष्यको मन (चित्त) वर्तमानको मन (चित्त) नभए तापनि मेरो मनको सन्तान[६४] हुनाले मेरो मत सिद्ध हुन्छ । त्यसो भन्ने हो भने अरू प्राणीहरू आफू नभए पनि मेरा प्राणी हुन् भन्ने धारणाले भए पनि मनलाई अरूको हितमा लगाउनु पर्छ। यदि विचार गरेर पो त्यस्तो भएको हो, विचारै नगर्दा त त्यो मनको सामु 'मेरो सन्तान हो' भन्ने धारणाले नै आफ्नो हितमा लगाउनु पर्छ भन्ने हो भने अरू प्राणीमा पनि 'मेरा प्राणी हुन्' भन्ने धारणाले उनीहरूको हितमा लगाउनु पर्छ।

यदि आ-आफ्ना हितको लागि मात्र प्रयत्न गरिन्छ, एक अर्काको हितको लागि प्रयत्न गर्न सकिन्न भन्ने हो भने बोधिचर्यावतारमा,

---

[६४] बौद्ध सिद्धान्त बुझ्नलाई 'सन्तान' को या प्रवाहको (continuum) धारणालाई अत्यन्त राम्रोसँग बुझ्नु आवश्यक छ। यही बुझ्न नसक्नाले गर्दा, कुमारिल भट्ट, शंकराचार्य जस्ताहरूले पनि यससम्बन्धमा नमिल्ने प्रसङ्ग उठाएका छन्, जुन प्रश्नै उठ्दैनथ्यो।

**यदि तस्यैव यद् दुःखं रक्ष्यं तस्यैव तन्मतम् ।**
**पाददुःखं न हस्तस्य कस्मात् तत् तेन रक्ष्यते ॥**

"यदि जसको दुःख हो उसैले रक्षा गर्नुपर्छ भन्ने हो भने त खुट्टामा चोट लाग्दा हातले किन बचाउ गरिन्छ त ?" भनेझैं आँखामा कसिँगर पस्दा हातले किन निकाल्ने ? छोराछोरीहरूको हित आमाबाबुले किन गर्ने ? मुखमा भोजन पसाउन हात आदिले कसरी हुन्छ ? अतः आ-आफ्नो मात्र हित गर्न थाल्ने हो भने त अत्यन्तै नमिल्ने हुन जान्छ। संक्षेपमा भन्ने हो भने एकले अर्काको हित नगर्ने र आफ्नै हित मात्र गर्ने भन्ने त अत्यन्तै नमिल्ने र असिद्ध कुरा हुन्छ।

२. परात्मपरिवर्तन भावना

बोधिचर्यावतारमा भनिएको छ–

**न नामसाध्यं बुद्धत्वं संसारेऽपि कुतः सुखम् ।**
**स्वसुखस्यान्यदुःखेन परिवर्तमकुर्वतः ॥**

"जसले आफ्नो सुखसँग अरूको दुःखलाई साट्दैनन् तिनीहरूको लागि बुद्धता भन्ने नाम पनि सिद्ध हुन सक्दैन। त्यस्तालाई त संसारमै पनि कहाँ सुख हुन्छ र ?"

यसअनुसार आफ्नो सुख अरू प्राणीहरूलाई दिएर अरूको दुःख आफूले लिनु पर्छ। यसको आलम्बनको सन्दर्भमा बोधिचर्यावतारमा भनिएको छ–

**हीनादिष्वात्मतां कृत्वा परत्वमपि चात्मनि ।**
**भावयेर्ष्यां च मानं च निर्विकल्पेन चेतसा ॥**

"अर्थात् हीन आदि (तुल्य र श्रेष्ठ) मा आफू बसेर आफूमा अरूलाई सम्झेर ईर्ष्या मान आदिको निर्विकल्प मनले भावना गर्ने गर"।

यसको अर्थ आफूभन्दा तल्लो स्थानमा शत्रुलाई राखी शत्रु वा अरूको उच्च स्थानमा आफू रही उच्च स्थानमा रहेको आफूप्रति तल्लो स्थानमा रहेका ती शत्रुहरूद्वारा

ईर्ष्याको भावना गर्न लगाउने। यो भावना सकिएपछि यसको फल यस्तो हुन्छ कि आफूलाई उच्च ठानी अरूलाई तल्लोले आफूप्रति ईर्ष्या गर्दा यस्तो दु:ख हुँदो रहेछ भन्ने जानेपछि अरूप्रति पनि ईर्ष्या गर्दा यस्तै दु:ख हुँदो होला भन्ने ठानेर ईर्ष्या गर्न छोडिन्छ र यसो गर्नाले ईर्ष्या स्वयं नै शान्त भएर जान्छ। त्यस्तै आफू र अरूलाई समान दर्जामा राखी प्रतिस्पर्धात्मक रूपमा भावना गर्दा पनि आफूसँग समानको शत्रुको स्थानमा आफूलाई नै राखेर आफ्नो स्थानमा त्यो शत्रुलाई राखेर त्यो शत्रुले सबै दृष्टिकोणवाट आफूप्रति घमण्ड, अभिमान गरेको भावना गर्ने। यो भावना सकेपछि यस्तो मन उत्पन्न हुन्छ कि आफूलाई शत्रु भावना गरी अरूद्वारा पीडा, अभिमान गरेको सम्झिँदा त यस्तो हुनेरहेछ भने आफूले पनि अरूसँग घमण्ड आदि गर्नु हुँदैन रहेछ भन्ने ठानिन्छ र घमण्डीपन स्वत: शान्त भएर जान्छ।

त्यस्तै अभिमानको भावना गर्दा पनि आफूभन्दा तल्लो दर्जामा स्वयंलाई राखी आफ्नो स्थानमा आफूभन्दा तल्लो स्तरका व्यक्तिलाई राखेर ती उच्च तहका व्यक्तिले आफू तल्लो स्तरकालाई गोत्र र गुण आदिद्वारा अभिमान गर्न लगाउने। यो भावना सकिएपछि आफूप्रति अरूद्वारा अभिमान भावना गर्दा त यस्तो दु:ख हुन्छ भने मैले पनि अरूप्रति अभिमान गर्न कहाँ हुन्छ भन्ने ठान्न थालिन्छ। यसले अभिमान स्वत: शान्त हुन जान्छ। यिनीहरूका मसिना अर्थहरूको बोधिचर्यावतारमा बताए अनुसार अभ्यास गर्नुपर्छ। यतिसम्म भावना गर्न नसकेर संक्षिप्तमा भावना गर्ने हो भने रत्नावलीमा भनिए अनुसार गर्नुपर्छ -

"ममा अरूले गरेका पाप कर्महरू विपाक होऊन्। मेरा सबै कुशलकर्महरू अरूमा विपाक होऊन्। जबसम्म सबै प्राणीले मुक्ति पाउँदैनन् तबसम्म अनुत्तर बोधिलाभ भएर पनि रहन सकूँ।"

यस्तो भन्दाखेरि हुने पुण्यको रूप हुने भए गङ्गानदीका बालुवाका कण बराबरका लोकधातुमा पनि नअटाउने हुन्छ। यो बुद्धले नै बताउनु भएको हो र यसमा कारण पनि देखिन्छ।

बोधिचर्यावतारको दशौं परिच्छेदको ५६ श्लोकमा भनिएको छ–

**यत् किञ्चिद् जगतो दुःखं तत्सर्वं मयि पच्यताम्।**
**बोधिसत्वशुभैः सर्वैर्जगत् सुखितमस्तु च ॥**

"जगत्का जे जति पनि दुःखहरू छन् ती सबै ममा आएर विपाक होऊन्। सबै वोधिसत्वहरूको शुभ (कुशल) ले गर्दा जगत् सुखी होस्।"

यसरी अर्थलाई मनन गर्दै भावना गर्ने र मुखले पाठ पनि गर्ने गर्नुपर्छ। यसरी यदि सबै प्राणीका दुःखहरू ममा विपाक भए भने मैले त सहनै सक्दिन भन्ने हो भने 'कुकुर बोलाउन कुकुर लगिन्छ, 'मलले मललाई पखालिन्छ' भनेझैं पन्छी, मृग आदिका सामु गई 'मेरो अगाडि सबै जम्मा होऊ' भने पनि सबै भाग्छन्। त्यस्तै सबै सत्वको दुःख ममा विपाक होस् भनेपनि आफू र सत्वहरूको दुःख शान्त भएर जान्छ र विपाक हुँदैन। जस्तै मित्रको छोरी र नर्कको रथ खिच्ने जातक कथा अनुसार बुझ्नु पर्छ।

केही व्यक्तिको मतअनुसार परात्मपरिवर्तन वोधिचित्तको भावना गर्नु हुँदैन। त्यसको कारण परिणामनाको फल निश्चित हुने हुँदा सत्वको दुःख आफूमा निश्चित रूपमा आइपर्छ। अनि ती दुःखका भारी थाम्न नसकिने भएकोले यो परात्मपरिवर्तन बोधिचित्तको भावना उपाय कौशल होइन भनेको सुनिन्छ। यो सिद्ध हुँदैन किनकि परिणामना दुई किसिमका छन्। १. स्थानको परिणामना

२. स्थानविनाको परिणामना[६५]। त्यसमध्ये स्थानको परिणामनाको अन्त्य निश्चित हुन्छ र अस्थानको परिणामनाको अन्त्य निश्चित हुँदैन भन्ने फरक नबुझेर उनीहरूले त्यस्तो भनेका हुन्। वोधिचर्यावतारको ८।३१ मा भनिएको कुराको मतलव नवुझेर मात्र भनेको हो।

त्यसकारण परात्मपरिवर्तन भावनाको मर्म वुझेर गरेमा चाँडै नै अभिसम्बोधि प्राप्त हुन्छ।

३. भावना गर्ने अन्तिम उपाय

आफ्नो हित गर्नुको बेफाइदा, परहित गर्नुको फाइदा, त्यसैले परहित गर्नुमा प्रयत्न गर्नुपर्ने यी तीन कारणहरूलाई चित्तले सम्झी मुखले पाठ गर्नुपर्छ।

बोधिचर्यावतारको आठौं परिच्छेदमा भनिएको छ,

**अथैवमुच्यमानेऽपि चित्तं नेदं करिष्यसि।**

**त्वामेव निग्रहीष्यामि सर्वदोषास्त्वदाश्रिताः॥**

"हे स्वार्थी चित्त, मैले यसरी भन्दाखेरि पनि तैंले यस्तो गरिनस् भने तँलाई नै दण्ड दिनेछु किनकि सबै दोषहरू तेरै आश्रयमा हुन्छन्।" यस अनुसार सत्वको हितमा नलागेमा चित्तलाई नै दण्डित गर्नुपर्ने हुन्छ। वोधिचर्यावतारमै फेरि भनिएको छ–

**क्व यास्यसि मया दृष्टः सर्वदर्पान् निहन्मि ते।**

**अन्योऽसौ पूर्वकः कालस्त्वया यत्रास्मि नाशितः॥**

**अद्याप्यस्ति मम स्वार्थमित्याशां त्यज साम्प्रतम्।**

"हे स्वार्थी चित्त, अब तँ कहाँ जालास्, मैले तँलाई देखिहालें। तेरा सबै घमण्डहरू चकनाचुर पारिदिन्छु। पहिले त बेग्लै समय थियो र तैंले मलाई सत्यानाश गरेको

---

६५ फलानाको यस्तो होस् भनी तोकिएको र सवै प्राणीको यस्तो होस् भनेर सामान्य रूपमा गरिएकोलाई क्रमशः यिनै दुइटाले जनाइएको हो।

थिइस् । 'अझै मेरो स्वार्थ छ' भन्ने आशालाई तुरुन्तै छोडिहाल् ।" पहिले अनादिकालदेखि अहिलेसम्म संसारमा भएका सबै दु:खहरू आफ्नो हित (स्वार्थ) गर्नाले भएको हो भन्ने बुझ्नू र आफ्नो स्वार्थलाई छोड्नू भन्न खोजेको हो । बोधिचर्यावतारमा भनिन्छ–

**त्वं विक्रीतो मयाऽन्येषु बहुखेदमचिन्तयन् ॥**
**त्वां सत्वेषु न दास्यामि यदि नाम प्रमादतः ।**
**त्वं मां नरकपालेषु प्रदास्यसि न संशयः ।**
**एवं चानेकधा दत्वा त्वयाहं व्यथितश्चिरम् ।**
**निहन्मि स्वार्थचेटं त्वां तानि वैराण्यनुस्मरन् ॥**

"धेरै दु:खलाई भुलेरै तँलाई मैले अरू प्राणीको हितका निमित्त बेचिसकें, अब परहितमा राम्ररी लाग् । यदि लापरवाहीले मैले तँलाई प्राणीहरूको सेवाका लागि नसुम्पेको भए त तैंले पक्कै पनि मलाई यमदूतहरूका हातमा सुम्पिने रहेछस् ।"

यसको अर्थ के हो भने चित्तोत्पादको बेलामा मैले आफूलाई सत्वहरूको लागि बेचिसकेको थिएँ । नबेचेको भए तक मलाई यमदूतको ठाउँमा पुऱ्याउने निश्चित रहेछ भन्ने बुझ्नू भनेको हो ।

"यसप्रकार अनेकौं पटक तैंले मलाई धेरै लामो समयसम्म सताएको छस् । ती पुराना वैरभावहरूका सम्झना गर्दै म आज तँ स्वार्थी नोकरलाई नष्ट पारिदिन्छु । " यसरी समता र परिवर्तनको भावना गरेर पनि आफ्ना चित्तसन्ततिमा उत्पन्न नभएर अभ्यास लागू गर्न नसकेमा नदाएको घोडालाई कोर्रा लगाई तह लगाए झैं आफ्नो चित्त को मर्ममा उतारेर बलपूर्वक हातमा लिनुपर्छ । वोधिचर्यावतारमा,

**अप्रमेया गताः कल्पाः स्वार्थं जिज्ञासतस्तव ।**
**श्रमेण महतानेन दु:खमेव त्वयार्जितम् ॥**

"हे चित्त, तैंले स्वार्थकै चिन्तामा असंख्य कल्प बिताइस्, परन्तु यत्रो परिश्रम गर्दागर्दै पनि तैंले दुःखै मात्र कमाइस्" भने अनुसार अनेकौं कल्पसम्म आफ्नो हितमात्र सिद्ध गर्न खोजे पनि आफ्नो हित त परै जाओस्, अझै त्यसमाथि दुःख मात्रै सिद्ध गरिस् र सुखको हेतु एक क्षण पनि गराइनस् भन्दै मनमा लाज पैदा गराउनु पर्छ। बोधिचर्यावतारमा भनिएको छ –

**अन्यदीयश्चरो भूत्वा कायेऽस्मिन् यद् यदीक्षसे ।**
**तत्तदेवापहृत्यार्थं परेभ्यो हितमाचर ॥**

"अर्कोमा आफू रहेर यो शरीरमा जे जे देखिन्छ त्यो सबै अपहरण गर्दै अर्काको हित गर्ने काम गर।" यस अनुसार दुःख परेकालाई दुःख हटाइदेऊ, दुःख परेको देखे पछि तिमीले कञ्जुस्याइँ गरिराखेको चीजलाई बलपूर्वक खोसेर दुःख परेकालाई दिई जति सक्यो फाइदा पुऱ्याऊ। आफूलाई सुख छ अरूलाई सुख छैन, आफूलाई उच्च तहमा अरूलाई निम्न तहमा, आफूलाई फाइदा गर्ने अरूलाई नगर्ने भनेर आफूप्रति इर्ष्या किन न गरेको ? यसमा आफूलाई सुखी र उच्च तहमा रहेछु र अरू चाहिं दुःखी र तल्लो तहमा रहेछन् भन्ने सम्झेर बुझेर आफूले आफ्नो ईर्ष्या भावना गर्ने गर्नुपर्छ। बोधिचर्यावतारमा पनि भनिएको छ -

**सुखाच्च च्यवयात्मानं परदुःखे नियोजय ।**
**तदायं किं करोतीति छलमस्य निरूपय ॥**

"आफूलाई सुखबाट खसालेर अरूको दुःखमा नियुक्त गर। अर्थात् आफ्नो सुख तुरुन्तै अरूलाई दिएर सत्वहरूको दुःखको भार आफूले उठाइहाल। त्यसवेला यो मनले के बहाना गर्छ भन्ने निरूपण गर।"

**अन्येनापि कृतं दोषं पातयास्यैव मस्तके ।**
**अल्पमप्यस्य दोषं च प्रकाशय महाजने ॥**

"अरूले गरेको दोष यसकै टाउकामा थुपारिदिनू र यसका थोरै र सानातिना दोष पनि धेरै जनसमूहमा प्रकाशित गरिदिनू।"

आफ्नो काय, वाक्, चित्तको कार्यलाई विचार गर्दै यदि खराब चर्या गरेको रहेछ भने यसरी सम्झाउनु पर्छ - "पहिले पनि संसारमा कहाँसम्म धेरै बरालिइस्। त्यसबाट पनि नडराएर अझैं संसारको दुर्गतिमा बरालिइरहने हो कि के हो ?' यसरी आफ्नो मनलाई लाज दिलाउनु पर्छ। अरूले आफूप्रति अपकार गरे पनि त्यो अर्काको दोष नभएर आफ्नै कुकर्मको फल हो भन्ने सम्झनुपर्छ। आफूले अरूको थोरै गल्ती गरियो भने पनि त्यो अरूलाई सुनाएर प्रायश्चित गर्नु पर्छ।" बोधिचर्यावतारमा भनिएको छ -

**अन्याधिक यशोवादैर्यशो ऽस्य मलिनीकुरु।**

**निकृष्टदासवच्चैनं सत्वकार्येषु वाहय॥**

"अरूको धेरै कीर्तिप्रशंसा गरेर यसको ख्यातिलाई मलिन पारिदेऊ। निकृष्ट दासलाई झैं यसलाई पनि प्राणीहरूको कार्यमा जोताऊ।" अतः यदि आफूलाई कसैले गोत्र, गुणआदिद्वारा स्तुति प्रशंसा गऱ्यो भने मभन्दा पनि यस्ता गुणहरू धेरै हुने त अरू कति छन् कति भन्ने सोचेर आफ्नो गुणलाई मलिन गराउनु पर्छ र सेखी गर्नु हुँदैन। गुरु, त्रिरत्न र अरू सत्वहरूको कार्यमा जोतिनु पर्दछ। अझै बोधिचर्यावतारमा यस्तो भनिएको छ -

**नागन्तुकगुणांशेन स्तुत्यो दोषमयो ह्यहम्।"**

आफूमा अलि कति आगन्तुक गुणको अंश देखिए पनि त्यो आगन्तुक मात्र भएकोले आफू त दोषमय नै छु भन्ने ठान्नुपर्छ। आफूलाई स्तुति गर्न लायक ठान्नु हुँदैन।

**यथा कश्चिन्न जानीयाद् गुणमस्य तथा कुरु।**

"जसो गर्नाले आफ्नो गुण अरूले थाहा पाउँदैनन् त्यस्तो हिसाबले चल्नू।"

**संक्षेपाद् यद्यदात्मार्थे परेष्वपकृतं त्वया ।**
**तत्तदात्मनि सत्वार्थे व्यसनं विनिपातय ॥**
**नैवोत्साहोऽस्य दातव्यो येनायं मुखरो भवेत् ।**
**स्थाप्यो नववधूवृत्तौ ह्रीतो भीतोऽथ संवृतः ॥**

"संक्षेपमा भन्दा तैले आफ्नो निमित्त अरूलाई जे जे अपकार गर्थिस् अब अरूका निमित्त आफूमा पनि त्यस्तै गर्ने बानी बसाल् ।"

"यसलाई बोल्ने मौका नदिनको लागि निरुत्साहित पार्नुपर्छ । नयाँ दुलहीलाई झैं लाज र डरले नियन्त्रित गरेर लुकाई राख्नुपर्छ ।"

यस्ता अर्थहरू सम्झेर ईर्ष्याको भावना गर्दै आफूलाई प्रयत्नपूर्वक अरूको हितमा लगाउनुपर्छ । यसरी आफ्नो स्वार्थलाई त्यागेर परार्थ सिद्ध गर्नाले अन्तमा स्वार्थ पनि सुसम्पन्न हुनु प्रतीत्यसमुत्पादको महानता हो ।

**मद्विज्ञप्त्या तथात्रापि प्रवर्तस्वाविचारतः ।**
**द्रक्ष्यस्येतद्गुणान् पश्चाद् भूतं हि वचनं मुनेः ॥**

मेरो आज्ञाले अब यहाँ तैले कुनै विचारै नगरी (परहितमा) लागिहाल् । यसका गुणहरू तैंले पछि देख्नेछस्, किनकि मुनिका वचनहरू यथार्थ हुन्छन्, मिथ्या हुँदैनन् ।" अर्थात् सम्यक्सम्बुद्धमा झूटोपन नहुनाले यो पक्का हो कि परार्थ गर्नाले नै स्वार्थ सिद्ध हुन्छ[६६] ।

**अभविष्यदिदं कर्म कृतं पूर्वं यदि त्वया ।**
**बौद्धं सम्पत्सुखं मुक्त्वा नाभविष्यदियं दशा ॥**

"यदि तैले पहिले नै यस्तो कर्म गरेको भए बौद्ध सम्पदाको सुखलाई छोडेर तेरो यस्तो दशा हुने नै थिएन ।"

---

[६६] अंगुत्तर निकायमा भगवान्ले चार किसिमका व्यक्ति स्वहित परहित, स्वहित परन्तप, स्वतप परहित, स्वतप परंतप गर्ने मध्ये स्वहित परहित गर्ने नै उत्तम हो भन्नुभएको छ । त्यसको लागि स्वार्थतिर नभएर परार्थतिर लाग्नुपर्छ जसले स्वहित परहित दुवै हुन्छ ।

अर्थात् यो परात्मपरिवर्तनको अभ्यास गर्न ढिला भयो। पहिले नै गरेको भए अहिले सम्म बुद्ध भइसक्ने थियौं भन्ने सोचेर परात्मपरिवर्तनको लागि प्रयत्न गरिराख्नुपर्छ।

कसैले यस्तो भन्छन्- "बोधिचित्त भावना गरेपछि मात्र शून्यता[६७] भावना गर्नुपर्छ, होइन र ?" त्यस्तो भन्ने हो भने "प्रज्ञाले समारोपलाई नकाटीकन शून्यतामात्रले भड्किने सम्भावना भएकाले अहिले त्यसै शून्यताको भावना नगर्नू" भनेर आचार्य आर्य (नागार्जुन) ले भन्नु भएअनुसार गलत दृष्टिसहित शून्यतालाई हेरिनाले मन्दप्रज्ञहरूलाई हानि हुन जान्छ। "यो अनुत्पन्न, यो शून्यता, यो अनात्मा भनेर बताइएको शून्यता भावना गर्ने हीन व्यक्तिले त्यहाँ आत्माकै भावना गरेको हुन्छ"[६८]। यस्ता कुरा बताइएको हुनाले शून्यता भावनाको तरिका त प्रज्ञापारमिताद्वारा प्रपञ्चलाई काट्ने तरिका हो (जुन पछि प्रज्ञापारमिताको अध्यायमा बताइने छ।)

(ग) ध्यानलाई अविपरीत सिद्ध गर्नु :

यसमा पनि दुई कुरा पर्छन्। चार गुण सिद्ध गर्नु र सात आसक्तिलाई त्याग्नु। त्यसमध्ये पहिलोको लागि सूत्रालंकारमा भनिए अनुसार प्रतिपक्षले रहित हुनु भनेको चित्त चञ्चलताले रहित हुनु भनेको हो। निर्विकल्प भनेको अनात्मबोध गर्नु हो, सबैको इच्छा पूरा गर्नु भनेको ध्यानको आधारमा स्वहित र परहित सिद्ध गर्नु हो र सत्वपरिपाचक भनेको त्यसद्वारा सबै सत्वलाई तीन यानमा लगाउनु हो।

सात आसक्ति भनेका सूत्रालंकार अनुसार निम्न छन्। १. विपक्षमा, २. विलम्वनामा, ३. सन्तोषमा, ४. यो

---

[६७] यो महायानको अत्यन्त मौलिक विपश्यना विधि हो।

[६८] यो कुरा नबुझिकन ठाडै शून्यता भावना गर्दा मिथ्याशून्यता भावना हुन जान्छ जुन आत्मभावना सरह हुन्छ।

जीवनको कुनै प्रतिफलको आशामा, ५. विपाकको आशामा, ५. प्रतिकूलतामा अर्थात् त्यसको अनुशयलाई नाश नगर्नुमा, ६. चञ्चलतामा आसक्ति भनेका दुई थरी हुन्छन् जुन पहिले भने अनुसार नै हुन्। त्यस्ता सातओटा आसक्तिहरूलाई अनुशयसहित त्याग्नु पर्दछ।

**३. ध्यान अभ्यासको फल :**

ध्यान अभ्यासका फाइदाहरू पनि दुई किसिमका छन्। अहिलेका फाइदा र अन्तका फाइदा।

अहिलेका फाइदामा पनि यही जीवनको फाइदामा शमथ उत्तम हुन्छ। त्यसबाट आगन्तुक क्लेशहरू पनि रोकिन्छन्। आठ लौकिक धर्महरू कमजोर हुन्छन्, ध्यानको प्रीति-सुख लाभ हुन्छ। ऋद्धि र अभिज्ञा आदि धेरै गुण प्राप्त हुन्छन्। देवसहित लोकले मन पराउने स्थानमा रहन पाइन्छ। परलोकका फाइदामा काय, वाक्, चित्त तीनओटै अधीनमा रहन्छन्। चार ध्यान पाँच अभिज्ञा आदि लाभ हुन्छ भनी सञ्चयगाथा सूत्रमा भनिएको छ- "ध्यानद्वारा कामगुणलाई निन्दित ठानी त्यागिदिन्छ र विद्या, अभिज्ञा आदि साक्षात्कार गर्छ।"

अन्तका फाइदामा बुद्ध हुँदा आफ्नो र अरूको लागि चार परिशुद्ध कर्महरू लाभ हुन्छन् भनी सूत्रालंकारमा भनिएको छ-

**आदानस्थानसन्त्यागनिर्माणपरिणामने।**
**समाधिज्ञानवशितामनुप्राप्त नमोऽस्तु ते॥**

"अर्थात् आधार परिशुद्ध हुनाले शरीर लिने (आदान), रहने (स्थान) र त्याग्ने (सन्त्याग) कुरामा अधिकार प्राप्त हुन्छ। आलम्बन[६९] परिशुद्ध हुनाले निर्माण नभएकोलाई

---

[६९] यहाँ आलम्बन भन्नाले शून्यता-करुणा-युगनद्धरुपलाई नै भनेको हो।

भएको बनाउने भएकोलाई न भएको पार्न सकिन्छ। चित्त परिशुद्ध हुनाले ध्यानको अधिकार प्राप्त हुन्छ। प्राज्ञा परिशुद्ध भएकोले ज्ञानको अधिकार प्राप्त हुन्छ। त्यस्तो प्राप्त गरिसकेका तिमीलाई वन्दना गर्छु।" यसरी बुझ्नु पर्छ।[७०]

६. <u>प्रज्ञापारमिता</u> :- प्रज्ञापारमिताभित्र तीन कुरा बताइन्छन्। १. प्रज्ञाको लक्षण, २. प्रज्ञाको स्वभावलाई निश्चय गर्नु, ३. प्रज्ञा उत्पन्न गर्नुको फाइदा

१. <u>प्रज्ञाको लक्षण</u> :

ज्ञेय (जानिनेकुरा) को यथार्थतालाई सही रूपमा बोध गर्नु प्रज्ञाको लक्षण हो[७१]। त्यसमा पनि प्रयोग, मौल र पृष्ठ समाहित भए भने प्रज्ञापारमिता हुनजान्छ।

२. <u>प्रज्ञाको स्वभावको निश्चय गर्नु</u> :

यसमा तीन कुरा पर्छन्। (क) प्रज्ञाको विपक्षलाई चिन्नु, (ख) प्रत्येकको उपचारलाई बुझ्नु, (ग) त्यसलाई अविपरीत रूपमा सिद्ध गर्नु।

(क) <u>प्रज्ञाको विपक्ष</u>:

प्रज्ञाको विपक्ष भनेको मूर्खजस्तै प्रज्ञाको गुण नखोज्नु, खोजे तापनि तीर्थिकले जस्तै विपरीत कुरामा प्रयत्न गर्नु र

---

७० यहाँ महायानको ध्यान पद्धतिको छोटकरीमा नक्शा मात्र दिइएको हो र साँच्चिकै अभ्यास गर्न यतिले मात्र केही पनि पुग्दैन।

७१ 'अभिधम्मत्थ संगहो'मा- 'पटिवेधलक्खणा पञ्ञा' याने धर्मको याथभूत अवबोध गर्नु प्रज्ञाको लक्षण हो। त्यस्तै त्यहीँ 'पकारेण जानातीति पञ्ञा' अर्थात् 'त्यो त्यो अनित्य आदि प्रकारले धर्महरुलाई जान्नेवाला' प्रज्ञा हो। अभिधर्मकोषमा- 'प्रज्ञा धर्माणां प्रविचय:' अर्थात् प्रज्ञा भनेको धर्महरुलाई केलाउनु हो। त्यहीँ व्याख्यामा "स्वसामान्यधर्मलक्षणयथाभूतव्यवचारणा इति प्रज्ञा" अर्थात् धर्महरुको स्वलक्षण र सामान्यक्षणलाई यथाभूत रूपमा अनुसरण गर्ने हुनाले प्रज्ञा हो भनिएको छ।

श्रावक जस्तै अविपरीत हुन गए पनि सम्यक सम्बुद्ध हुने हेतु नवन्नु हो। यसका दोषहरू दुई प्रकारका छ - १. यो जीवनको दोष र २. सबै जन्मभरिको दोष।

यो जीवनको दोष के हो भने अज्ञानको कारणले आफू अल्छी भइन्छ र गर्नुपर्ने एवं नपर्ने कुराहरू बुझ्दैन। देवसहित लोकले गिज्याउँछन्। "सिंहको बीचमा फ्याउरोजस्तो विद्वान्को पंक्तिमा पस्न नपाउने जस्ता धेरै दोष हुन्छन्" भनी विनयमा भने अनुसार - सिंह जस्ताले फ्याउरो जस्तालाई आदर गर्दैनन् भनेको जस्तो हो। चाणक्यनीतिमा "दुई खुट्टेमा साक्षात् पशु बुद्धुलाई परित्याग गर्नुपर्छ, उनीहरूमा श्रुतमयी सम्पत्ति न हुनाले यो पृथ्वीमाथिका भार नै हुन् भन्ने सम्भिनु पर्छ।" भन्ने कुरा बताइएको छ।

अझै "विद्वान्को अगाडि कमजोरपन देखाउने, जडहरूको बीचमा खुशियाली मनाउने व्यक्ति त जुरो र माल नभएको माथिल्लो दाँतवाला गोरु हो"[७२] भन्ने श्लोक पनि सम्भिनु पर्छ

सधैंको दोषका सम्बन्धमा बोधिचर्यावतारमा यस्तो बताइएको छ -

**व्याध्याकुलो नरो यद्वत् न क्षमः सर्वकर्मसु।**
**तथाभ्यां विकलं चित्तं न क्षमं सर्वकर्मसु॥**

"जसरी व्याधिले आकुल भएको मानिस कुनै काम गर्नमा पनि सक्षम हुँदैन त्यस्तै यी (स्मृति र सम्प्रजन्य) दुईले रहित भएको चित्त पनि कुनै काम गर्न सक्षम हुँदैन।"

त्यसैले जसरी रोगले ग्रसित गरेको मानिसमा केही काम गर्ने शक्ति हुँदैन, त्यस्तै अज्ञानले मनलाई ग्रसित

---

७२ यो श्लोक साक्यापण्डितको अर्को रचना "सुभाषितरत्ननिधि कोष" को हो।

पारेमा कुनै काम गर्न पनि शक्ति हुँदैन। अभिधर्मकोषमा भनिएको छ -

**धर्माणां प्रविचयमन्तरेण नास्ति।**
**क्लेशानां यत उपशान्तयेऽभ्युपायः॥**
**क्लेशैश्च भ्रमति भवार्णवेऽत्र लोक-**
**स्तद्धेतोरत उदितः किलैष शास्त्रा॥**

अर्थात् "धर्महरूलाई केलाएर हेर्नुबाहेक क्लेश शान्त पार्ने अर्को उपाय छैन। क्लेशले गर्दा नै लोक यो भवसागरमा घुमिरहेको छ। त्यही भएर शास्ताले यो वताउनु भएको हो"। अतः प्रज्ञा नभएमा हेय र उपादेयको विषयमा थाहा नहुनाले जे काम गरे पनि पूर्ण हुँदैन। जुन जन्ममा पनि इन्द्रियहरू मन्द हुन्छन्। त्यसले गर्दा एउटा ज्ञानधर्म अपनाए पनि बिग्रिनु बाहेक पूर्ण हुने सम्भावना हुँदैन। भावना गरे पनि आत्मग्राहको मूल कार्टिदैन। काटियो भने पनि उपायकुशलता नभएकाले श्रावक र प्रत्येकबुद्धको निरोधमा खस्ने आदि धेरै दोषहरू हुन्छन्।

(ख) प्रत्येकको उपचारमा विचार : उपचार पनि दुई किसिमका छन् : १. हेतुको उपचार, २. फलको उपचार

१. हेतुको उपचार : दुष्प्रज्ञाको हेतु **अज्ञान** हो। यसको **प्रत्यय दुष्टमित्र (कुमित्र)** संगको संगत हो। प्रमाणवार्तिकमा भनिएको छ -

**"तन्मूलाश्च मलाः सर्वे स च सत्कायदर्शनम्।"**

"अज्ञान नै दोषको जरो हो र त्यो नै सत्कायदृष्टि हो।" त्यस्तै दुष्ट मित्र (कुमित्र) पनि अज्ञानको प्रत्यय भन्न सकिन्छ किनकि धूर्त व्यक्तिले अन्धकार (अज्ञान) नै फैलाउँछ। त्यही भएर सूत्रमा "तिमीलाई असह्य दुःख भोग्न कसले लगायो?" भन्दाखेरि "अकुशल मित्रहरूले हो" भनिएको हो। यसरी विस्तारमा बुझ्नु पर्छ। त्यसकारण यसलाई त्याग्ने उपायको श्रवण, मनन-चिन्तन गरिराख्नुपर्छ।

सूत्रमा भनिएको छ कि "श्रुतिले अनर्थलाई त्याग्छ, श्रुतिले पापबाट बचाउँछ, श्रुतिले प्रज्ञाको वृद्धि हुन्छ, श्रुतिले निर्वाण प्राप्त हुन्छ"[७३] अतः श्रुतिको आधारले अज्ञानको वासना पातलो भएर जान्छ। त्यो श्रुति कस्तो हुनुपर्छ भने त्रिपिटक र चार तन्त्रहरूलाई परस्पर विरोध नहुने गरी बताउन सक्ने उत्तम कल्याणमित्र द्वारा सुनाइएको हुनुपर्छ। तिनीहरूमा असामञ्जस्यता हुने गरी बताउँछ भने उसको अहिले राम्रो चरित्र जस्तो देखिए पनि उसलाई गुरु मान्नु हुँदैन। जस्तै : मृगको पुच्छर देखाएर गधाको मासु बेच्छन्, शिकारीले श्रमणको भेष धारण गर्छन् या भोजन दिएर फँसाउने (धरापमा पार्ने) आदि गर्छन्। यस्ता उदाहरणबाट बुझ्नु-बुझाउनु पर्दछ।

२. फलको उपचारमा भ्रान्त प्रज्ञाको खण्डन र सम्यक् प्रज्ञाको सिद्धि यी दुई पर्दछन्। त्यसमध्ये भ्रान्त प्रज्ञाको खण्डनमा पनि परवादीमतको खण्डन र स्ववादी समारोपको खण्डन पर्दछन्।

परवादीमतको खण्डन भित्र, तीर्थिकहरूका मिथ्यादृष्टि थुप्रै छन् तापनि ती सबै उच्छेद र शाश्वत गरी दुई दृष्टिमा समेटिन आइपुग्छन्। त्यसमध्ये शाश्वतवादीहरू चार प्रकारका छन्। वैदिक, सांख्य, वैशेषिक र निर्ग्रन्थ[७४]। उच्छेदवादीदृष्टिमा चार्वाकको मात्र ख्याति छ। यिनीहरूको बारेमा भोटका कल्याणमित्रहरूले अनेक विभागहरू गरेको देखिए पनि त्यसमा भ्रान्ति देखिन्छ। यिनीहरूका हेतु र

---

[७३] यहाँ 'श्रुति' या 'श्रवण' भनेकोमा हालको परिप्रेक्ष्यमा किताब आदि अध्ययन गर्नु पनि पर्दछ। पहिले पुस्तकहरू नभएकाले सुनेरै ज्ञान गर्ने चलन भएकोले श्रुति भनिएको हुन्छ।

[७४] निर्ग्रन्थ भनेको जैनहरूलाई हो। दीर्घनिकाय (वा दीर्घागम)को ब्रह्माजाल सूत्रमा दिइएका ६२ प्रकारका मिथ्या दृष्टिहरू पनि यिनै शाश्वत र उच्छेद गरी दुई अन्तभित्रै समाहित हुन्छन्।

प्रत्यय आत्मग्राह र कुमित्रको संगत नै हुन्। स्वभाव चाहिँ 'शाश्वत' र 'उच्छेद' गरी दुई किसिमका हुन्छन् भन्ने मान्दछन्। त्यसमा चारथरी शाश्वतवादीले त्यो नित्य आत्मा कर्म र क्लेशको वन्धनमा पर्दा संसार र मुक्त हुँदा मोक्ष हुन्छ भन्ने मान्दछन्। उच्छेदवादीले अहिलेको आत्मा वन्धनमा पर्दा संसार र मुक्त हुँदा मोक्ष भन्ने दुवै नै मान्दैनन्। यिनीहरूको दोष देखाउनको लागि संक्षेपमा भन्दा पुद्गल-आत्मा र धर्म-आत्मा दुवैलाई खण्डन गरी सवै धर्महरू नि:स्वभाव वोध गर्नाले शाश्वत र उच्छेदवाट मुक्त हुनेछ भन्ने स्पष्ट हुन्छ।

स्ववादीले गरेको समारोपको खण्डन :

यसमा श्रावकसिद्धान्तवादीलाई, महायानका नेयार्थलाई नीतार्थ मान्नेहरूलाई र श्रावक र महायानबाहेक अर्को बुद्धको शासन मान्नेहरूलाई प्रतिषेध गरिन्छ। **श्रावकयानमा वैभाषिक** र **सौत्रान्तिक** दुई थरी छन् भने महायानमा **चित्तमात्री** र **माध्यमिक** दुई थरी छन्। चित्तमात्रीमा पनि साकारवादी र निराकारवादी गरी दुई थरी छन्। **माध्यमिकमा** पनि **स्वातन्त्रिक** र **प्रासङ्गिक** गरी दुई थरी छन्। यस्ता सिद्धान्तवादीहरू सवैले आफूलाई माध्यमिक[७५] भन्ने दावी गर्छन् तापनि उनीहरू 'सत्' या 'असत्' मध्ये कुनै एक अन्तमा खस्ने भएकाले तिनीहरूको प्रतिषेध गर्नु आवश्यक छ किनकि तिनीहरू 'शाश्वत' र 'उच्छेद' अन्तवाट वच्न र पार हुन सकेका छैनन्। यिनीहरूको विस्तारमा गरिएको खण्डनको वारेमा वुझ्न मैले रचेको 'प्रमाणयुक्तिनिधि' र 'सिद्धान्तभाग' भन्ने ग्रन्थमा हेर्नुपर्छ।

---

* वुद्धको मूल उपदेश नै मध्यम मार्ग याने 'मध्यमा प्रतिपद्' भएको हुनाले सवै वौद्ध दार्शनिकहरूले आफूलाई माध्यमिक भन्ने दावी गर्ने गर्छन्।

यहाँ त श्रावक र महायान बाहेकको अर्को बुद्धको शासन मान्नेहरूको मतलाई खण्डन गरिन्छ[७६]। त्यो खण्डन चार प्रकारको छः (क) प्राचीनको चिनियाँ मतको, (ख) त्यसको अनुसरण गर्ने पछिको मतको, (ग) अहिले ख्यातिप्राप्त निराकारवादी चित्तमात्रीको भावनालाई महामुद्रा मान्ने मतको र (घ) प्रज्ञापारमिताभास (आभासित प्रज्ञापारमिता) लाई नै महामुद्रा मान्नेहरूको मतको खण्डन।

(क) प्राचीनको चिनियाँ मतको खण्डन : भोटसम्राट् ठ्रीसोङ देउचन्‌को[७७] पालामा चीनका भिक्षुले यसो भन्दथे "शब्द निःसार छ। व्यावहारिक धर्मबाट वुद्धता प्राप्त हुँदैन, चित्तबोध भयो भने मात्र हुन्छ। 'त्यो शुक्लैकपर्याप्त' (कार्पो चिग् थुब्) हो (अर्थात् त्यो चित्तबोधरूपी सेतो धर्मले मात्र पुग्छ अरू सबै पारमिता आदि व्यर्थ हुन्)।" त्यो मतको शास्त्रमा सुत्नेचक्र, ध्यानको सन्देश, पुनःसन्देश, दृष्टिको गाता, अस्सी सूत्रहरूको स्रोत आदि छन् र यो 'शुक्लैकपर्याप्त' (कार्पो चिग् थुब्)मत तिब्बतप्रान्तमा फैलिएको थियो। यो मत भारतको धार्मिक मतसँग नमिलेकोले ज्ञानेन्द्र (शान्तरक्षितका शिष्य) लाई राजाले सवारी चलाएर भारत र चीनको धार्मिक मतमा कुनचाहिं ठीक छ भन्ने कुरा सोधे। ज्ञानेन्द्रले यसरी उत्तर दिनुभयो "आचार्य शान्तरक्षितले मृत्युवेलाको अन्तिम वचनमा यस्तो भन्नुभएको थियो कि यो भोट देशमा आचार्य पद्म सम्भवले बाह्र देवी (तेन्मा चुन्यी) लाई धर्मरक्षा गर्ने आदेश दिएकोले यहाँ तीर्थिकहरू आउन सक्दैनन्। परन्तु दिन र रात, दायाँ

---

[७६] आजभोलि पनि श्रावकयान र महायान दुवै परम्पराबाट नआएर पनि आफूलाई बुद्ध, बौद्ध गुरु र सर्वबौद्ध व्याख्याकार दावी गर्ने व्यक्ति र तिनीहरूका मत प्रशस्तै पाइन्छन्। सम्यक् प्रज्ञाको अभ्यासको लागि तिनीहरुको खण्डन यसरी नै गरिनु आवश्यक हुनजान्छ।

[७७] आठौं शताब्दी।

र बायाँ, कृष्ण पक्ष र शुक्ल पक्ष, शुद्ध र अशुद्धजस्ता दुई दुई कुराहरू हुनु नै प्रतीत्यसमुत्पादको महानता भएको हुनाले म बितेपछि चीनबाट एउटा उपाध्याय आउने छ र उसले उपाय र प्राज्ञलाई निन्दा गरेर चित्तबोध मात्रैले बोधिप्राप्त हुन्छ भन्ने 'शुक्लैकपर्याप्त' मत यहाँ प्रवेश गराउने छ। त्यस्तालाई भगवान् बुद्धले सूत्रमा यस्तो भन्नुभएको छ, 'पाँच कषाय अन्तर्गतको दृष्टिकषाय भनेको शून्यतामात्रलाई मन पराउने हो।' यो त भोटमा मात्र नभएर पाँच कषाय फैलिएका सबैले रुचाइने स्वभाव (धर्मता) नै हो। यो फैलिएमा सामान्यतया बुद्धशासनमा बाधा पर्ने हुँदा त्यसबेला मेरो शिष्य कमलशील[७८] भन्ने विद्वान्लाई भारतबाट झिकाएर चीनका उपाध्यायहरूसँग शास्त्रार्थ गराउनू र विजयी पक्षको मतलाई मान्नू। त्यसैले सोही बमोजिम गर्नुहोस्" । अनि आचार्य कमलशीललाई बोलाइएको थियो। साम्ये[७९] भन्ने विहारमा राजा र विद्वान्हरूले साक्षी बसेर सबै हात हतियारहरू थान्को लगाएर हातमा पुष्पमाला लिएर जो विजयी हुन्छ त्यसकै पक्षमा श्रद्धा गरी अर्को पक्षलाई त्यागने र त्यसो नगरेमा राजाबाट दण्ड दिइनेछ भन्ने प्रतिज्ञा गरेपछि शास्त्रार्थ भयो। आचार्य कमलशीलको पक्षमा बस्नेहरूमा भारतको मत मान्ने व्यक्ति र मन्त्री 'गोये' आदि थोरै व्यक्तिहरू थिए भने चीनका उपाध्यायको पक्षमा बस्नेहरू रानी 'ढोसा झ्याङ्छुब्' र 'सीमाल्वा च्यो मामा' आदि थुप्रै व्यक्तिहरू थिए। त्यसवेला कमलशीलले चीनको धर्ममत कस्तो हो

---

[७८] शान्तरक्षित, उहाँका शिष्यद्वय कमलशील र ज्ञानेन्द्र सबै भारतको नालन्दा महाविहारका आचार्यहरू हुनुहुन्छ। शान्तरक्षितले 'तत्वसंग्रह' रच्नुभयो भने कमलशीलले 'भावनाक्रम' भन्ने महायान विपश्यनाविधिको शास्त्र रच्नुभयो।

[७९] तिब्बतको सबभन्दा पहिलो बौद्धविहार (गुम्बा)।

भनी सोध्दा चीनपक्षले भन्यो, "तिम्रो धर्ममतमा शरणगमन र चित्त उत्पाददेखि लिएर वाँदर रुखको टुप्पामा चढेको जस्तो तलदेखि चढ्ने हो। हाम्रो धर्ममतमा यस्तो क्रिया कार्यको धर्मले बोधि प्राप्त नहुने भएकाले निर्विकल्प भावना गरेर भएको चित्तबोधले मात्र वोधिलाभ हुन्छ भन्ने मान्छौं। जस्तै : गरुड आकाशबाट रुखमा ओर्लेको झैं माथिवाट ओर्लने भएकोले 'शुक्लैकपर्याप्त (कार्पो चिग् थुव्) हो"। त्यसो भनेपछि आचार्यले उपमा र अर्थ दुवै नमिल्ने देखेर "पहिले उपमा लागू भएन, किनकि त्यो गरुड आकाशवाट अचानक रूपमा पखेटा आदिले पूर्ण भएर रुखको टुप्पामा ओर्लेको हो कि चट्टान आदिमा क्रमशः पखेटाको विकास हुँदै पूर्ण भए पछि उडेर तल ओर्लेको हो ? पहिलो त सम्भवै छैन। दोस्रो त क्रमशः हुने कुराको उपमा हुन जान्छ र एकैपटक हुने कुरामा लागू हुँदैन " भन्नुभयो। त्यसको उत्तर चीनका उपाध्यायले दिन सकेनन्। त्यसमा आचार्य कमलशीलले "तिम्रो उपमामात्र बिग्रिएको नभएर अर्थमा पनि भ्रान्ति भएको छ। त्यो निर्विकल्प भावना एकपक्षीय विकल्पलाई रोकेर मात्र हुन्छ कि सवै विकल्पहरूलाई रोक्नुपर्छ ? एकपक्षीय मात्र रोक्ने हो भन्छौ भने निद्रा र बेहोशको अवस्था पनि निर्विकल्प भावना हुन जान्छ। किनकि त्यो वेलामा पनि एकपक्षको विकल्प रोकिएको हुन्छ।

यदि सबै विकल्पहरूलाई रोकेर मात्र निर्विकल्प हुन्छ भन्ने हो भने तिमीले निर्विकल्प भावना गर्दा निर्विकल्प भावना गर्नुपर्‍यो भन्ने विकल्प (विचार) पहिले हुनुपर्छ कि पर्दैन ? यदि पर्दैन भने त्रिधातुका सबै सत्वहरूलाई स्वतः नै निर्विकल्प भावना उत्पन्न हुन जान्छ किनकि 'भावना गर्छु' भन्ने न सोचेरै पनि आफैं निर्विकल्पभावना उत्पन्न हुने रहेछ। निर्विकल्प भावना गर्नुपर्‍यो भन्ने विकल्प पहिले

गरियो भने त्यही नै विकल्प हुनाले निर्विकल्प भावनाको प्रतिज्ञा बिग्रिन्छ। जस्तै 'नकराऊ' भन्दा कराएको जस्तो हुने भयो[८०]।"

यस्ता प्रकारका आगम र युक्तिले दोष देखाई खण्डन गर्दा चीनका उपाध्यायमा प्रतिभान (बल) भएन। अनि राजाले उनलाई भने "तपाईंसँग उत्तर छ भने दिनुहोस्"। उपाध्यायले भने, "टाउकामा चट्याङ् हाने जस्तो भयो, त्यसैले उत्तर दिन सकिन"। राजाले भने, "त्यसो भए आचार्यलाई फूलको माला चढाई क्षमा मागेर 'शुक्लैकपर्याप्त' (कार्पो चिग् थुब्) मतलाई त्यागी आगम र युक्तिसँग विरोध नहुने भारतको धर्ममत अनुसार गर्नुहोस्। अबदेखि जसले यो 'शुक्लैकपर्याप्त' मत मान्छ त्यसलाई सजायँ दिइनेछ"। यसरी उनले भोटप्रान्तको लागि नियम बनाएर चिनियाँ मतका सबै शास्त्रहरूलाई संकलन गरेर साम्ये विहारको निधिमा लुकाई छाडे। चीनका उपाध्याय चिन्तित हुँदै त्यहाँबाट आफ्नो स्थानमा गए। त्यो धर्मसभामा आफ्नो जुत्ता छुटेछ। त्यसैबाट अनुमान गरी 'बुद्धको शासनको विनाश हुने वेलामा मेरो शासन जुत्ता जति बाँकी रहने छ' भनी आफ्ना चेलाहरूलाई भविष्यवाणी गरे रे भन्ने ख्याति छ।

पछाडिका विद्वान् कल्याणमित्रहरूको भनाई यस्तो छ - चीनका उपाध्यायले धर्म नजाने पनि केही लक्षणहरू (शकुन) थाहा पाउँथे। अहिलेकाले धर्मको मूललाई छोडेर 'चित्तलाई चिने बुद्ध भइहालिन्छ' भन्न थालेकाले यो मतलाई 'शुक्लैकपर्याप्त' (कार्पो चिग् थुब्) हो भनिएको हो।

---

८० संयुत्त निकाय, अङ्गुत्तर निकाय तथा आगमहरूमा पनि भगवान्ले यो धर्ममा एकै पटक मुक्त होइदैन र क्रमशः नै जानुपर्छ भन्ने कुरा बताउनुभएको छ।

'का छेम्' भन्ने अर्को किताब अनुसार त्यो जुत्ता छोड्नेचाहिँ त्यही उपाध्याय नभएर अर्कै 'हाम्याङ्[८१]' हुन् र आफू चीनमा जाने वेला मनको आशा टुटेकोले जुत्ता छुट्न गएछ र त्यस्तो भनेका हुन् भन्ने लेखेको पाइन्छ।

त्यहाँ चीनका उपाध्यायले पश्चिमतिर सुखावतीपट्टि फर्की आफ्नो टाउकोमा आगो लगाएर वितेका थिए र 'सिमाल्वा च्यो मामा' आफ्नो छाती पिटेर आत्महत्या गरेका थिए भन्ने जस्ता कुराहरू धेरै पाइन्छन् जुन यहाँ विस्तार भयले लेखिएको छैन। ग्याल्से, वासे, वासे भन्ने पुस्तकहरूमा हेर्नू।

(ख) त्यसको अनुसरण गर्ने पछिको मतको खण्डन: -

आजभोलि कसैले यस्तो भन्छन्, 'तीनओटा बिगार्ने कुरा र चारओटा छुट्ने कुरालाई त्यागेर आदिशुद्ध अवस्थामै भावना गर। ब्राह्मणले धागो वाटे झैं मनलाई जस्ताको तस्तै छोडिदेऊ'। यसको अर्थ के हो भने महामुद्रा बिग्रिने तीन कुरामा हुनसक्छ - निर्विकल्पमा (अविकल्प), सुखमा र प्रकाश (स्पष्टता) मा। ती मध्ये सुखमा भ्रान्ति भएमा (बिग्रिएमा) कामधातु देवलोकमा जन्मिन्छन्, प्रकाश (स्पष्टता) मा बिग्रिएमा रूप धातुमा जन्मिन्छन्। निर्विकल्प (अविकल्प) मा बिग्रिएमा अरूप धातुमा जन्मिन्छन् अर्थात् यस्ता कठिन अवस्थामा परिन्छ।

त्यस्तै चारओटा छुट्ने कुराहरूमा महामुद्राको स्वभाव छुट्नु, भावना छुट्नु, मार्ग छुट्नु र मुद्रा (छाप) छुट्नु हुन्। यिनीहरूलाई त्यागेर ब्राह्मणले जनैको धागो काते जस्तै बनावटी नगरेर विस्तारै हलुका र खुकुलो राख्नुपर्छ"। यो त

---

[८१] 'ह्वा साङ्' भनेको चाइनीज भाषामा भिक्षुलाई सम्वोधन गर्ने शब्द हो ('भन्ते' भनेजस्तै)। त्यसैले तिव्वती परम्परामा त्यो पक्षको मतलाई नै 'होसाङ् या 'हासाङ्' मत भनिने गरेको पाइन्छ।

चीनको शुक्लैकपर्याप्त (कार्पो चिग् थुब्) भन्ने मतको पछि लागेको मात्र हो। बुद्धले बताएको महामुद्रा होइन। किनकि त्यस्तो खालको महामुद्रा सूत्रवर्ग, विनय र अभिधर्म तीनवटैमा कहीं पनि सामान्य रूपमा त बताइएकै छैन र विशेष रूपमा पनि यस्तो खालको महामुद्रा कहीं बताइएको पाइदैंन। चार तन्त्रहरूमा भने धर्ममुद्रा, कर्ममुद्रा, समयमुद्रा र महामुद्रा भनेर बताइएको भेटिन्छ। त्यहाँको मत यस्तो छैन। नागार्जुनको मुद्राचतुष्टयम् मा यस्तो भनिएको छ -

"कर्ममुद्रा न बुझेकाहरूले धर्ममुद्रा बुझ्न सक्दैनन् र महामुद्रा को त नाम समेत पनि बुझ्न सक्दैनन्।" त्यसैगरी तन्त्र र शास्त्रहरूमा पनि त्यस्तो खालको महामुद्राको प्रतिषेध[८२] गरिएको छ। त्यसको आगमचाहिँ गुह्यमन्त्र भएकोले यहाँ लेखिदैन। यदि 'सूत्र, तन्त्र र शास्त्रहरूमा न बताएको भए पनि अभ्यास गर्नाले के बिग्रिन्छ र ?' भन्ने हो भने सूत्र र तन्त्रसँग त विरोध भैहाल्छ भने युक्तिसंगत पनि देखिदैन। किनकि तीनओटा बिग्रिएर देवलोकमा जन्मिनुभन्दा पनि अक्षण देवलोकमा जन्मिनु झन् ठूलो भूल हुनजान्छ। किनकि आठ अक्षण स्थानमा जन्म नहोस् भनेर सबै सूत्र र तन्त्रमा प्रणिधान गरिएको पाइन्छ।

जडबुद्धिले जुन भावना गर्छ, जडताको कारणले गर्दा जडता नै प्राप्त हुन्छ। अतः मतिलाई नसुधारेर उही

---

८२ पहिले मैत्रीपा, मार्पा, मिलारेपा आदिले तन्त्रको सम्पन्नक्रम, चण्डाली आदि पूरा नगरी 'महामुद्रा' उपदेश दिने चलन थिएन। गम्पोपाले पनि ६ महिनासम्म चण्डाली नगराउँदै दिनु हुन्नथ्यो। तर त्यसपछि साक्या पण्डितको पालामा आएर ती उपाय पक्षहरू नभएर पनि सिधै महामुद्राका उपदेशहरू दिन थालिएकोले यो खण्डन गर्नुभएको हो र यसबाट पछि काग्यु परम्परामा त्यस्तो चलनमा सुधार भएर गयो।

अवस्थामा रहिराख्ने तारिकालाई जडको भावना भनेर बताइएको भेटिन्छ। यो त चीनको उपाध्यायको शुक्लैकपर्याप्त (कार्पो चिग् थुव्) भन्ने मतसँग केही फरक भएन। अझ बोधि लाभ गर्नको लागि त आठ अक्षण स्थानभन्दा पनि श्रावक र प्रत्येक वुद्धहरू ठूला वाधा हुन्। किनकि नरकमा जानाले सधैंको लागि वुद्धतामा वाधा हुँदैन परन्तु श्रावक र प्रत्येकवुद्ध हुनु त सधैं वोधिलाभको लागि वाधा हुन पुग्छ। त्यही भएर नामसंगीतिको, अनुशंसामा यस्तो भनिएको छ "श्रावक र प्रत्येकवुद्धको निश्चयमा कहिल्यै प्रवेश गर्न नपरोस्।" त्यस्तै जिनमाताामा (प्रज्ञापारमितामा) "श्रावक र प्रत्येकवुद्धको भूमि वुझ्नु पर्छ, मार्ग बुझ्नु पर्छ, फल बुझ्नु पर्छ, वुझेर त्याग्नु पर्छ" भनिएको छ। सञ्चयगाथामा पनि यस्तो भनिएको छ, "यदि करौडौं कल्पसम्म दश कुशल कर्मको आचरण गरेर पनि श्रावक र प्रत्येकबुद्धको भूमिमा चित्त उत्पाद भयो भने त्यो दुःशील हुनजान्छ र शीलको विनाश हुनजान्छ। त्यो चित्त उत्पाद त पाराजिक विपत्तिभन्दा पनि अतिभार वन्न जान्छ।" त्यस्तै आर्यरत्नकूट सूत्रमा यस्तो भनिएको छ "आफूले धर्म सुनाएर ५०० भिक्षुहरू अर्हत् भएको र त्योभन्दा पहिले आर्य मञ्जुश्रीले गम्भीर धर्म वताएर त्यस्तै भिक्षुहरूले श्रद्धा नगर्नाले नरकमा खसेको देखी सारिपुत्रले मञ्जुश्रीलाई भने, 'तिमीले भयानक दुष्कर्म गर्‍यौ' मञ्जुश्रीले भन्नुभयो, 'हो, शारिपुत्र मैले भयानक कर्म गरें। भगवान्लाई सारिपुत्रले विन्ती चढाए 'मञ्जुश्रीले भयानक कर्म गरे।' भगवान्ले सोध्नुभयो, 'के गरे?' उनले भने 'मैले धर्म सुनाउँदा ५०० भिक्षुहरू अर्हत् भए परन्तु मञ्जुश्रीले धर्म सुनाउँदा त तिनीहरू जल्दाजल्दैको नरकमा खसे।' अनि भगवान्ले भन्नुभयो, "सारिपुत्र तिमीले धर्म सुनाएर

**तिनीहरू अर्हत् भएतापनि कहिल्यै सम्बोधिको भागी छैनन् । मञ्जुश्रीले धर्म सुनाउँदा अहिले नर्कमा परे पनि त्यहाँबाट मुक्त भएपछि तुरुन्तै अभिसम्बोधि प्राप्त गर्नेछन् ।** त्यसैले **मञ्जुश्री नै उपाय कुशल** हुन्" आदि विस्तारमा भनिएको छ । त्यसकारण श्रावक र प्रत्येकवुद्ध पनि ठूलै बिग्रिने स्थान[८३] हुन् त्यसैले सूत्र, तन्त्र र शास्त्रहरू सबैमा तिनीहरूलाई प्रतिषेध गरिएको छ ।

चारओटा छुट्ने कुरा भन्दा पनि ठूलो खतरा त जडको भावनामा पर्नु र शमथमा फँस्नु हो । त्यसो भयो भने उपायकुशलता, भूमि, मार्ग र फलभित्र त्रिकाय, पाँच ज्ञान, दश वल, चार वैशारद्य, चार प्रतिसंविद् आदिदेखि लिएर सर्वज्ञतासम्मका साधारण र असाधारण सबै गुणहरू प्राप्त गर्नमा वाधा हुन जान्छ । केही गरी तथतामा चित्त एकाग्र रहनवाट बुद्धको अधिष्ठान आदिद्वारा रोकियो र उपायकौशलमा जोड दिन थालियो भने पनि विग्रिएको वस्तुलाई फेरि सपार्न धेरै समय लागे झैं यहाँ पनि बोधि प्राप्त हुनलाई धेरै समय लाग्ने हुन्छ । सूत्रालंकारमा भनिएको छ -

**निर्वाणाभिरतत्वाच्च तौ धन्धगतिकौ मतौ ।**
**पुनःपुनः स्वचित्तस्य समुदाचारयोगतः ।।**

"सधैं ती दुईमा वारम्वार स्वार्थको मन हुने हुँदा निर्वाणमा अति प्रेम हुने भएकाले ती मन्दबोध हुन् भन्ने मानिन्छ ।"

व्राह्मणले धागो वटारेको भन्ने दृष्टान्त यहाँ लागू हुँदैन किनकि धागो कात्नको लागि ऊनलाई धुलाई गर्ने

---

८३ यहाँ श्रावक, प्रत्येकवुद्ध र शमथमा फँस्ने कुरालाई प्रतिषेध गरिएको सम्यक् सम्वुद्धतालाई लक्ष्य वनाएर अभ्यास गर्नेहरूको सन्दर्भवाट हेरेर मात्र भनिएको हो । ती स्वयं नै रद्दी भनेको होइन ।

आदि काम र खुकुलो भए कस्नु, कसिएमा खुकुलो पार्नु, मोटो, मसिनो, गाँठो आदिले रहित वनाउनु जस्ता काम चाहिन्छ। त्यसो नगरेमा राम्रो धागो वन्ने सम्भावना हुँदैन। त्यसकारण नमिलाएर त्यसै राखेमा ऊनको थुप्रो वाहेक अरू केही हुँदैन। त्यस्तै महामुद्रा पनि सुधार नगरेर त्यसै राख्ने हो भने गुरुको उपदेश किन चाहियो ? तीनओटा बिग्रने (झुक्किने) कुरा र चारओटा छुट्ने कुरालाई छोडेर सोझो भावना गर्नु भन्दा अर्को सुधार गर्न के वाँकी रह्यो त ? अतः उपमा र अर्थ उल्टो पर्न गएकोले यो त चीनको उपाध्यायको गरुडको दृष्टान्त झैं विचार गर्न नसक्ने मूर्खलाई खुसी पारेको मात्र हो।

(ग) अहिले ख्यातिप्राप्त भएका निराकारवादी चित्तमात्रीको भावनालाई महामुद्रा मान्ने मतको खण्डन[८४] -

आचार्य शान्तिपादको 'चित्तमात्रालंकार' र 'उपदेश' भन्ने शास्त्रमा बताइएका एकाग्र, निष्प्रपञ्च, एकरस र अभावना भन्ने चार कुरा नै निराकारवादी चित्तमात्रीहरूको ध्यान हो। माध्यमिकदेखि माथि यो प्रख्यात छैन। यदि यसमा रुचि छ भने शान्तिपादको ग्रन्थमा नै हेर्नुपर्दछ।

आजभोलि केही भोटियाहरूको मतमा चार योग, पाँचमार्गलाई दशभूमिमा टाँसेर महामुद्राको ध्यान गरेको देखिन्छ। यो मिल्दैन त्यसको कारण के हो भने महामुद्रा भनेको गुह्यमन्त्रको अभिषेक र दुई क्रमले युक्त ध्यानको विशेषता हो। तर माथिको चाहिं त्यस्तो होइन। तन्त्रहरूमा पनि यस्तो बताइएको हुन्छ - "भित्री प्रतीत्यसमुत्पादको

---

८४ महामुद्रा भनेको शुद्धरूपमा तान्त्रिक विधिको चतुर्थाभिषेकमा दिइने उपदेश भएकोले सूत्रपद्धतिको उपदेश होइन। अतः निराकारवादी चित्तमात्रीको सूत्रउपदेशलाई नै महामुद्रा भन्न थालिएकोले यो खण्डन गरिएको हो।

भूमि र मार्ग आश्चर्यजनक छ।" यस्तो पाइन्छ तर यी चार योगलाई भूमि र मार्ग भनेर कहीँ पनि नबताइएकोले आँफैले बनाएका पद्धति हुन्। महामुद्रा मान्ने उनीहरूको आफ्नै मत पनि योसँग विरोध हुन्छ। जस्तैः- "...... महामुद्रामा भूमि मार्गको गणना गर्ने जडमूर्खहरू भ्रान्तिमा परेका छन् ...... ।" भनेर बताइने भएकोले महामुद्रामा भूमि मार्ग मानिँदैन भन्ने भनाइसँग पनि विरोध हुन्छ।

(घ) प्रज्ञापारमिताभास (आभासित प्रज्ञापारमिता)लाई नै महामुद्रा मान्नेहरूको मतको खण्डन -

कसैको मतमा प्रज्ञापारमितामा "सबै धर्महरू आकाश समान छन् भनेर धर्म सुनाउँछन् ......" भन्ने बताइएको आधार लिएर महामुद्रालाई तीन प्रकारले चिनाउने गरिन्छः १. सबै धर्महरू चित्त हुन् भनी बुझाउने (चिनाउने), २ चित्त आकाशजस्तो हो भनी चिनाउने, ३. आकाश शून्यता हो भनी चिनाउने। अझै कोही व्यक्तिको मतमा "कुनै पनि कुरा नसम्झेर (मनलाई जेको त्यही राखी) रहनु बुद्धानुस्मृति गरेको हो।" भन्ने कुरालाई आधार लिएर कुनै कुरा नसम्झेर निर्विकल्प रहनु महामुद्रा हो भन्ने मान्छन्। अझ कसैले "चित्तचाहिँ चित्त (को स्वभाव) होइन, चित्तको स्वभाव त प्रभास्वर[८५] हो" भने अनुसार महामुद्रा भावना गर्ने गर्छन्। यस्ता महामुद्राका विभिन्न प्रकारहरू थुप्रै छन् भन्ने ख्याति छ। ती सबैजसोमा ध्यान गर्न नजानेमा पारमिताको छायाँजस्तो मात्र हुनजान्छ भने, भावना गर्न जानेमा पनि त्यो तन्त्रको महामुद्रा नभएर पारमिताकै ध्यान हुन्छ।

---

[८५] "पभस्सरमिदं भिक्खवे चित्तं....."
(अंगुत्तर निकाय १/६)

यदि यसलाई रुचिपूर्वक भावना गर्न चाहने हो भने "शीलमा रही श्रुत, चिन्तित हुँदै भावना गर्नु" भन्ने अनुसार शीलको आधारमा वसेर श्रुतमयी प्रज्ञारूपी सागरले मनलाई पखाल्नु, युक्तिद्वारा चिन्तामयी प्रज्ञाले श्रुत (सुनेको) को अर्थलाई भ्रान्त हो कि अभ्रान्त हो भन्ने केलाएर स्पष्ट पारी अभ्रान्त अर्थलाई पारमिताको संग्रह ग्रन्थमा वताए अनुसार प्रयोग, मौल र पृष्ठले समाहित गरी भावना गर्नु पर्छ। परन्तु यसलाई तन्त्रको महामुद्रा बनाएर भावना गर्नु कदापि हुदैन ।

अतः **सम्बोधि प्राप्तिको लागि करुणारूपी** धनुष, **प्रज्ञारूपी बाण** र धनुर्विद्यामा निपुण **धनुर्धर** जस्तो **उपायकौशल** यी तीन कुराहरू सँगै हुनुपर्छ भनेर आचार्य चन्द्रगोमीले बताउनुभएको छ - "भगवान्ले अति कुशलताले करुणाको धनुधारण गरी ...।" त्यस्तै आर्य धर्मसञ्चयसूत्रमा बताइएको छ - "लोकेश्वरले भन्नुभयो, हे भगवन्, बोधिसत्वले धेरै धर्म अभ्यास गर्नु पर्दैन। बोधिसत्वले एउटै धर्मलाई राम्रोसँग ग्रहण गरी बोध गरेमा बुद्धका सबै धर्महरू उसको हत्केलामा आउँछन्। त्यो एउटा धर्म के हो भने महाकरुणा हो।" प्रमाणवार्तिकमा भनिएको छ, "साधनं करुणाभ्यासात् सा...." "करुणा भावनाको साधना गरेर ....।" मध्यमकावतारमा भनिएको छ, "श्रावक, प्रत्येकबुद्धहरूलाई मुनीन्द्रले जन्माउँछन् बुद्धलाई बोधिसत्वले जन्माउँछन्,[८९] भने बोधिसत्वका हेतुहरू करुणा चित्त, अद्वयज्ञान र बोधिचित्त नै हुन्।" त्यस्तै सूत्र, तन्त्र र शास्त्र सबैमा करुणा र बोधिचित्तको अनुशंसा, प्रशंसा गरे अनुसार पनि बुझ्नुपर्छ।

---

[८९] वोधिसत्व हेतु र बुद्ध फल जस्तो भएको हुनाले वोधिसत्वले बुद्धलाई जन्माउँछन् भनिएको हो ।

प्रज्ञारूपी बाण चाहिन्छ भन्ने कुरा विशिष्टस्तवमा देखिन्छ "महादेव रिसाएर एउटै बाणले त्रिपुर भस्म गरे भनिन्छ भने तिम्रो एउटै ज्ञानको बाणले क्लेशलाई अनुशयसहित भस्म पाऱ्यो।" संचयगाथामा भनिएको छ, "प्रज्ञाले सम्पूर्ण धर्मदेशना गर्नुभयो।" बोधिचर्यावतारमा भनिएको छ,

**"इमं परिकरं सर्व प्रज्ञार्थं हि मुनिर्जगौ**

**तस्मादुत्पादयेत् प्रज्ञां दुःखनिवृत्तिकांक्षया ॥**

'यी कुरा मुनिले सारा प्रज्ञाकै निम्ति भन्नुभो

अतः उत्पत्ति प्रज्ञाको गर्नू दुःख हटाउन ॥'

प्रमाणवार्तिकमा भनिएको छ - "मुक्तिस्तु शून्यतादृष्टेस्तदर्थाः शेषभावनाः" "शून्यताको दृष्टिले मात्र तरिन्छ र बाँकी भावनाहरू त्यसैका लागि हुन्।" यस्ता विस्तारमा बताइए अनुसार बुझ्नु पर्छ। त्यसकारण धनुष र बाँणको सम्बन्ध गराए जस्तै शून्यता र करुणाको युगनद्ध हुनु आवश्यक हुन्छ। शिक्षासमुच्चयमा भनिएको छ "शून्यता र करुणाको सार उत्पन्न गर्दा पुण्य शुद्ध हुन्छ।" आचार्य सरहपादले पनि "करुणालाई त्यागेर शून्यताले मात्र पनि उत्तम मार्ग प्राप्त हुँदैन भने करुणामात्र भावना गरेर यो संसार मोक्ष पाउला र ?" (पाउँदैन, शून्यता र करुणा युगनद्ध रूपमै हुनुपर्छ।) प्रमाणवार्तिकमा भनिएको छ -

**"दयया श्रेय आचष्टे ज्ञानात् सत्यं ससाधनम् ॥**

**तच्चाभियोगवान् वक्तुं यतस्तस्मात् प्रमाणता ॥**

शून्यता र करुणा विरोधजस्तो देखिन गए पनि विरोध नभएर अभ्यास गर्नको लागि उपाय कुशलताको आवश्यकता पर्छ। प्रमाणवार्तिकमा भनिएको छ -

**"उपायाभ्यास एवायं तादर्थ्याच्छासनं मतम् ॥**

**बहुशो बहुधोपायं कालेन बहुनास्य च ॥**

**गच्छन्त्यभ्यस्यतस्तत्र गुणदोषाः प्रकाशताम् ।**
**बुद्धेश्च पाटवाद्धेतोर्वासनाऽतः प्रहीयते ॥**
**परार्थवृत्तैः खड्गादेर्विशेषोऽयं महामुनेः ॥**

वैरोचनाभिसम्बोधिमा "महान् वीरले उपायरहित[८७] ज्ञान र शिक्षाहरू बताएको त श्रावकहरूलाई त्यसमा प्रवेश गराउनको लागि हो । त्रिकालकै बुद्धहरूको प्रज्ञा र उपाय सहित भई अनुत्तरयानमा अभ्यास गरेर त्यो असंस्कृत (बोधि) लाई प्राप्त गर्दछन्" भनेको हुनाले उपाय र प्रज्ञालाई मिलाएर अभ्यास गर्नाले पुण्य र ज्ञानसम्भार पूर्ण भई बोधिप्राप्ति हुन्छ । दुइटै सम्भार पूर्ण नभएमा चित्तको स्वभावलाई यथावत् चिन्न सकिँदैन । सञ्चयगाथामा भनिएको छ "जबसम्म दुई सम्भार पूर्ण हुँदैनन् तबसम्म परमशून्यता साक्षात् हुँदैन ।" त्यसैकारणले संवृतिबोध गर्नाले सबै ज्ञेयलाई जानेर अरूको हित सुसम्पन्न हुनेछ । नजान्ने हो भने अरूको हितको त कुरै छोडौं, आफ्नै हित पनि गर्न सकिँदैन, आर्यको धर्मको त कुरै छोडौं, मानिसको धर्म पनि जानिँदैन । जस्तै : इनार बोलाउने कथामा त्यो बुझिन्छ-

उहिल्यै एउटा राजाले एउटा धनी ब्राह्मणमाथि दमन गरेर सम्पत्ति लुट्ने इच्छाले इनार माग्यो । ब्राह्मण डराएर अरू सम्पत्ति दिएर भुक्याउन खोज्यो । त्यतिखेर उनकी प्रज्ञावती छोरीले म आफै गएर त्यो अर्थ सिद्ध गर्छु भनिन् र राजाकहाँ गएर यस्तो भनिन् "सम्पत्तिले सम्पत्तिलाई तान्छ, हात्तीले हात्तीलाई तान्छ । त्यसकारण हजूरले पनि इनारलाई लिन इनार नै पठाउनु पर्छ र मात्र ईनार आउँछ" त्यो सुनी

---

[८७] यहाँ उपाय भनेको बुद्धता प्राप्त गराउने महायानीय उपायहरूलाई भनेको हो । नत्र सामान्य उपायहरू त श्रावकयानमा पनि नभएका होइनन् ।

राजा खुसी भएर ती ब्राह्मणपुत्रीलाई धेरै पुरस्कार दिए रे भन्ने ख्याति छ।[८८]

त्यस्तै जडले आफ्नो र अरूको काम गर्न प्रयास गरेर पनि गर्न सक्दैन भने विद्वान्ले आफ्नो र अरूको महान् कार्य पनि गर्न खोजेमा गर्न समर्थ हुन्छ। चित्तबोध भयो भने बुद्ध भइने भएकोले अरू कुरामा बुद्ध न खोज्ने चेतनाको भावना गर्नु पर्छ आदि भनिएको हुन्छ। अनि त बुद्धत्वको लाभ गर्न अरू गुण किन चाहिन्छ त ? भन्ने प्रश्न उठ्न सक्छ। यस्तो भनेको अभिप्राय सांख्यवादीहरूलाई अवतरण गराउनको लागि हो। सांख्यकै शास्त्रमा यस्तो भनिएको छ "विशुद्ध दिव्यचक्षु सिद्ध गरेर चिद्आत्मालाई साक्षात्कार गर्नुपर्छ। जसले पुरुष आत्मालाई चिन्छ ऊ जस्तो रूप धारण गरे पनि मुक्त हुन्छ"[८९]। यस्ता मत राख्नेलाई तान्नको लागि हो। यसको अभिप्रायको आधारचाहिँ धर्मकाय हो र त्यसको आवश्यकता चाहिँ ती सांख्यहरूको मतअनुसार हृदयको केन्द्रमा सर्वज्ञ पुरुष स्वयं विद्यमान छ भन्नेहरूलाई अवतरण गराउनु हो। साक्षात् त्यही नै भनेको हो भन्दा विरोध हुन्छ, किनकि "यदि हेतुमा फल छ भन्ने हो भने त भोजन गर्दा मल खानुपर्छ" भन्नेदेखि लिएर "(तथता) बुझ्ने लोकहरूले किन देख्दैनन् त" भन्नेसम्मका बोधिचर्यावतारका युक्ति र अरू पनि सांख्यलाई प्रतिषेध गर्ने युक्ति, प्रमाणवार्तिकमा बताइएका युक्ति आदिसँग त्यसको विरोध हुन्छ। तीनकाय आदिको सबै व्यवस्था पनि यो सांख्यमतमा सिद्ध हुँदैन। अझै अरू उपमाबाट पनि बुझिन्छ। जस्तै :- धागोको बत्ती बाल भन्दा तेल र दियो नभए त

---

८८ एउटा जातक कथा पालीमा पनि पाइन्छ।

८९ सद्योवेदान्तीहरूको मान्यता पनि यस्तै खालको हो।

बत्ती बाल्न सकिंदैन। त्यस्तै 'वाँणले शत्रुको वध गर' भने पनि धनुष र मानिस छैन भने व्यर्थ हुन्छ। 'वीउवाट अनाज फल्छ भने पनि खेतमा मल, जल आदि नभएमा अनाज फल्न सम्भव हुँदैन। 'खेतमा अन्न फल्यो' भने पनि डाँठ आदि पूर्ण भएर झुप्पा झुप्पा भयो भने पो अनाज फलेको ठहर्छ, त्यो पूरा नभएमा त अनाज फलेन भनेकै सरह हुन्छ। त्यस्तै "चित्तलाई चिन्यो भने वोधि प्राप्त हुन्छ" भनेको भए पनि पुण्य र ज्ञान पूर्ण नभएमा बोधि प्राप्त हुँदैन। त्यसमा पनि आधार स्वरूप श्रद्धा र शीलमा आश्रित भएर पनि मार्ग स्वरूप पारमितामा या गुह्यमन्त्रको उपायकौशलमा आश्रित नभएर कोरा शून्यताको ज्ञानको लागि मात्र प्रयत्न गरिराख्ने हो भने श्रावकको निरोधमा खसिन्छ। त्योभन्दा पनि श्रद्धा र शील चाहिं कमजोर भई काय र वाक्‌ले थुप्रै पाप नगरेर सकेको कुशल पुण्य कमाई कामराग र रूपरागको विकल्पलाई त्यागेर सवै धर्म शून्य आकाशजस्तै हुन् भन्ने वुझ्‌ने हो भने आकाशानन्त्यायतन देवलोकमा जन्मिनु पर्ने हुन्छ। त्यस्तै गरी सवै धर्म चित्त हुन् भन्ने बुझेको हो भने विज्ञानानन्त्यायतनमा जन्मिनु पर्ने हुन्छ। त्यस्तै गरी केही पनि छैन भन्ने वुझेमा आकिञ्चन्यायतनमा जन्मिन्छन्। त्यस्तैगरी सवै धर्म छ पनि हैन छैन पनि हैन भन्ने वोध भएको रहेछ भने नैवसंज्ञानासंज्ञायतनमा जन्म हुन्छ[९०]।

यसप्रकार पुद्‌गल नैरात्म्य र धर्मनैरात्म्यको वोध नगरीकनै त्यस्तो शून्यता भावना गऱ्यो र बोध गऱ्यो भने

---

९० अनन्त आकाशजस्तो ब्रह्म चिद्‌घन या विज्ञाघन ब्रह्म, निर्गुण निराकार निरञ्जन खालको ब्रह्म, भावाभाव दुवै हैन भन्ने जस्तो योगवासिष्ठमा बताइने ब्रह्म यिनै चार अरूप धातुका अवस्थामा पर्दछन्।

अरूप धातुमा जन्म हुन्छ। बोधिलाभ त परै जाओस्, अर्हत फल पनि पाउन सक्दैनन्। त्यसो हुनाले थोरै पुण्य गरेर रूपरागबाट अलग हुन नसकी अनिर्वचनीयताको भावना गर्दै मैले धर्मबोध गरिसकें भन्दै अभिमानी भई सम्यक् धर्ममा अभिरुचि नगर्ने व्यक्तिहरू 'असंज्ञिसत्व' भनिने दीर्घायुदेवताको रूपमा प्रख्यात भएको अक्षण स्थानमा जन्मिने छन् ।[११] त्यो भन्दा पनि अलि कमजोर पुण्य भई कामरागबाट पनि मुक्त नभएर केही पनि नसम्झेर 'अनिर्वचनीयता' को भावना गर्नेहरू म्लेच्छ र मूक (लाटो) भनिने अक्षण स्थानमा जन्मिनेछन्। मतिसागरपरिपृच्छा सूत्रमा यस्तो भनिएको छ–

"बोधिसत्वले चार ध्यान, चार अरूप समापत्तिको उत्पत्ति गराई सिद्ध पनि गरेर, त्यस्तो शान्त शमथमा रही, सत्व परिपाक गर्नेलाई निन्दा गर्छन्, धर्मदेशना गर्नेलाई निन्दा गर्छन्, सत्वहरूसँग मिलेर बसेकालाई निन्दा गर्छन्, पुण्यसंस्कारलाई निन्दा गर्छन्, र अचल संस्कारको स्वाद लिएर एक्लोपनमा रमाई कामधातु र रूपधातुमा दोष देखेर अरूपधातुको स्वाद लिन्छन्। त्यसले गर्दा मन्दकायको कारणले अरूप धातुमा[१२] जन्म लिई दीर्घायुदेवता जस्तै गरी रहन्छन्। त्यहाँ जन्मिनाले बुद्धको दर्शन पनि हुँदैन,

---

[११] एक त यो भनाई त्यस्तो अभ्यासमा गहिरिएर समाधिस्थ हुनेहरूलाई भनेको हो। अलिअलि त्यस्तो अनिर्वचनीयको कल्पना गरेर रहनेलाई त वास्तवमा कुनै फल पनि हुँदैन। असज्ञिसत्व भनेको मूर्च्छित जस्तो संज्ञाविहीन अवस्थामा अनन्तकल्पसम्म कर्म नसकिउञ्जेल बिताउने रूपधातुको एक लोक हो।

[१२] यस्ता अरूपधातुहरूको आयु २० हजार महा कल्पदेखि ८० हजार महा कल्पसम्म हुने भएकोले ब्रह्मज्ञानीहरूले त्यो अवस्थालाई नित्य, शाश्वत ठानेर त्यहाँ भुलेका हुन्छन्।

धर्मश्रवण गर्न पनि पाउँदैनन्, संघको सत्कार गर्न पनि पाउँदैनन्, सत्वपरिपाक गर्न पनि पाउँदैनन्, सद्धर्म ग्रहण गर्न पनि पाउँदैनन् र पुण्यसम्भार गर्नबाट वञ्चित हुन्छन्। उनीहरूका इन्द्रियहरू पनि जड भई मन्दस्वभावका हुन्छन्। अनि त्यहाँबाट च्युत भएर जुन जुन ठाउँमा जन्म लिन्छन् त्यहाँ त्यहाँ ती मन्दमति र तन्द्रालु एवं निन्द्रालु स्वभावका हुन्छन्। यो नै ध्यान मारको पाँचौं अंकुश[१३] हो। बोधिसत्वले प्रज्ञावान् मात्र भई पुण्यसंस्कारलाई निन्दा गर्ने, उपायहीन भएर दान, शील, क्षान्ति, वीर्य र ध्यानमा प्रयत्न नगरेर प्रज्ञापारमितालाई मात्र अति उत्तम हो भन्ने ठानी अरू पारमितालाई हीन सम्झी निष्प्रपञ्च र अनभिसंस्कार दुवैको रस भोग्नुचाहिँ प्रज्ञामारको छैठौं अंकुश हो।"

ज्ञानसिद्धिमा भनिएको छ "जडले जुन भावना गर्छ त्यसबाट जडताको कारणले जडत्व नै लाभ गर्छ।" त्यो भन्दा पनि कमजोर पन त चित्तलाई चिनाएर 'सबै धर्म शून्य' हुन् भनी उच्च पुण्यमा आशा पनि नगर्नु र नीच पापदेखि भयभीत पनि नहुनु, बोकाको पेटभित्र हात पसाउनु र बोराभित्र हात हाल्नुमा अन्तर नदेख्नु जस्तो धर्मग्रन्थ त्रिपिटकको अर्थबाट पिछडिन पुगी सद्धर्मदेशना गर्ने व्यक्तिलाई गिज्याउनु हो। अज्ञान र अभिमानद्वारा अलिअलि सानातिना दशअकुशल कर्म गरेमा पशुको जन्म हुन्छ, मध्यम खालका अकुशल कर्म गरेमा प्रेतको जन्म हुन्छ र कडा खालका अकुशल गरेमा नरकमा जन्म हुन्छ।

आचार्य नागार्जुनले रत्नावलीमा भन्नुहुन्छ "शून्यतामा दृष्टि दोष भएमा, मन्द प्रज्ञावान्लाई हानि हुन्छ। सर्पलाई

---

१३ गलत ध्यानले यसरी अरूपधातुमा र त्यहाँबाट मन्द इन्द्रिय र स्त्यान मिद्धले युक्त बनाई फँसाउने भएकोले ध्यानमारको अंकुश जस्तो भएको हो।

कुठाउँमा समात्दा र उल्टो विद्यामन्त्र सिद्ध गर्दा उस्तै हुन्छ। जिनहरूले सबै दृष्टिहरूलाई हटाउनको लागि नै शून्यता देशना गरेका हुन् र जसले शून्यतालाई पनि दृष्टि वनाउँछन् उनीहरू त असाध्य नै हुन्छन् भनेका छन्। 'छ' भन्नेहरू सुगतिमा जान्छन् भने 'छैन' भन्नेहरू दुर्गतिमा जान्छन्। सम्यक्, यथावत् र पूर्णरूपले बुझ्नेहरू दुवैमा आश्रित नभएका हुनाले मुक्त हुन्छन्।" इत्यादि। त्यस्तै काश्यपपरिपृच्छा सूत्रमा भनिएको छ, "सत्कायदृष्टि सुमेरु पर्वत जत्रै भए पनि त्यो त्याग्न सजिलो होला तर अभिमानसहित भएर जसको 'शून्यतादृष्टि' हुन्छ त्यो (त्याग्न) त्यति सजिलो हुँदैन"। त्यस्तै समाधिराजसूत्रमा यस्तो बताइएको छ "लोकहरूले शून्यता भावना गरे पनि सत्कायदृष्टिलाई त्याग्न सक्दैनन् र त्यसले फेरि पनि क्लेशहरूलाई उठाउँछ जस्तो कि 'उदक' ले ध्यान गरेको थियो।" उदकले १२ वर्षसम्म शून्यता ध्यानको समाधिमा वसेर अन्तमा मुसाको जन्म भएको दृष्टान्त छ। त्यसैमा अझै बताइएको छ कि "स्कन्धशून्यताको देशना गरे पनि सबैले अनात्मालाई (यथाभूत रूपमा) बुझेका हुँदैनन् र बुझेका छैनौ भनी अरूले विरोध गर्दा रीसले होच्याएर अप्रिय वचन बोल्दछन्।" अत: दुई अनात्माको बोध नै नगरी शून्यता भावना गर्नु भ्रान्ति हुनेछ र विद्वान्हरूले त्यो भ्रान्ति भयो भन्दाखेरि शून्यताभावना गर्नेहरू रिसाउँछन् भन्ने कुरा बताइएको हुन्छ।

कोही व्यक्तिहरू शुक्लैकपर्याप्त (कार्पो चिग् थुब्) भावना दोषपूर्ण छ तापनि हामीले प्रयोगमा शरणगमन गर्ने, चित्त उत्पाद गर्ने, इष्टदेव र गुरुयोगको भावना गर्ने र मौलमा महामुद्रामा चित्त लगाएर पृष्ठमा परिणामना गर्ने

गरेको हुँदा त्योभन्दा उत्तम हो भन्ने मान्छन्। त्यसो हो भने यसमा पनि विचार गरिन्छ।

पारमिताको भावना गरेमा ६ पारमिता, वोधिपक्ष आदि गम्भीर एवं वैपुल्य धर्महरूको अर्थ बुझ्नु पर्छ। श्रवण र चिन्तनद्वारा विषय र विषयीको नि:स्वभावको समारोपलाई काट्नको लागि पुद्गल नैरात्म्य र धर्म नैरात्म्यलाई राम्रोसँग बुझी त्रि-असंख्य कल्प आदिसम्म शिर, हात, पाउ इत्यादि दान गर्न सक्ने क्षमताको कवच लगाएर पाँच किसिमका मैत्रयले वताएका[९४] धर्मको मत अनुसार भावना गर्न जानेमा पारमिताको भावना त हुनेछ, तर माथिको तरिका त सूत्र र शास्त्र कहीं पनि नबताइएकोले पारमिताको भावना पनि ठहरिंदैन। यदि यो तन्त्रको महामुद्रा हो भन्ने हो भने पनि त्यो झन् ठहरिनै सक्दैन। किनकि तन्त्रमा त अभिषेक र दुई मार्गक्रमको[९५] समाधि महामुद्रा हुनुपर्छ। पहिले गुह्यमन्त्र परिपाक गराउने तन्त्रको अभिषेक नपाउँदै तन्त्रवर्गसँग मिल्दो मार्गको दुई क्रमको भावना गर्न जानिंदैन। त्यसैले दुई क्रमबाट आएको महामुद्राको अर्थवोध पनि हुँदैन। त्यसलाई दृढ पार्ने प्रपञ्च, निष्प्रपञ्च र अतिनिष्प्रपञ्चको चर्यालाई कसरी सिद्ध गर्ने भन्ने कुरा नबुझ्दै प्रतीत्यसमुत्पादको भूमि र मार्गमा पनि पुग्न नसकिने भएकोले त्यो तन्त्रमा बताइएको महामुद्रा पनि होइन। त्यस्तो खालको ध्यानले मात्र संसार र निर्वाणको दुई अन्तलाई रोक्न पनि सक्दैन। जस्तै एउटा सानो ढुङ्गाको पर्खालले गङ्गालाई रोक्न सक्दैन र गह्रौं ढुङ्गाको पर्खालले

---

[९४] मैत्रेयले बताएका पाँच धर्म (ग्रन्थ)हरू–
मध्यान्तविभागशास्त्र, उत्तरतन्त्र, धर्मधर्मताविभंग, महायानसूत्रालंकार, अभिसमयालंकार।

[९५] 'उत्पत्तिक्रम' र 'सम्पन्नक्रम' जुन तन्त्रका शमथ र विपश्यना हुन्।

रोक्न सक्छ, त्यस्तै संसार र निर्वाणको अन्तलाई रोक्नको लागि ६ पारमिता या तन्त्रको दुई मार्गक्रमको उत्तम पर्खालले मात्र रोक्न सक्छ ।

त्यसैले त्यस्तो खालको ध्यान जतिसुकै उत्तम भए तापनि पारमिता र तन्त्र कुनैमा पनि नबताइएकोले ती दुवै ध्यान साम्यक् होइनन् । जस्तै तीर्थिकको ध्यान जतिसुकै उच्चकोटिको भए पनि बुद्धमार्ग हुन सक्दैन, त्यस्तै श्रावकको ध्यान जतिसुकै उत्तम भए पनि महायान हुन सक्दैन ।

फेरि 'कार्य-कारण-धर्मबाट बोधि लाभ हुँदैन, त्यसैले केही पनि नसोचेर विकल्परहित भई ध्यान गर्नुपर्‍यो भन्ने सोचाई पनि विकल्पले नै गर्ने भएकोले त्यो साँच्चिकै महामुद्रा नभए पनि महामुद्रा उत्पन्न गर्ने उपाय त हो' भन्ने हो भने कार्यकारण-धर्मबाट बोधि लाभ हुँदैन भन्ने प्रतिज्ञा बिग्रियो । यदि 'निर्विकल्प भावना गर्छु' भन्ने मात्रले निर्विकल्प भावना हुन्छ भन्छौ भने त्यो पनि मिल्दैन । नत्र त 'रोग निको होस्' भनेर मात्र पनि रोग निको हुनुपर्ने हो भनेपछि के जवाफ दिन्छौ ? यदि भोजन र औषधिमूलो गरेमा रोग निको हुने कारण हुन्छ र 'रोग निको होस्' भन्ने सोचाइ मात्र त्यसको कारण हुँदैन भन्ने मान्छौं भने पुण्य र ज्ञान सम्भार गर्नु पनि निर्विकल्प भावनाको हेतु हो, 'निर्विकल्प भावना गर्छु' भन्नु मात्र निर्विकल्प भावनाको हेतु नभएको समानै भयो । त्यसकारण विना हेतु र अपुग हेतुले फल नफल्ने कुरा सिद्धै छ ।

सञ्चयगाथामा भनिएको छ, "जवसम्म दुई सम्भार पूर्ण हुँदैनन् तबसम्म त्यो परम शून्यताको बोध हुँदैन ।" त्यस्तै रत्नावलीमा भनिएको छ, "हे राजा, संक्षेपमा भन्दाखेरि बुद्धहरूका रूपकाय पुण्यसम्भारले उत्पन्न हुन्छन् र ज्ञानसम्भारले धर्मकाय हुन्छ ।"

यी कुराहरूको अर्थलाई निर्णय गर्ने हो भने सामान्यतया चित्तलाई चिनाउँदाखेरि मनलाई मात्र चिनाइन्छ कि बाह्यार्थलाई पनि चिनाइन्छ ? यदि चित्तलाई मात्र चिनाइएको हो भने त्यो तीर्थिकको तरिका हो। त्यसले ग्राह्य र ग्राहकलाई त्याग्न नसक्ने भएकोले भ्रान्तिको मार्ग हुन जान्छ। यदि बाह्यवस्तुलाई पनि चिनाउनु पर्ने हो भने यी विषयहरू तीर्थिकको जस्तो ईश्वर आदिले बनाएको अथवा श्रावकको जस्तो अणु परमाणुदेखि लिएर चित्तमात्रीको जस्तो चित्तबाट भएका या माध्यमिकको जस्तो प्रतीत्यसमुत्पादबाट भएका हुन् भन्ने विचार गर्दा यी पनि 'छन्' कि 'छैनन्' (यिनीहरूको सत्ता 'छ' कि 'छैन', 'सत्' या 'असत्') भन्ने मध्ये कुनै मत पनि मान्नासाथ 'शाश्वत' या 'उच्छेद' यी दुई अन्तबाट बच्न सकिँदैन। त्यसलाई प्रतिषेध गर्न आगम र युक्ति जान्नु पर्दछ। 'प्रतिभास' र 'चित्त' पनि प्रतीत्य समुत्पाद हुन् भन्ने मतमा पनि बुद्धमार्गीको आगम र युक्तिलाई जान्नु आवश्यक हुन्छ। त्यो बुझिएन भने पुद्गलनैरात्म्य र धर्मनैरात्म्य राम्रोसँग बोध हुँदैन। पुद्गल नैरात्म्यको बोध नभएमा तीर्थिकको ध्यानबाट फरक हुँदैन भने धर्मनैरात्म्यको बोध नभएमा श्रावकको ध्यानबाट फरक हुँदैन।

दुवै नैरात्म्यको बोध गर्न सर्वप्रथम श्रुतमयी प्रज्ञा र चिन्तामयी प्रज्ञाद्वारा समारोपलाई काट्नुपर्छ। श्रवण र चिन्तनको आधार नलिने हो भने अनात्मा बुझ्नु असम्भव हुन्छ। अनात्मा नबुझेमा अनात्माको भावना गर्नु असम्भव हुन्छ र भावनालाई नबुझेमा भावनामयी प्रज्ञा पनि उत्पन्न हुँदैन। भावनामयी प्रज्ञा उत्पन्न नभएमा आर्य दर्शनमार्ग उत्पन्न हुन असम्भव हुनेछ। समाधिराजसूत्रमा "लोकलाई स्कन्ध-शून्यताको देशना गरे तापनि (यथावत्) अनात्मा

तिनीहरूले बुझेका हुँदैनन् र नबुझेका भनी कसैले विरोध गरेमा रीसले होच्याएर अप्रिय वचन बोल्दछन्। लोकहरूले शून्यताभावना गरेपनि त्यसले सत्कायदृष्टिलाई भत्काउन सक्दैन" इत्यादि भनिएकोले दुई अनात्माको बोध नगरेमा सत्कायदृष्टिलाई भत्काउन नसकिने हुँदा शून्यताको भावना संसार र दुर्गतिको हेतु बन्न जान्छ। त्यसकारण सही तरिकाले श्रवण र चिन्तनद्वारा समारोपलाई काटेर भावनामयी प्रज्ञाले दर्शनमार्ग उत्पन्न गर्दछ। प्रमाण वार्तिकमा -

**प्रागुक्तं योगिनां ज्ञानं तेषां तद् भावनामयम्।**
**विधूतकल्पनाजालं स्पष्टमेवावभासते॥**

"माथि बताइएको योगीको ज्ञान भावनाबाटै भएको हो र त्यो विकल्पको जालोलाई नष्ट गरेपछि भएको हुनाले उज्यालो नै भासित हुन्छ" भनेजस्तै हो।

यदि 'चित्त र बाह्यार्थ सबै एकैपटक सिधै निःस्वभाव हो' भनेर चिनाइन्छ भन्ने मान्ने हो भने समाधिमा शून्यताभावना गरे तापनि ध्यानको प्रयोग (पूर्वगत) र पृष्ठलब्ध अवस्थामा चित्तमा अनेक विकल्प, रूप, शब्द आदि देखिने भएकोले ती देखापरेका अनेक कुराहरू हेतुबाट भएका हुन् कि विना हेतुबाटै भएका हुन्? हेतुबाट भएका हुन् भने स्वतः (आफैबाट) हुन् कि परतः (अर्कोबाट) हुन् कि उभयतः (दुवैबाट) हुन्? स्वतः उत्पन्न भएका हुन् भने त्यो सांख्य मत हो। परतः उत्पन्न भएका हुन् भने त्यो ईश्वरवादी तीर्थिक या श्रावक आदि वस्तुवादीकै मत हो। उभयतः उत्पन्न भएका हुन् भने ती दुवै विशेषबाट पार हुन सक्दैन। विनाहेतु नै उत्पन्न भएका हुन् भने उच्छेदवादी तीर्थिकको मत हुने भएकोले आगम र युक्तिविना खण्डन हुन सक्दैन। 'आगम' र 'युक्ति'चाहिँ श्रुतमयी प्रज्ञा र चिन्तामयी

प्रज्ञा नभैकन बुझ्न सकिँदैन। त्यसैले भावनामयी प्रज्ञा उत्पन्न हुनको लागि पहिले श्रुतमयी र चिन्तामयी प्रज्ञावाट समारोपलाई काटेर चिन्तामयी प्रज्ञाले भावना गर्नुपर्छ र भावनामयी प्रज्ञावाट त्यो अभ्रान्त-स्पष्ट भासित हुनेछ। त्यसैले भावनामयी प्रज्ञा उत्पन्न भएमा भारतका सिद्धले जस्तै व्याख्या गर्न, रचना गर्न र शास्त्रार्थ गर्नमा भ्रान्ति हुनेछैन।

आजभोलि भावनामयी प्रज्ञा छ भन्ने दावी गर्ने केही व्यक्तिहरू देखिएका छन् तापनि तिनीहरूले व्याख्या गर्दा आगम र युक्तिसँग नमिल्ने गरी व्याख्या गर्छन्, रचेका श्लोकमा पनि व्याकरणसँग नमिल्ने संकेत धेरै हुन्छन्। अर्थ पनि आगम र युक्तिसँग विरोध भई तर्क र विचार मात्र धेरै भएको देखा पर्छ, शास्त्रार्थमा पनि पूर्वपक्ष र उत्तरपक्ष छुट्याएका हुँदैनन्, दण्डनीय र अदण्डनीयलाई नबुझेर केहीले मजाकको लागि शास्त्रार्थ गरेको देखिन्छ। त्यस्ता बिग्रिएकाको प्रज्ञालाई भावनामयी प्रज्ञा भनिँदैन, 'मिथाकल्प-दुष्प्रज्ञा' भनेर सूत्रमा बताइएको हुन्छ।

त्यसैले श्रवण र चिन्तनद्वारा समारोपलाई काटेर निःसन्दिग्ध अर्थको भावना गर्नु पर्छ। स्वभावको अर्थ (यथावत् स्वरूप) लाई भावना गर्ने पद्धतिहरू धेरै किसिमका देखिन्छन्। जस्तै श्रावकहरूले चार आर्य सत्यको भावना गर्छन्। निराकारवादी चित्तमात्रीहरूको ध्यानपद्धति चाहिँ आचार्य शान्तिपादले भने बमोजिमको हो र एकाग्र, निष्प्रपञ्च, एकरस र अभावना यी चार योगलाई अभ्यास गर्दछन्। स्वातन्त्रिक माध्यमिकले अत्यन्त अप्रतिष्ठित युगनद्धलाई भावना गर्छन्। प्रासङ्गिक माध्यमिकले अप्रतिष्ठित शून्यतालाई भावना गर्छन्। गुह्यमन्त्र (वज्रयान) मान्ने निङ्मापाहरूले नवयानको अन्तिम 'अतियोग' लाई

भावना गर्छन्। अर्वाचीन (पछिका) गुह्यमन्त्र (वज्रयान) मान्नेहरूले चार अभिषेक र दुई मार्गक्रमको ज्ञानलाई भावना गर्दछन्। त्यसमा अलग तन्त्रको मतले गर्दा अर्थ एउटै भए तापनि आलम्बनको क्रममा समानता हुँदैन। आचार्य सरोरुहवज्रले भने 'अविपरीत तथता' लाई बताउनुभएको छ। आचार्य योगीश्वरले[९६] त 'अतिविशुद्ध तथता' लाई मान्नु भएको छ। त्यस्तै आचार्य नागार्जुनले 'पञ्चक्रमको अन्तको युगनद्ध' हो भन्नुभएको छ। दुई क्रमलाई चारओटा मुद्रा गराउने हो भने कर्ममुद्रा, धर्ममुद्रा, समय मुद्रा र महामुद्रा पनि भनिएको छ। यस्ता क्रमहरू[९७] थुप्रै भए पनि बुद्ध र सिद्धहरूको मत एउटै हुनुपर्छ। यिनीहरू सबै चार अभिषेक र दुई मार्गक्रम समाधिमा भएका विशेषता (फरक) मात्र हुन्। यिनीहरूको गम्भीर मर्मचाहिँ गुह्यमन्त्र दिने वेलामा आउने भएकोले यहाँ बताइँदैन। संक्षेपमा भन्दाखेरि यदि त्यो महामुद्रा हो भने गुह्यमन्त्रको अभ्यास गरेर भएको हुनैपर्छ। जस्तै तुवाँलो आदिलाई धूवाँ भन्ने नाम दिइए पनि त्यो आगोबाटै उत्पन्न नभएको हुनाले साँच्चिको धूँवा हुँदैन। त्यस्तै चराको जस्तै आवाज मान्छेको मुखबाट आउँछ भनिए तापनि साँच्चिकै चराको आवाज त चराकै मुखबाट आउनु पर्छ, मान्छेको मुखबाट होइन। त्यस्तै त्यो पनि महामुद्राको भावना भनिए

---

[९६] भारतका महासिद्ध विरूपाद।

[९७] यी सबै महायान भित्रका विशेष शून्यता विमोक्ष मुख विपश्यना सम्बन्धी विधिहरू हुन् र थेरवादमा बताइएका जस्ता विपश्यनाहरूलाई महायानमा पूर्वतयारीको रूपमा गर्ने गराइने हुन्छ। त्रिलक्षण दुवै यानमा भए तापनि थेरवाद विपश्यनामा अनित्यलाई (उदय-व्यय) लाई बढी जोड दिइएको हुन्छ भने महायान विपश्यनामा अनात्मा (शून्यता) मा बढी जोड दिइन्छ।

तापनि दुई क्रमको ज्ञानबाट उत्पन्न नभएकोले यो जीवनमै बुद्धता लाभ हुने साँच्चिकै महामुद्रा होइन ।

यहाँ तन्त्रको क्रम यतिसम्म पनि बताइएन भने तीर्थिक, श्रावक, चित्तमात्री, माध्यमिक र गुह्यमन्त्र भावनाका विशेषताहरू नबुझिएर अन्धाधुन्ध अभ्यास गर्न पुगिन्छ। कसै कसैले गुह्यमन्त्रको महामुद्रालाई तीर्थिकको भावनाजस्तो गरी गरेको देखिएकोले यहाँ यो संक्षेपमा बताइएको हो।[९८] विस्तारमा त गुरुको मुखागमबाट जान्नुपर्दछ।

सम्यक् प्रज्ञाको सिद्धि : यो तीन किसिमबाट गर्नुपर्छ। १. प्रयोगमा दृष्टिद्वारा प्रपञ्चलाई काट्नु, २. मौलमा भावनाद्वारा अर्थको अभ्यास गर्नु, ३. पृष्ठमा चर्याद्वारा अन्त पार्नु ।

१. प्रयोगमा दृष्टिद्वारा प्रपञ्च काट्नु : पहिले बताए अनुसार नै शीलको आश्रयमा रहेर श्रवणद्वारा चित्तसन्तानलाई शोधन गरेर दृष्टिले प्रपञ्चलाई काट्नुपर्दछ। त्यसमा पनि प्रज्ञापारमिताको आगम माध्यमिक शास्त्र आदिको युक्तिलाई यथावत् रूपमा बुझेका विद्वान् आचार्यबाट सुनेर मिथ्या र तथ्य धर्मको मर्मलाई चिन्नु पर्छ। त्यतिसम्म पनि सकिएन भने 'शिक्षासमुच्चय' अथवा 'बोधिचर्यावतार' आदिमध्ये आफूलाई मन पर्ने ग्रन्थको अध्ययन गरी दृष्टिद्वारा प्रपञ्चलाई काट्नु पर्छ। त्यतिसम्म पनि जानिएन भने अन्धोले अन्धालाई डोऱ्याए जस्तै बुद्धको

---

[९८] केही पुञ्जस्वामीका चेलाहरूले झोक्छेन्को चित्त उपदेश पाएपछि त्यो पनि पुञ्जस्वामीकै आत्माको उपदेश हो भन्ने भ्रममा परेको पाइएको थियो। यो पनि त्यही कारणले भएको हो ।

धर्म नभए पनि हो भनेर अभ्यास गर्न पुगिने भएकोले तीर्थिक आदि विपरीत धर्ममा खस्ने सम्भावना हुन्छ। यो तात्पर्यलाई बुझेर नै पहिले "श्रवणद्वारा अनर्थलाई त्यागिन्छ" भने झैं श्रवण गरेका फाइदा र श्रवण नगरेका दोषलाई विस्तारमा बताइएको भेटिन्छ।

सर्वधर्माभावनिर्देश सूत्रमा पनि यस्तो बताइएको छ - "उहिल्यै असंख्य कल्प पहिले सुमेरूअभ्युद्‌गतराज भन्ने तथागत विशुद्धचारिक नाम गरेका धर्मभाणक भिक्षुलाई आफ्नो उत्तराधिकारी नियुक्त गरेर परिनिर्वाण हुनुभएको थियो। त्यही वेलामा 'मतिचारिक' नाम गरेका भिक्षुले आफ्नो शीलस्कन्ध अत्यन्त शुद्ध भएकोले पाँच किसिमका लौकिक अभिज्ञा लाभ गरेका थिए। उनी विनयपिटक राम्रोसँग अध्ययन गर्नुजस्ता गुणले युक्त भएर ध्यान र अरण्यलाई नै मूल रूपमा ग्रहण गर्ने खालका थिए। उनले एउटा आराम बनाएर त्यहीँ वस्दै शिक्षा दिन्थे र उनका अनुयायीहरूले पनि शिक्षा ग्रहण गर्थे। अनि धर्मभाणक 'विशुद्धचारिक' आफ्नो संघ परिवारसहित भई भिक्षु मतिचारिक जहाँ बसेका थिए त्यहाँ गएर रहन थाले। त्यसपछि विशुद्धचारिकले सत्वहरूलाई करुणा गरी पटक पटक नगरमा गएर त्यहाँ हजारौं सत्वहरूलाई श्रद्धा उत्पन्न गराउँथे र वोधिमा परिपाक गराउँथे। भिक्षु मतिचारिकले ती बोधिसत्वलाई अश्रद्धा चित्त उत्पन्न गरेर घण्टी बजाई भिक्षुसंघलाई जम्मा गरेर यस्तो नियम बनाए - 'हामीहरूमध्ये कोही पनि नगरमा जानु हुँदैन।' र भने, 'तपाईंले सम्प्रजन्यहीन चर्या गर्नुभएछ।' त्यति मात्र भनेनन्, अझै 'तपाईं नगरमा किन जानुपर्‍यो ? अरण्य या एकान्तमा रहनलाई नै भगवान्‌ले अनुमति दिएर प्रशंसा गर्नु भएकोले तपाईं नगरमा नगएर ध्यानको सुखमा रही भावना

गर्नुहोला' भनेर सम्झाए। उनले भनेको नमानेर विशुद्धचारिक फेरि पनि नगरमा गए। ती भिक्षुहरू नगरबाट फर्किएपछि भिक्षु मतिचारिकले घण्टी वजाई भिक्षुसंघलाई जम्मा गरी यसरी आदेश दिए, 'यदि आजदेखि तपाईंहरू नगरमा जानुभयो भने यो आराममा वस्न पाइने छैन।' यसरी सम्झाएपछि ती भिक्षुहरूले जति सत्वहरूलाई परिपाक गरेका थिए तिनीहरूले ती भिक्षुसँग भेट नहुनाले अत्यन्तै दु:ख माने। कुशलमूल पनि पूर्ण रूपमा ढाकियो। त्यसरी तीन महिना बित्यो। अनि त्यो आरामबाट अरू ठाउँमा सरेर गाउँ, नगरदेखि राजाको दरबारसम्म पुगी उनले सत्वहरूलाई धर्मदेशना गरिरहे।

भिक्षु मतिचारिकले भिक्षु विशुद्धचारिकलाई फेरि फेरि पनि नगरमा गएको देखे। संघहरूको चर्या पनि साधारण रूपमा देखेकोले अश्रद्धाचित्त उत्पन्न भयो र 'यो भिक्षु दु:शीलवान् छ र हतारको ठाउँमा रहेको छ' भनेर धेरै मानिसहरूलाई धर्म सुन्नबाट रोक लगाइदिए। त्यसपछि ती मतिचारिक भन्ने भिक्षुलाई मरण पश्चात् कर्मको विपाकले गर्दा ९९ करोड कल्पसम्म अवीचि नरकको प्राणी भएर दु:खवेदना भोग्नु परेको थियो। बत्तीस हजार वर्षसम्म प्रव्रज्याबाट खस्नु परेको थियो। हजारौं जीवनसम्म मन्द इन्द्रियवाला हुनु परेको थियो। हे कुलपुत्र, त्यसवेलाको मतिचारिक भन्ने भिक्षु म स्वयं नै थिएँ।[९९] त्यो अवस्थाका धर्मभाणक विशुद्धचारिकले धर्म देशना गरी बुद्धशासन ग्रहण गरेको कुशलमूलले पूर्व दिशामा अविरति क्षेत्रमा 'अचल' बुद्ध हुनुभयो।" यस्तो बताइएको छ।

---

[९९] 'म स्वयं नै थिएँ' भनेको शाक्यमुनि बुद्धले नै हो।

श्रीमालसिंहनाद सूत्रमा पनि यस्तो भनिएको छ - **"सबै प्रणिधानलाई एउटै प्रणिधानमा समेट्नु पर्छ"**। त्यो **एउटा के हो त भने 'सद्धर्म ग्रहण गर्न सकोस्'** भन्नु हो। अरू सूत्रहरूमा पनि यस्तो भनिएको छ। "लोकधातुलाई सप्तरत्नले भरेर त्रिरत्नलाई चढाएको भन्दा बुद्धको धर्मको एक श्लोकमात्र पनि सत्वलाई बताएमा ठूलो पुण्य हुन्छ।" त्यसको कारण के हो भने सम्पत्ति चढाउँदा सांसारिक सुसम्पन्नताको कारण हुनजान्छ भने धर्म सुनाउँदा आर्य धर्मको कारण हुन जान्छ।

यसरी बुझेर श्रवण र चिन्तन गर्ने प्रयत्न गर्नु पर्दछ। त्यसरी विस्तारमा श्रवण गर्न (सुन्न) सकिएन भने दुई[१००] सत्यलाई बुझिँदैन र त्यो नबुझेमा गम्भीर पुस्तकको अर्थ पनि वुझिँदैन र त्यो नबुझेर चित्तको विमुक्ति हुँदैन। दुई सत्यलाई बुझेर भावना गर्ने हो भने पुस्तकको अर्थ बुझेर मुक्त हुन सकिन्छ। अविपरीत रूपमा दुई सत्यलाई बुझ्नु अत्यन्त जरुरी हुन्छ। त्यसैले आचार्य आर्य (नागार्जुन) ले भन्नुभएको छ, "बुद्धहरूले देशना गरेका धर्महरू दुई सत्यमा आश्रित हुन्छन् - लोकसंवृत्ति सत्य र परमार्थ सत्य। जसले यी दुई सत्यको विभागलाई राम्ररी बुझ्दैनन् तिनीहरूले बुद्धशासनको गम्भीर तथतालाई बोध गर्न सक्दैनन्।"

अतः ती कुराहरू निर्णय गर्नको लागि यहाँ तीन कुरा बताइन्छ - १. दुई सत्यको लक्षण, २. लक्ष्यको भेद, ३. लक्ष्यमा लक्षणलाई सिद्ध गर्नु।

---

१०० दुई सत्यको धारणा थेरवाद लगायत अठारै निकायका श्रावकयान, महायान र वज्रयान सबैमा मान्यता दिइएको अवधारणा हो। दुवे सच्चानि अक्खासि सम्बुद्धो वदतंवरो सम्मुतिं परमत्थं च ततियं नुपलब्भति (कथावत्थु)॥

१. दुई सत्यको लक्षण : बोधिचर्यावतारमा भनिएको छ, "बुद्धेरगोचरस्तत्वं बुद्धिः संवृतिरुच्यते ।" अर्थात बुद्धिबाट [redacted] हो र बुद्धि स्वयं संवृति हो। यस आधारमा कसैले दुई सत्यको लक्षण यसरी गर्छन "बुद्धिको विषय हुन योग्य चाहिं संवृति हो र बुद्धिको विषयबाट पार भएको परमार्थ हो"। तर यो त लक्ष्य हो र लक्षण स्वयंचाहिं होइन। त्यसकारण मेरो आफ्नो मतचाहिं "विचार नगरेको बुद्धिमा सिद्ध हुनु" संवृति हो "विचार गरेको बुद्धिमा सिद्ध नहुनु" परमार्थ[१०१] हो र "आफ्नो बुद्धिमा अपकार नहुनु" सत्य हो।

२. लक्ष्यको भेद : लक्ष्यको भेद चार किसिमले गरिन्छ - (क) भेदको आधार, (ख) भेदको अर्थ, (ग) संख्याको निश्चय, (घ) शव्दार्थ।

(क) भेदको आधार : कसैको मतमा दुइ सत्यको भेद गर्ने आधार हुँदैन किनकि ती दुईमा साधारण सामान्य (समानता) नै हुँदैन। यस्तो भन्नु अयुक्त हुन्छ किनभने वास्तवमा साधारण सामान्य (समानता) नभए पनि अन्यापोह[१०२] द्वारा व्यवहारमा बुद्धि मात्रलाई भेदको आधार बनाउँदा विरोध हुँदैन। आचार्य चन्द्रकीर्तिले युक्ति

---

१०१ विभावनीमा- "परमो उत्तमो अविपरीतो अत्थो परमत्थो। परमस्स उत्तमस्स ञाणस्स अत्थो गोचरो परमत्थो।"

१०२ अन्यापोह (या अपोह) को सिद्धान्तमा कुनै पनि वस्तुलाई त्यसको विपक्षको प्रतिषेधको रूपमा परिभाषित गरिन्छ। जस्तै: मानव भनेको त्यो हो जो अमानव होइन। त्यस्तै किसिमले यहां पनि 'परमार्थ त्यो हो जो संवृत्ति होइन' या संवृति त्यो हो जो परमार्थ होइन भनेर बुद्धिका आधारमा भेद गर्दा कुनै आपत्ति छैन भन्ने भाव हो।

षष्टिकाको भाष्यमा यस्तो भन्नु भएको छ, "यो दुई सत्यको व्यवस्था गरेको त लोकको बुद्धिलाई हेरेर हो ।"

(ख) भेदको अर्थ :

यसभित्र तीन कुरा छन् - अ) कस्तो खालको बुद्धिलाई हेरेर संवृति र परमार्थको भेद गरिन्छ ? आ) कस्तो खालको व्यक्तिलाई हेरेर दुई सत्यको व्यवस्था गरिन्छ ? इ) ती दुई सत्य एक हुन् कि अलग हुन् ?

(अ) 'सत्यद्वय' भन्ने ग्रन्थमा यस्तो भनिएको छ "जसरी आभासित छ त्यो मात्र संवृति हो अर्को अर्को हो ।" त्यस अनुसार सबै प्रतिभासहरू संवृति हुन् र ती वास्तविक रूपमा असिद्ध हुनु परमार्थ हो ।

संवृति पनि तथ्य संवृति र मिथ्या संवृत्ति गरी दुई किसिमका हुन्छन् । मिल्ने कर्मद्वारा आभासित भई व्यवहारमा अर्थक्रियाकारित्व भएर पनि विचार गर्दा असिद्ध हुने, अभ्रान्त ज्ञानले थाहा पाइने विषय सबै तथ्य संवृति हुन् । भ्रान्त ज्ञानले थाहा पाइएका र व्यवहारमा अर्थक्रियाकारित्व नभएका विषयहरू मिथ्या संवृति हुन् । जस्तै - दुई चन्द्रमा, तिमिर रोग लागेकाले देख्ने केश, माया (जादु) आदि । यसमा कसैले यस्तो पनि भन्छन् 'सुगतिको कारण तथ्य संवृत्ति हो र दुर्गतिको कारण मिथ्या संवृति हो ।' त्यस्तो त माध्यमिक ग्रन्थ, सूत्र र शास्त्र कहीं पनि नबताइएकोले कुरा गर्नु व्यर्थै छ । 'सत्यद्वयमा' - "आभास भए पनि अर्थ क्रियाकारित्व भएको तथ्य संवृत्ति हो र त्यो नभएको चाहिँ मिथ्या संवृति हो" यसरी भेद गरिएको छ ।

यहाँ परमार्थ पनि तार्किकहरूमा प्रख्यात भएको अर्थक्रियाकारित्वलाई नभएर माध्यमिकहरूमा प्रख्यात भएको निष्प्रपञ्चलाई नै मानिन्छ ।

(आ) श्रावकहरूले भन्छन् कि पृथग्जनको (विषय) संवृति हो, तीन आर्यहरूको समाधि परमार्थ हो। यो अयुक्त हुन्छ किनकि उनीहरूको मतमा निर्वाणलाई वस्तुसत्[१०३] मानिएकोले यो सम्भव हुँदैन। चित्तमात्रीहरूको मत अनुसार परिकल्पित संवृत्ति हो, परतन्त्रमा अशुद्ध परतन्त्र संवृति र शुद्ध परतन्त्र परमार्थ हो र परिनिष्पन्न परमार्थमात्र हो। यो भनाइमा पनि अद्वय ज्ञान अन्तमा आएर वस्तु नै हुन जाने भएकोले त्यो परमार्थ[१०४] हुन सक्दैन।

स्वातन्त्रिक माध्यमिकमा दुई सत्यलाई पर्याय र अपर्याय गरी चार थरीका बताइन्छन्। ती चार मध्ये पृथग्जनको बुद्धिमा विचारविना नै आभासित हुनेलाई पर्याय संवृत्ति भनिन्छ। विचार गर्दा सत्य भएको पर्याय परमार्थ हो। तीन आर्यहरूको निर्विकल्प ज्ञान अपर्याय परमार्थ हो र शुद्ध लोकको ज्ञान अपर्याय संवृति हो।

'बुद्धसँग ज्ञान छ' भन्नेहरूको पक्षमा यो भनाई निर्दोष भएतापनि बुद्धसँग ज्ञान 'छ' र 'छैन' भन्ने दुवैबाट मुक्त भएको (मान्ने पक्षमा त्यसो भन्नु दोषयुक्त हुन्छ। त्यसो भए तिमीहरूको पक्षमा निर्विकल्प ज्ञान र शुद्धलोकाभासको ज्ञान दुवै छैनन् त भन्ने प्रश्न उठाउने हो भने) निर्विकल्प ज्ञान र शुद्धलोकाभासको भेदको ज्ञान त पृथग्जनको सोचाइअनुसार मात्र हो र बुद्धभूमिमा दुई थरी

---

१०३ थेरवाद र वैभाषिक आदिले निर्वाणलाई वस्तुसत् (द्रव्यसत्) मान्छन् त्यसमा शाश्वतान्ततिर जाने भएकोले माध्यमिकको दृष्टिमा त्यसलाई शून्य (अनात्मा) मानिन्छ।

१०४ यहाँ माध्यमिकको चतुष्कोटि विनिर्मुक्त दृष्टिबाट हेर्दा यो परिनिष्पन्नलाई अति सूक्ष्म भए पनि वस्तु सरह नै देखिने भएकोले दूषित तुल्याइएको हो।

हुँदैनन् । युक्तिषष्टिकामा यसो भनिएको छ, "संसार र निर्वाण भन्ने भेद तथता दर्शन नगरेकाहरूले मात्र मान्छन्, तथता दर्शन गर्नेहरूले संसार र निर्वाणलाई अलग मान्दैनन्" ।

प्रासङ्गिक माध्यमिकहरूका मतमा पृगथ्‌जनको बुद्धि संवृत्ति हो भने तीन आर्यको समाधि परमार्थ हो र पृष्ठलब्ध संवृत्ति हो, निर्वाण परमार्थ मात्र हो भनिन्छ । परन्तु बुद्धको निर्वाण भएर ज्ञान नभए त त्यसो हुन्थ्यो तर बुद्धको निर्वाण निर्वाणमात्र नमानिएकोले 'ज्ञान हुँदैन' भन्न मिल्दैन । त्यसैले त्यो केही अयुक्त देखिन्छ । त्यसो भए यहाँ के उपयुक्त हुन्छ त ?

जस्तो व्यक्तिको दृष्टिकोणमा पनि आभासित हुने दृष्टि संवृति हो र शून्यतादृष्टि परमार्थ हो, ती दुईको अर्द्वयचाहिँ 'युगनद्ध' हो । पञ्चक्रममा भनिएको छ, "प्रतिभास र शून्यता दुवै अंगलाई अलग अलग बुझेर जव सम्यक् रूपमा मिलाइन्छ त्यसलाई युगनद्ध भनिन्छ ।" यी तीन तरिका (कुरा) पनि वस्तुको यथार्थतालाई बोध गर्ने ज्ञेयका स्थान हुन् । त्यसलाई नै उपाय र प्रज्ञा युगनद्ध गरेर अभ्यास गर्नु भावनाको मार्ग हो, त्यो बोध गरेर आगन्तुक भूमि र मार्गमा पुगी त्रिकाय प्राप्त हुनु फल हो । यो तरिका आगम र युक्तिसँग विरोध नभई व्याख्या गरिएको नीतार्थ त्रिपिटकको मत हो ।

(इ) दुई सत्य एक हुन् कि अलग हुन् भन्दाखेरि 'चन्द्रमा' र 'हिमांशु'जस्तै एक रूप भएर पनि नाममात्रको पर्याय हो कि घट (घडा) र पट (कपडा) जस्तो वस्तु नै अलग हो कि, संस्कृत र अनित्य जस्तै एक स्वरूप भएर पनि व्यतिरेक अलग हो कि भाव र अभाव जस्तै

एककनिवीह[१०५] (Mutually Exclusive) हो ? एकै स्वभावको हुन सक्दैन किनकि संवृत्तिलाई त्यसमा आलम्वन गराउँदा परमार्थ पनि आलम्वन हुनुजस्ता चार किसिमका[१०६] दोष लाग्छन् ? त्यस्तै अलग अलग स्वभावको हो भने धर्मी र धर्मता हुन नसक्ने आदि चार[१०७] प्रकारका दोषको प्रसंग उठ्न सक्छ जुन आर्य सन्धिनिर्मोचन सूत्रमा बताइएको छ।

यदि एकै स्वभावको हो भने परमार्थ स्वभावसिद्ध हुन जान्छ, एककनिवीह हो भने परमार्थ अभाव हुने दोष लाग्छ। यस्तो भनेको पनि परमार्थलाई स्वभावसिद्ध र अभाव हो भन्ने मानेपछि मात्र हो। प्रज्ञापारमिता सूत्रमा 'लक्षण नहुनु नै एउटै लक्षण हो' भनिएको छ। त्यस्तै 'सारिपुत्र, चित्त नै नभएमा छ अथवा छैन भन्ने आलम्बन हुन्छ र ?' भनिएको छ। त्यस्तै गरी सञ्चयगाथामा 'छ' र 'छैन' यी दुई अभावधर्म हुन् भनिएको छ। त्यस्तै प्रमाणवार्तिकमा

---

१०५ एउटा हुँदा आर्को नहुने, अर्को हुँदा एउटा नहुने।

१०६ एक हो भन्दा आइलाग्ने चार दोषहरू :

१. संवृत्ति देख्दा परमार्थ पनि देखिनपर्‍यो।
२. संवृत्तिको अनेक भेद भएकोले परमार्थको पनि अनेक भेद हुनुपर्‍यो।
३. संवृत्ति संक्लिष्ट भएको हुँदा परमार्थ पनि संक्लिष्ट हुनुपर्‍यो।
४. बालजनले देखेको भन्दा बेग्लै संवृत्तिलाई खोज्नु नपरे झैं परमार्थको खोजी पनि गर्नु परेन

१०७ अलग मान्दा लाग्ने चार दोषहरू यी हुन् -

अ) आर्यले परमार्थको प्रत्यक्ष दर्शन गरे पनि संवृत्तिको बन्धनबाट मुक्त नहुने हुन्छन्।
आ) परमार्थ धर्मता संवृत्तिको सामान्य अर्थमा लागू नहुने हुन्छ।
इ) संवृत्ति संस्कार असिद्ध हुनु परमार्थ नैरात्म्य नहुने हुन्छ।
ई) एउटै व्यक्तिको चित्त सन्तानमा संक्लेश र व्यवदानको स्वरूप एकै कालमा अलग रूपले रहन पुग्छ किनकि दुई सत्य अलग हुन्।

"रूपाभावादभावस्य शब्दा रूपाभिधायिनः" आदि भनिएको छ।

अतः अन्यापोहद्वारा राम्रोसँग बताउन जानेमा दोष लाग्दैन तर नजानेमा माथिका सबै दोषहरूबाट बच्न सकिन्न। त्यसकारण मेरो नीतिअनुसार परमार्थ र व्यवहार गरी दुई किसिमका व्यवस्थाका मध्येमा पहिलो परमार्थको हिसाबमा 'एक' र 'अलग' भन्ने प्रपञ्चबाटै मुक्त हुन्छ। सन्धिनिर्मोचन सूत्रमा भनिएको छ, "संवृत्ति धातु र परमार्थ तथता 'एक' र 'अलग'बाट मुक्त भएको लक्षण हो। जसले 'एक' या 'अलग' हो भन्ने ठान्छ त्यो मिथ्यादृष्टिमा रहेको हुन्छ।" व्यवहारको व्यवस्थामा अन्यापोहको आधारमा (यी दुई सत्यको) स्वभाव अद्वय भई व्यतिरेक[१०८] चाहिं अलग मानिन्छ अथवा ती दुई सत्यहरू एक या अलग भन्ने हिसाबमा अनिर्वचनीय हो भनिएकोले यहाँ पनि त्यसैलाई नै मान्नु पर्छ।

(ग) संख्याको निश्चय : चार सत्य, सोह्रओटा सत्य-आकार, आदि भनिएको छ तापनि फेरि दुई सत्यमै सीमित हुनुको करण के हो त ? सामान्यतया संख्याको निश्चय गर्नको लागि आवश्यकताअनुसारको दृष्टिबाट, मिथ्या विकल्पको दृष्टिबाट या यस्तै धेरै किसिमबाट गरिएको हुन्छ तापनि यहाँ साक्षात् विरोधको अन्तलाई विच्छेद गरेमा दुई सत्यमा नै निश्चित हुन्छ। त्यो यसरीः- भ्रान्त र अभ्रान्त बुद्धि (परस्पर) विरोध हुने कुरा हुन्। ती दुईको बिचमा दुवै भएको अर्को पक्ष या ती दुईभन्दा बेग्लै अर्को कुनै तेस्रो पक्ष

---

[१०८] हेतु र दृष्टान्त दुई किसिमका हुन्छन् अन्वयी (साधर्म्य) र व्यतिरेकी (वैधर्म्य)।

पनि हुन असम्भव भएकोले दुई सत्यमा नै संख्याको निश्चय भएको हो।

(घ) शव्दार्थ : संवृत्ति सत्यमा सं भनेको सम्यक रूपले वृति (वृञ् = आवरणे भन्ने धातुवाट) भनेको ढाक्नु हो। अत: यथार्थलाई ढाकेको या सवै ढाकिएको भन्ने वुभिन्छ। लोक-चक्षुपादले पहिले अनुवाद गर्दा कुन् = सवै, ज्योव् = ढाक्ने भनेर अनुवाद गरे।

परमार्थमा 'परम' भनेको उत्तम अथवा 'सत्' हो र अर्थ भनेको तात्पर्य या 'अर्थ' नै हो। अर्थात् सज्जनहरूले विचार गर्दा निर्दोष अर्थ भएकोले परमार्थलाई धोन् धाम्पा (धोन् = अर्थ, धाम्पा = परम) भनेर अनुवाद गरियो। त्यसैले दुई सत्यको लक्षण र शव्दार्थ मिल्दछ।

३. लक्ष्यमा लक्षणलाई सिद्ध गर्नु :

लक्ष्य बुद्धिको विषय वन्न सक्ने कुरा हो। त्यसमा संवृतिको लक्षण "विचार नगरेको वुद्धिमा सिद्ध हुनु" स्वसंवेद प्रत्यक्षवाट नै सिद्ध भए पनि वुद्धिको अगोचर (वुद्धिको विषय नभएको कुरा) लक्ष्य मा "विचार गरेको वुद्धिमा सिद्ध नहुनु" भन्ने परमार्थको लक्षण कसरी सिद्ध हुन सक्छ त ? यदि वुद्धिमा लक्ष्य असिद्ध छ भने त्यसमा विचार गर्न नै असम्भव हुन्छ। यदि बुद्धिमा लक्ष्य सिद्ध छ भने "बुद्धिको अगोचर छ" भन्नुसँग विरोध हुन्छ।

परन्तु त्यो विरोध हुँदैन, किन्भने अन्यापोहमा बुद्धिको गोचरलाई विचार गर्दा बुद्धिको विषय नहुनु सिद्ध हुन्छ। विषय नहुनुलाई विचार गर्दा त्यो फेरि विषयको रूपमा सिद्ध हुन्छ। जस्तै : ज्ञेयलाई विचार गर्दा अज्ञेय सिद्ध हुन्छ र अज्ञेयलाई विचार गर्दा ज्ञेय सिद्ध हुन्छ।

अत: विचार गर्दा वुद्धिको अगाडि असिद्ध हुने भएकोले परमार्थ ज्ञेय होइन। त्यसैकारणले बुद्धिको अगोचर (परमार्थ)

लाई बुद्धिले[१०९] बोध गरिएको भन्ने कुनै पनि दोषले अपकार गर्न सक्दैनन् । जस्तै निसाना नै छैन भने बाँणले पनि छुँदैन । यस सन्दर्भमा आचार्य आर्य (नागार्जुन)ले भन्नुभएको छ कि-

**यदि काचन प्रतिज्ञा स्यान्मे तत एष मे भवेद् दोषः।**
**नास्ति च मम प्रतिज्ञा तस्मान्नैवास्ति मे दोषः ॥**

"यदि ममा प्रतिज्ञा भए पो त्यो दोष मलाई लाग्थ्यो, ममा प्रतिज्ञा नै नभएकोले म निर्दोष नै छु।" त्यसो भए अभिधर्ममा "प्रतिज्ञा नभएको दृष्टि कपटदृष्टि हो" भनेकोसँग मिलेन कि ? भन्ने प्रश्न उठ्ला, तर त्यो मिल्दैन । किनकि चोरले चोरी गरेर चोर हुँ भनी स्वीकारेन भने प्रतिज्ञा नभएको कपटी भन्न पाइन्छ परन्तु नचोरेरै सत्य बोलेकालाई 'नमानेको' या 'कपट गरेको' भन्न कहाँ मिल्छ ? त्यस्तै तीर्थिकहरूले प्रतिज्ञा भएर पनि कपट गरेर नमानेमा कपटी भन्न सुहाउँछ। हामीले त परमार्थ निष्प्रपञ्च भएकोले प्रतिज्ञा नगरेका हौं त्यसैले हामीलाई 'प्रतिज्ञा नमान्ने', 'कपटी' भनेर किन निन्दा गर्छौ ? बरू साँचो वचन बोलेछौ भनेर प्रशंसा गर्नुपर्ने हो ।

२. मौलमा भावनाद्वारा अर्थको अभ्यास गर्नु : दृष्टिले प्रपञ्चलाई काटेर भावना गरिएको अर्थलाई अभ्यासमा उतार्नु पर्छ। यसको प्रयोग विधि तीन कुराद्वारा बताइन्छ ।

(क) एकान्त स्थानमा गई सजिलो आसनी बनाएर वज्रासनमा बस्ने, हातलाई ध्यान मुद्रामा राख्ने, मेरुदण्डलाई

[१०९] बौद्ध धर्ममा बुद्धि भन्नाले विज्ञान, मन, चित्तको पर्यायवाची शव्द हो र सांख्य, वेदान्तमा जस्तो यी कुरालाई यहाँ अलग मानिँदैन ।

सीधा पार्ने, आँखालाई नाकको टुप्पामा राख्ने, (ख) अनि असाधारण शरणगमन र बोधिचित्तको पूर्वगत अभ्यास गरी सर्वोत्तम शून्यता पुद्गल र धर्म नैरात्म्य प्रज्ञापारमिताको समाधिमा बस्ने (ध्यान गर्ने) (ग) अन्तमा कुशल मूललाई सत्वको हितको लगि सम्यक्सम्बोधिमा परिणामना गर्ने। त्यो बोध नगरेका सत्वहरूको लागि एक प्रहरमा अनालम्वन करुणाको भावना गर्नू। सवै प्रतिभासहरूलाई सपना जस्तै ठानी ज्ञान सुन्ने, सुनाउने आदि सवै कार्यहरू गर्नू। प्रज्ञापारमिता समाधिको मर्मचाहिँ विद्वान् गरुको मुखबाट जान्नु पर्दछ। यसको अर्थको वारेमा प्रज्ञापारमिताको निदानको परिच्छेदमा यस्तो वताइएको छ, "अनि भगवान् स्वयंले नै सिंहासन ठीक पारेर त्यसमाथि स्वयं वज्रासनमा विराजमान हुनुभयो। अनि कायलाई सिधा पारेर अर्थलाई प्रत्यक्ष गरेर जुन समाधिमा अरू सवै समाधिहरू समेटिएका हुन्छन् र त्यो समाधिको बोध गर्दा सवै समाधिको वोध हुन्छ त्यो समाधिराजमा बस्नुभयो।"

३. <u>पृष्ठमा चर्याद्वारा अन्त पार्नु</u> : यी पनि दुई किसिमका छन्। क). पृथग्जनको चर्या, ख). आर्यको चर्या।

(क) पृथग्जनको चर्या: यसमा पाँचओटा मार्गमा क्रमश: प्रवेश गर्ने अभ्यास हुन्छ। संभार मार्गमा अधम, मध्यम र उत्तम गरी तीन किसिमका हुन्छन्। प्रयोगमार्गमा चार निर्वेधदभागीयको चर्या अलगै बताइन्छ तर पनि सरल रूपमा बुझ्नको लागि यसरी सजिलो हुन्छ -

पृथग्जनका तीन अवस्था हुन्छन्। शुद्धचर्याको अवस्था, प्रज्ञाशोधनको अवस्था र समाधिको साधनाको अवस्था। पहिलो अधिशील शिक्षा हो, बीचको अधिप्रज्ञा शिक्षा हो र

अन्तिमको[११०] अधिसमाधि शिक्षा हो। त्यो क्रममा शीलरूपी आधार शुद्ध भएमा प्रज्ञामा पारंगत भइन्छ, प्रज्ञा भए पछि समाधिमा भुलिँदैन। समाधिराजसूत्रमा यसो भनिएको छ, "समाधिको राजा यो शून्यताको भावना शुद्ध शीलको शिरमा रहन्छ। सबै धर्महरूको स्वभाव अन्जान बालजनले सधैं समाधिमा प्रयत्न गरेर पनि बुझ्दैनन्। अबुझको प्रयत्न भनेको के हो ? शील पालन नगरेर श्रवण गर्ने, श्रवण नगरेर भावना गर्न खोज्ने मूढ बालकहरूले गारो नलगाई टुँडाल हाल्न खोजे जस्तो हो। नबुझेरै प्रयत्न गर्ने ती व्यक्तिले यो समाधिराजलाई बुझ्न सक्दैनन्।"

त्यस्तै तीन[१११] ओटा शीलको क्रममा पनि संवरशीलले भाँडोलाई पखालेको जस्तै त्रिद्वार (कायवाक्चित्त) लाई शुद्ध पार्छ। कुशल संग्राहकशीलले रसायन हाले जस्तै आ-आफ्नो चित्तसन्तानलाई गुणले भरिदिन्छ। सत्वार्थक्रियाशीलले रसायनले रोगलाई निको पारेजस्तै सबै सत्वहरूको हित गर्दछ। त्यस्तै यी चर्याहरू पनि कर्ता, कर्म र क्रिया तीनै कोटिलाई परिशुद्ध गरेर पहिले बताएबमोजिम प्रज्ञापारमिताद्वारा गर्नुपर्छ। सूत्रमा यस्तो भनिएको छ, "शीघ्र नै अभिसंबोधि प्राप्त गर्नलाई सप्ताङ्गवन्दनाद्वारा पारंगत

---

[११०] श्रावकयानमा पहिले शील शिक्षा, त्यसपछि समाधि शिक्षा र अन्तमा प्रज्ञा शिक्षाको क्रम भएको कारण अनित्य आदि चलायमान धर्मलाई आलम्बन गर्नुपर्ने भएकोले पहिले अन्य आलम्बनमा समाधि गरेर मात्र पछि प्रज्ञाको अभ्यास गरिन्छ। तर महायानमा शून्यता विमोक्षमुख समाधिकै अभ्यास गरिने भएकोले पहिले प्रज्ञाको विकास गरेर मात्र त्यसैलाई आलम्बन गरी समाधि प्राप्त गरिन्छ।

[१११] यी तीन शीलहरू बोधिसत्वसंवरसँग सम्बन्धित छन्। श्रावकयानको शीलमा यसरी विभाजन गरेको पाइँदैन। त्यहाँ अर्कै किसिमका विभाजनहरू छन्।

भइन्छ" त्यसैले भद्रचर्या अथवा मैत्रीप्रणिधान आदि सूत्रमा भएको अथवा रत्नावली या बोधिचर्यावतार आदि शास्त्रहरूमा बताइएको सप्ताङ्गवन्दना या त्यसमाथि शरणगमन, प्रणिधि र प्रस्थान बोधिचित्त थपेर दश धर्मचर्यालाई दिनमा ३ पटक रातमा तीन पटक पढ्नु पर्छ। यी उपाय कौशल्यका विशेषता हुन् भनिएको छ।

(ख) आर्यको चर्याचाहिँ पछि भूमिमार्गको व्यवस्थामा बताइए अनुसार बुझ्नु पर्छ।

३. अविपरीत रूपमा सिद्ध गर्नु : यसभित्र पनि दुई कुरा पर्छन् - १. चार गुण सिद्ध गर्नु र २. सात आसक्तिहरू त्याग्नु।

१. चार गुण सिद्ध गर्नु :-

सूत्रालंकारमा यस्तो भनिएको छ -

**प्रज्ञा विपक्षहीना ज्ञानेन गता च निर्विकल्पेन।**
**सर्वेच्छा परिपूरा अपि सत्वविपाचिका त्रेधा॥**

त्यसको विपक्षहीनता दुःष्प्रज्ञा नहुनु हो, निर्विकल्प भनेको अनात्मा बोध हुनु हो, चिताएको सबै गर्ने भनेको प्रज्ञाद्वारा अरूको सन्देहलाई काटेर आवश्यकता पूरा गरिदिनु हो र सत्वहरूको परिपाक गर्ने भनेको त्यसरी सत्वहरूलाई यथायोग्य तीन यानमा लगाउनु हो।

२. सात आसक्ति त्याग्नु :

बोधिसत्वको प्रज्ञा सूत्रालंकारमा भने अनुसार यस्तो हुन्छ -

**न च सक्ता न च सक्ता न च सक्ता सक्तिका न च प्रज्ञा।**
**न च सक्ता न च सक्ता न च सक्ता बोधिसत्वानाम्॥**

अर्थात् १. दुष्प्रज्ञाको आसक्तिलाई त्याग्नु, २. विलम्बनमा आसक्ति नहुनु, ३. सन्तुष्टिमा आसक्ति

त्यागनु, ४. प्रतिफलमा आसक्ति त्यागनु, ५. विपाकमा आसक्ति त्यागनु, ६. प्रतिकूलतामा आसक्ति नहुनु ७. चञ्चलतामा आसक्ति नहुनु ।

**३. प्रज्ञा उत्पन्न गर्नुको फाइदा :**

प्रज्ञा उत्पन्न गर्नुका फाइदाहरू दुई किसिमका छन्:

१. अहिलेका फाइदा, २. अन्तिम फाइदा ।

१. अहिलेका फाइदा : यो जीवनमा नै प्रज्ञालाई राम्रोसँग शोधन गर्नाले जान्न योग्य कुराहरूमा विद्वान्‌को मति प्राप्त हुन्छ। सबैप्रति अभय प्रतिभान प्राप्त हुन्छ। विशुद्ध वचनहरू प्राप्त हुनाले र आफू स्वयं पनि प्रज्ञाविमुक्त हुनाले चित्त प्रसन्न हुन्छ। विद्वान्‌को पंक्तिमा गनिन्छ। देवसहित लोकमा सुप्रख्याति व्याप्त हुन पुग्छ। सबै लोकले प्रामाणिक मान्छन्। यस्ता थुप्रै गुणहरू लाभ हुन्छन् ।

पछिल्ला जीवनमा जहाँ जहाँ जन्म लिइन्छ त्यहाँ त्यहाँ प्रज्ञासम्पन्न भइन्छ, तीक्ष्ण इन्द्रियवाला भइन्छ, सुनेकोलाई धारण गर्न सक्ने भइन्छ[११२] (स्मरण शक्ति), बुद्ध वोधिसत्वहरूसँग धर्मको छलफल गर्नसक्ने भइन्छ, आफ्नो ज्ञेय-आवरण त्यागिन्छ, अरूप्रति अविपरीत धर्मचक्र प्रवर्तन गरिन्छ। सञ्चयगाथामा यस्तो बताइएको छ, "प्रज्ञाद्वारा सम्पूर्ण धर्मको स्वभावलाई पूर्णरूपमा बुझेर त्रिधातुबाटै पार हुनेछ ।"

२. अन्तको फाइदा :

सम्यक्सम्वुद्ध हुँदा यथावत् र यावत् ज्ञेयहरूको बोध हुन्छ। चारओटा प्रतिसंविद्‌को प्रतिभान लाभ हुन्छ। चार

---

११२ The Manuals of Buddhism मा लेदी संयादोले पनि अहिले प्रज्ञा, विपश्यनाको अभ्यास गरेमा पछिका जन्महरूमा प्रज्ञा आदिले सम्पन्न हुन्छ भन्नुभएको छ ।

अभय प्राप्त हुनाले खराव परवादीहरूलाई हराउन सकिन्छ। सूत्रालंकारमा यस्तो भनिएको छ -

**आश्रयेऽथाश्रिते देश्ये वाक्ये ज्ञाने च देशिके।**
**अव्याहतमते नित्यं सुदेशिक नमोऽस्तुते ॥**

(ग) पारमिताको संख्यालाई कसरी निश्चित गरियो :

यस भित्र दुई कुरा पर्दछन्। १. संख्याको निश्चय र २. क्रमको निश्चय।

१. संख्याको निश्चयमा साक्षात् विरोधको अन्तलाई विच्छेद गरेर या मिथ्याकल्पनावाट या आवश्यकताको हेराइ आदिवाट गणना गर्ने तरिका थुप्रै हुन्छन्। तर यहाँ भने आवश्यकताको हेराइवाट र व्यक्तिको हेराइवाट संख्या निश्चय गरी दुइ किसिमले वताइन्छ। पहिलोमा सूत्रालंकारमा यस्तो भनिएको छ,

**"भोगात्मभावसम्पत्परिचरारम्भसम्पदभ्युदय :।**
**क्लेशावशगत्वमपि च कृत्येषु सदाविपर्यासः ॥**

यसमा "सम्पत्ति, शरीर, सुसम्पन्नता, सेवक, आँटले सम्पन्न हुनु, सुगति, कहिल्यै पनि क्लेशको वशमा नजानु, कार्यलाई अविपरीत रूपमा गर्नु" भनिएको हुँदा स्वार्थ र परार्थ सिद्ध गर्नको लागि ६ किसिमका धर्महरूको आवश्यकता पर्छ। तिनीहरूको लागि ६ पारमिताको आवश्यकता हुन्छ। त्यो यसरी हुन्छ -

दानद्वारा सुसम्पन्न सम्पत्ति लाभ हुन्छ, शीलबाट सुगतिको काय (शरीर) लाभ हुन्छ। क्षान्तिद्वारा सेवक लाभ हुन्छ। कुनै सूत्रहरूमा क्षान्तिद्वारा सुन्दर शरीर लाभ हुन्छ भनेको पनि पाइन्छ। वीर्यद्वारा आँटले सम्पन्न भइन्छ, ध्यानद्वारा क्लेशलाई दमन गर्न सकिन्छ। प्रज्ञाद्वारा कुनै पनि कर्म गर्दा गल्ती हुदैन। स्वार्थ र परार्थ सिद्ध गर्नको लागि

ती छ वटा भएमा अपुग नहुने भएकोले त्यो भन्दा वढी आवश्यक पनि छैन। ६ वटामध्ये कुनै एउटा कम भयो भने पनि त्यससँग सम्वन्धित अर्थ सिद्ध हुँदैन। अतः धेरै र थोरैको गणना रोकिएर ६ ओटामै सीमित हुन्छ।

व्यक्तिको हेराइद्वारा संख्या निश्चित गर्ने हो भने, **गृहस्थ विनेयहरूको लागि दान र क्षान्ति, प्रव्रजितहरूको** लागि **ध्यान र शील** एवं दुवैका लागि **प्रज्ञा र वीर्य गरेर छ ओटा हुन पुग्छन्।** कारण के हो भने गृहस्थहरूमा धन धेरै हुनाले शत्रु धेरै वन्ने भएकाले दान र क्षान्तिलाई विशेष रूपमा सिद्ध गर्नुपर्छ। प्रव्रजितहरूले द्रव्यलाई त्यागेकाले शत्रुहरू धेरै नहुने हुँदा ती दुईको सिद्धि गर्नु थोरै आवश्यक हुन्छ। शील र ध्यान नै प्रव्रजितहरूले सिद्ध गर्न सजिलो हुन्छ। अतः चञ्चलतालाई त्यागेर एकान्तमा रहनुपर्छ। कम्तीमा पनि उपवास र प्राणातिपात नगर्ने शील मात्र पालन गर्न पनि हिचकिचाउने गृहस्थहरू धेरै हुन्छन्। ध्यानमा पनि गृहस्थीको कार्य, कुँटुम्व आदिको सत्कार जस्ता धेरै कुराले मन चञ्चल हुनाले चित्तलाई भित्र स्थिर गराउन कठिन हुन्छ। वीर्य र प्रज्ञा भनेका कुशल कर्ममा उत्साह हुनु र धर्मको अर्थ वुझ्नु भएकोले दुवै थरीलाई आवश्यक पर्छ। त्यसैले दुवैद्वारा प्रयत्न गरिनु आवश्यक छ।

२ क्रमको निश्चय :

सूत्रालंकारमा पारमिताधिकारमा भनिएको छ -

**पूर्वोत्तरनिश्रयतश्चोत्पत्तेस्तत्क्रमेण निर्देशः।**

**हीनोत्कर्षस्थानादौदारिकसूक्ष्मतश्चापि ॥**

"पहिलेको आधारमा पछिको उत्पन्न हुने हुनाले, अधमदेखि उत्तम हुँदै जानाले, स्थूल देखि सूक्ष्म हुँदै जानाले

तिनीहरूको क्रम बताइन्छ।" अत: तीन कारणले क्रम गरिएको छ।

पहिलोको आधारमा पछिको उत्पन्न हुन्छ भनेको धनलाई नहेर्नाले शीलमा प्रवेश गरिन्छ, शीलवान् हुनाले अरूको अपकारलाई सहन सकिन्छ, क्षान्ति हुनाले वीर्यमा प्रवेश हुन सक्छ, वीर्य भए समाधि उत्पन्न हुन्छ, चित्त समाधिमा भए धर्मको अर्थलाई यथावत् रूपमा बुझ्न सकिन्छ।

अधमदेखि उत्तमको क्रममा पहिलेको अधम र पछिको उत्तम हो। जस्तै: दान अधम र शील उत्तम। त्यसै गरी क्रमैसँग ध्यान अधम र प्रज्ञा उत्तम हो।

स्थूलदेखि सूक्ष्मको हिसाबले दानमा प्रवेश गर्न सजिलो र गर्न पनि सजिलो भएकाले स्थूल हो र शील चाहिँ पस्न पनि गाह्रो र गर्न पनि गाह्रो भएको हुनाले सूक्ष्म हो। यसैगरी ध्यान पनि पस्न सजिलो हुनाले स्थूल हो, प्रज्ञाचाहिँ पस्न पनि कठिन हुनाले सूक्ष्म हो।

## ३. शब्दार्थको निश्चय :

सूत्रालंकारमा भनिएको छ -

**दारिद्र्यस्यापनयाच्छैत्यस्य च लम्भनात् क्षयात् क्रुद्धेः।**

**वरयोग-मनोधारण-परमार्थज्ञानतश्चोक्तिः॥**

**दान को 'द' भनेको दरिद्रता र 'न' भनेको त्यसलाई नाश गर्नु हो।** 'शी' को अर्थ 'शीतल' र 'ल' को अर्थ लाभ हो अर्थात् निर्वाणको शीतलता लाभ गर्नु हो।

**क्षान्ति - 'क्षा' को अर्थ 'क्षोभ' र 'न्ति' को अर्थ शान्त पार्नु अर्थात् क्षुब्ध मन शान्त पार्नु हो।**

वीर्य - 'वीर्' भनेको 'वर' र 'य' भनेको यन्ता अर्थात् उत्तम कुशलमा लाग्नु हो ।

ध्यान - 'ध्या' भनेको 'धर' र 'न' भनेको 'मन' अर्थात् चित्तलाई समाल्नु हो ।

प्रज्ञा - 'प्र' भनेको 'परमार्थ' र 'ज्ञ' को अर्थ 'ज्ञान' हो अर्थात् परमार्थलाई बुझ्नु ।

यसप्रकार आफूले बुद्धको धर्मलाई परिपूर्ण गर्न ६ पारमिताको चर्या बताइसकियो ।

## ५. चार संग्रह वस्तु

यसमा तीन प्रकारले बताइन्छ। १. लक्षण, २. भेद, ३. संख्याको निश्चय

१. लक्षण :

यसको लक्षण सत्वपरिपाक गर्नको लागि उपायकुशलताबाट परिवार (विनेयजनहरू)लाई पालना गर्नु हो ।

२. भेद :

यसका चार भेद छन् : (क) दान, (२) प्रियवचन, (३) अर्थचर्या र (४) समानार्थता ।

क) दान : दान भनेको धर्मदेशना गर्नको लागि अमिष (सम्पत्ति, भोजन आदि) दिनु हो । पहिले बताए जस्तै अशुद्ध दानलाई त्यागेर शुद्ध दानद्वारा अरूलाई खुसी पार्नुपर्छ ।

ख) प्रियवचन : प्रियवचन भनेको दानद्वारा खुसी पारेपछि तिनीहरूलाई अझै परिपाक गराउनको लागि धर्मदेशना गर्नु हो । त्यसमा पनि अशुद्ध धर्मदेशनालाई त्यागेर आगम र युक्तिसँग विरोध नहुने खालको, नेयार्थ र नीतार्थको परस्पर विरोध नहुने खालको, अभिप्राय, अभिसन्धि र सिद्धाभिप्रायहरू

परस्परमा नवाभिएको, उत्तम र अधम व्यक्तिलाई उत्तम-धर्म र अधम-धर्मको अनुक्रम परस्पर नबिगारिएको, श्रावक र महायानका मिल्दा पक्षमा विरोध नगराइएका र तिनीहरूका नमिल्दा पक्षहरू आपसमा नमिसाइएका, पारमिता र गुह्य मन्त्रलाई एकै अर्थमा व्याख्या गर्ने खालका र विशेष गरेर तन्त्रमा प्रवेश गरेकाहरूलाई चार तन्त्रसँग मिल्दो रूपमा बताउने गरी धर्मदेशनाहरू गर्नुपर्छ। संक्षेपमा भन्दा धर्मदेशना गरिने पात्र, धर्मको भेद र बताउने तरिकालाई बुझेर नै बताउनु पर्छ। सूत्रालंकारमा भनिएको छ -

**"इति सुमतिरखेदवान् कृपालुः**
**प्रथितयशाः सुविधिज्ञतामुपेतः।**
**भवति सुकथिको हि बोधिसत्व -**
**स्तपति जने कथितो यथैव सूर्यः ॥**

अर्थात्, "यसरी राम्रो मति भएका करुणावान्‌हरूले दिक्क नमानेर राम्रो विधि बुझेर उत्तम देशना गर्छन्। त्यसले उनीहरूको यशको ख्याति पनि हुन्छ। त्यस्ता बोधिसत्वहरू लोकहरूका बीचमा सूर्य झैं चम्किने हुन्छन्।" चन्द्रकीर्तिले भन्नुभएको छ - "गुरुले चेलाको मनलाई थाहा पाएर, बुझेर सोहीअनुसार मिल्ने प्रयोग गर्दछन्। विद्वानद्वारा नै शिष्यहरू बटुलिन्छन्, जडद्वारा कहिल्यै पनि बटुलिँदैनन्।" मिथ्या देशनाको दोषको बारेमा सूत्रालंकारमा यस्तो भनिएको छ - "शव्दार्थलाई मात्र यथार्थ हो भनेर लिने गरेमा स्वयं नै अभिमानी बनेर मति बिग्रिन्छ।" त्यस्तै उत्तरतन्त्रमा भनिएको छ, "किनकि जिनभन्दा वढ्ता विद्वान् यो लोकमा अरू कोही पनि हुँदैनन्। सर्वोत्तम तथता सर्वज्ञले मात्रै जान्दछन् नकि अरूले। त्यसैकारणले मुनि स्वयंले नै व्यवस्थित गरिसकेको कुरालाई मन्थन गर्नु पर्दैन।

मुनिको तरिकालाई बिगारिएमा सद्धर्ममा अपकार हुनेछ।" त्यही भएर पात्रअनुसार धर्मदेशना गर्नुपर्छ भनी बोधिचर्यावतारमा भनिएको छ,

**"गम्भीरोदारमल्पेषु न स्त्रीषु पुरुषं विना।**
**हीनोत्कृष्टेषु धर्मेषु समं गौरवमाचरेत्॥**
**नोदारधर्मपात्रं च हीने धर्मे नियोजयेत्**
**न चाचारं परित्यज्य सूत्रमन्त्रैः प्रलोभयेत्॥**

अर्थात् गम्भीर र उदार धर्म (महायान धर्म) अल्प (वुद्धि या अधिमुक्ति) वालाहरूलाई या पुरुष नभएका वेला स्त्रीहरूलाई मात्र बताउनु हुँदैन। त्यस्तै हीन र उत्कृष्ट धर्महरू (हीनयान र महायान) मा समान गौरव राख्नुपर्छ। त्यस्तै महायानजस्तो उदार धर्मको पात्रलाई हीनयानमा लगाउनु पनि हुँदैन। फेरि आचारलाई छोडेर सूत्र मन्त्रआदिद्वारा प्रलोभन दिनु पनि हुँदैन।

(ग) <u>अर्थचर्या</u>:- अर्थचर्या भनेको अरू व्यक्तिहरूलाई धर्मग्रहण गराउनको लागि आवश्यक अर्थहरू सिद्ध गर्नु हो। अरूलाई आमिष दान दिएर धर्मदेशना गरे पनि त्यसअनुसार उसले अभ्यास गर्न चाहेन भने उपाय कौशलद्वारा गर्न लगाउनु पर्छ। जस्तै: बोधिचित्त-उत्पाद गरे पनि अभ्यास गर्न सकिँदैन भन्ने व्यक्तिलाई यसरी सम्झाउनु पर्छ "तिमी डराउनु पर्दैन, मञ्जुश्रीबाट मारले कपट गरेर लिएका थिए, त्यस्तै आर्य वज्रपाणिले कठोरतापूर्वक चित्त उत्पाद गराएका थिए। तिनीहरू त वुद्धत्वलाभ गर्ने भइसके भने तिमीले त अभिरुचिले नै चित्त उत्पाद गरेका छौ। त्यसकारण तिमीलाई त भन्नै के पऱ्यो र?" यसरी ग्रहण गराउनु पर्छ। अहिले लिए पनि परलोकमा बिर्सिने होला कि भन्ने हो भने आफूले बिर्सिए पनि चित्त उत्पादले त छोड्दैन। जस्तै :- ठूलो पाप गरेर आफूले बिर्सियो भने पनि कर्मले न छोड्नाले

निश्चित रूपमै दुर्गतिमा परिन्छ। कठोर व्यक्तिसँग मित्रता गरेपछि उसले नरम पनलाई नचाहँदा नचाहँदै पनि नरमपनले उसलाई छोड्दैन। यस्ता थुप्रै दृष्टान्तहरू दिइएका छन्। आचार्य असंगले यस्तो भन्नुभएको छ, "प्रणिधि बोधिचित्तबाट वञ्चित नहुने हो भने आकाश, पाताल, जमीन जहाँ जन्मे पनि बोधिचित्त बिर्सिंदैन।" त्यस्तै जातकमा "कर्मविपाक अचिन्त्य हुन्छ करुणावानहरू पनि पशुयोनिमा जन्म लिनेरहेछन्, त्यसैकारण धर्मको चेतना बिग्रिँदैन" भनिएको छ।

चतुः शतकमा "यो जीवनमा तथता भावना गरेर सिद्ध भएन भने पनि अर्को जन्ममा धेरै प्रयत्न नगरेरै सिद्ध हुन्छ" भनिएको छ। यस प्रकार सिद्ध गर्न सजिलो हुने गरी बुझाएर चित्त उत्पाद गर्न लगाउनु पर्छ।

"छ पारमिता पूरा गर्न टाउको, खुट्टा, हात, आदि दान गर्ने आँट नभई नहुने रहेछ" भन्ने जस्ता कुराबाट उपायचर्या गर्नमा कष्ट हुने र त्रि-असंख्य कल्पसम्मको समय लाग्ने महायानमा अभ्यास गर्न सकिँदैन भन्ने हो भने त्यस्तालाई "महागुह्योपायकौशल सूत्र" को अनुसरण गर्दै शुरुमा एक डाडु पानी दान गर्ने वा बोधिचर्यावतारमा भनिए जस्तै शुरुमा साग आदि दान गर्ने र पछि क्रमशः बढ्दै जाने भन्नुपर्छ। बोधिचर्यावतारमा भनिएको छ -

**"आदौ शाकादि दानेऽपि नियोजयति नायकः।**
**तत्करोति क्रमात्पश्चाद् यत् स्वमांसान्यपि त्यजेत्॥**
**यदा शाकेष्वि वप्रज्ञा स्वमांसे ऽप्युपजायते।**
**मांसास्थि त्यजतस्तस्य तदा किं नाम दुष्करम्॥"**

अर्थात्, शुरुमा शागपात आदि दिन भनेर नाथले बताउनुभएको छ र क्रमशः सक्ने भएपछि आफ्नो मासु हाड पनि दिनुपर्छ। जब आफ्नो प्रज्ञाले आफ्नो मासुप्रति

पनि सागपातमा जस्तै देख्न थाल्यो भने दिन नसक्ने कुरै के रह्यो ?"

यसरी अभ्यास शुरु गर्ने व्यक्तिले पहिले सोचे अनुसार थोरै दान दिनुपर्छ। त्यसरी बानी बसाल्दै गएपछि अनुत्पन्नधर्मक्षान्ति लाभ गरियो भने आफ्नो शरीर र एक कचौरा तरकारीमा केही भिन्नता देखिदैन र शरीर दान दिइन्छ। यसमा तिमी डराउनु पर्दैन भन्नुपर्छ।

त्यस्तै शीलको अभ्यास गर्दाखेरि पनि उपवास अथवा चारओटा मूलःशीलहरूको चौबीस घण्टा अभ्यास गर्नेदेखि शुरु गरेर महिना, वर्ष आदि गर्दै जति सकिन्छ पालना गर्दै जाने र पछि पाप गर्न अह्राउँदा पनि गर्न नसक्ने भए पछि संवरशील आदि लिनुपर्छ।

त्यसैगरी क्षान्तिमा पनि एकदिन र आफ्ना नजिकैका इष्टमित्रदेखि शुरु गरेर बढाउनु पर्छ। वीर्यमा पनि दिनरात मात्रदेखि कुशल अभ्यास शुरु गरेर बढाउनु पर्छ। ध्यानमा पनि एक एक प्रहरदेखि बढाउँदै लग्ने हो भने ध्यानचित्त लाभ हुन्छ। प्रज्ञामा पनि एक एक श्लोक अध्ययन गर्दै अभ्यास गर्नाले पछि त्रिपिटकको अर्थलाई यथार्थ रूपमा बुझिन्छ। तिमी डराउनै पर्दैन भनेर सम्झाई उत्साह उत्पन्न गराएर धर्ममा प्रवेश गराउनुपर्छ। बोधिचर्यावतारमा भनिएको छ -

**"न किञ्चिदस्ति तद्वस्तु यदभ्यासस्य दुष्करम्।**
**तस्मान्मृदुव्यथाभ्यासात् सोढव्यापि महाव्यथा॥"**

"अर्थात् अभ्यासले गर्न नसकिने कुरा केही पनि हुँदैन। अतः सानो दुःख सहने देखि शुरु गरेर क्रमशः ठूलो दुःख सहने अभ्यास पनि गर्न थाल्नु पर्छ।"

(घ). समानार्थता : समानार्थता भनेको अरूलाई कुशल धर्ममा लगाउनको लागि आफू स्वयं पनि कुशल धर्ममा लाग्नु हो। जस्तै दानबाट अरूलाई जम्मा पारेर धर्म देशना गरी त्यसको अर्थमुताबिक अभ्यास गर्न लगाए पनि यदि आलस्य, प्रमाद आदिले गर्दा उसले अभ्यास गरेन भने आफू स्वयं त्यो (अर्थ, भावनामा) प्रवेश गरेर उसलाई गर्न उत्साहित गर्नुपर्छ। जस्तो कि गुरु र त्रिरत्नलाई सत्कार गर्दा महापुण्य हुन्छ भनेर गर्न लगाउँदा उसले नसक्ने कुरा गऱ्यो भने "त्यसो भए मैले त्यो गर्न चाहान्छु, तिमीले साथ देउला त ?" भनेर सोध्ने। त्यसमा उसले "त्यसो भए त म साथ दिउँला" भन्यो भने उसलाई प्रवेश गराउन सकिन्छ। यसरी बुझ्नुपर्छ।

पहिले शोभनकेश भन्ने बोधिसत्व थिए। उनी नगरमा प्रवेश गर्दा एउटा नारीले मरेको छोराको मूर्दालाई अँगालो हाली नछोडेको देखेर उनले पनि श्मशानबाट त्यस्तै एउटा मूर्दा खोजेर (आफूले बोकी) ती नारीको पछिपछि लागे। अनि ती नारीले पनि अशुभ देखिन् र दुवैले आ-आफ्ना लाश फालेका थिए।

त्यसो भए चार संग्रह वस्तुको अर्थ छ पारमितामा सम्मिलित हुँदैन र ? भन्ने हो भने अर्थ सम्मिलित हुन्छ तापनि मूलरूपमा आफूमा सम्पूर्ण बुद्धको धर्मलाई अधिगम गर्नको लागि छ पारमिताको चर्या भएको हो र अरू सत्वलाई परिपाक गराउने काम चार संग्रहवस्तु चर्याबाट हुने भएको हुनाले विरोध हुँदैन। त्यसैले सूत्रालंकारमा भनिएको छ -

**"दानं समं प्रियाख्यानमर्थचर्या समार्थता।**
**तद्देशना समादाय स्वानुवृत्तिभिरिष्यते॥**

दान, सम्मान अरूलाई दिएर, (धर्म) बताएर, लिन लगाएर, आफू स्वयं लागेर गर्नु नै दान प्रियवचन, अर्थचर्या, समानार्थता हो ।

३. संख्याको निश्चय : यसका चार संख्या मात्र किन भए भन्ने हो भने विनेयजनको तात्कालिक हितको लागि आमिषदान र अन्तको हितको लागि छ पारमिताका शब्दहरू धारण गराउन, त्यसको अर्थमा लागू गराउन र त्यही अर्थमा पटक पटक बानी लगाएर अनुसरण गराउनको लागि बाँकी तीनओटा हुन्छन् । यसरी संख्याचाहिँ चार नै निश्चित हुन्छ । त्यसमा पनि हित गर्ने उपाय, ग्रहण गराउने, प्रवेश गराउने र अनुसरण गराउने भएकाले पनि चार संग्रह वस्तु जान्नू भनिएको छ। अथवा पात्रयोग्य गराउन, अधिमुक्ति (विश्वास) गराउन, प्रतिपत्ति सिद्ध गराउन र विशोधन गर्नको लागि पनि चार संख्यामा निश्चित हुन्छ भनी सूत्रालंकारमा भनिएको छ -

**"आद्येन भाजनीभावो द्वितीयेनाधिमुच्यना ।**
**प्रतिपत्तिस्तृतीयेन चतुर्थेन विशोधना ॥"**

"पहिलो वस्तुद्वारा पात्रलाई योग्य गराउने, दोस्रोले विश्वास गराउने, तेस्रोले सिद्ध गराउने र चौथोले विशुद्ध पार्ने काम गर्दछ ।" त्यसैले त्रिकालबाटै संग्रह गरिएका सत्वपरिपाक गर्ने सबै उपायहरू यहाँ समेटिन्छन् । संग्रह गरिसकिएका, संग्रह गरिने, संग्रह गरिंदै रहेका सबै नै त्यस्तै हुनाले यो सत्वपरिपाक गर्ने उपाय हो ।

यीद्वारा अरू सत्वहरूको परिपाक गर्न चार संग्रह वस्तुको व्याख्या गरिसकेपछि सूत्रालंकारमा भनिएको "न्यामा[य्यसं]क्रान्ति र "क्षेत्रविशोधना"को अर्थलाई निर्णय गर्नको लागि अब बताइन्छ। न्यामा[य्यसं]क्रान्ति र क्षेत्रविशोधना आर्य धर्ममा लागू हुने भएकोले पाँच मार्ग र दश भूमिको व्यवस्थालाई पहिले बुझ्नुपर्छ ।

# भूमिमार्ग व्यवस्था

## मार्गव्यवस्था

मार्गको विषयमा दुई कुरा पर्छन् । १. मार्गको सामान्य लक्षण र २. प्रत्येकको स्वभावको निश्चय ।

१. मार्गको लक्षण:- विमुक्तिको तीर (किनारा) नै मार्गको सामान्य लक्षण हो । कसैले मार्गको लक्षण 'गमन गर्ने' हो भन्ने मान्छन् । तर त्यो उपयुक्त छैन । किनभने मार्गचाहिँ गतिको तीर जस्तो हो । 'गमन गर्ने' भनेको व्यक्तिमा लागू हुन्छ । त्यसैले त्यस्तो लक्षण मिल्दैन ।

२. प्रत्येकको स्वभावको निश्चय:- मार्गहरू पाँच प्रकारका हुन्छन् ।[११३] क) सम्भार मार्ग ख) प्रयोग मार्ग ग) दर्शन मार्ग घ) भावना मार्ग र ङ) अशैक्ष मार्ग । यिनीहरू पनि श्रावक र महायानका गरी दुई किसिमका छन् ।

## (क) सम्भार मार्ग

महायानको अनुसार बताउँदा सम्भार मार्गको विषयमा पनि चार कुरा बताइन्छ । १. लक्षण, २. भेद, ३. स्वभावको निश्चय र ४. शब्दार्थ ।

---

[११३] यहाँ दिएको पञ्चमार्गको क्रम मूल सर्वास्तिवाद आदि श्रावक निकायमा पनि पाइन्छ भने थेरवादमा यसैलाई प्रकारान्तरले सप्तविशुद्धि भनेर सात विशुद्धि क्रममा बाँडिएको देखिन्छ । यहाँ यो पनि बुझ्नुपर्छ कि स्थविरवादबाट मूल सर्वास्तिवाद र विभज्यवाद गरी दुई शाखाहरू भएका हुन् भने फेरि विभज्यवादबाट पछि आएर हालको थेरवाद उत्पन्न भएको हो ।

१. लक्षण :- निर्विकल्प विमुक्तिको किनारा (तीर) लाई सामान्य तरिकाबाट अनुमानबाट भावना गर्न शुरु गर्नु यसको लक्षण हो ।

२. भेद:- यसका भेदहरू तीन किसिमका छन् : अधम संभार मार्ग, मध्यम सम्भार मार्ग र उत्तम सम्भार मार्ग ।

चार स्मृत्युपस्थान भावना गर्दा प्रयोग मार्गमा पस्ने निश्चित नभएको अधम सम्भार मार्ग हो ।

चार सम्यक् प्रहाण भावना गर्दा प्रयोग मार्गमा पस्ने निश्चित भएको मध्यम सम्भार मार्ग हो ।

चार ऋद्धिपाद भावना गरी त्यसैबाट प्रयोग मार्गको उष्मा उत्पन्न हुने निश्चित भएको उत्तम सम्भार मार्ग हो ।

३. स्वभावको निश्चय:- यसभित्र चार कुरा बुझ्नुपर्छ ।

क) कहाँको व्यक्तिमा उत्पन्न हुन्छ ? अभिधर्म आदिका अनुसार साधारण यानमा तीन[११४] द्वीपका पुरुष र नारीमा मात्र सम्भार मार्ग उत्पन्न हुन्छ। अरू[११५] गतिका र पण्डक[११६] मा उत्पन्न हुँदैन भन्ने मानिन्छ ।

ख) कुन भूमिमा आश्रित हुन्छ ? पृथग्जनको शील कामभूमिमा आश्रित हुन्छ। समय समयमा योगमा प्रयत्न गर्नेहरूको शील छ ओटा ध्यान भूमिमा अथवा कामधातुको

---

११४ यहाँ तीन द्वीप मात्र भनेको उत्तरपट्टिको कुरुद्वीपलाई छोडेर भनेको त्यहाँ दु:ख हुँदैन र अनित्य, दु:ख-अनात्मा आदिको भावना गर्न सम्भव न त्यहाँबाट मार्ग उत्पन्न हुन सक्दैन ।

११५ मनुष्य लोकबाहेक अरू लोकका सत्वहरूले प्रथमपटक बौद्ध धर्ममा सक्दैनन् । यदि पहिलेका बुद्धहरूसँग शरण लिइसकेका त्वहरू काम धातु बनेका रहेछन् भने त अभ्यास चालू गर्न र स्रोत आपन्न आदि हुन पनि सक्छ.

११६ पण्डक भनेको नपुंसक, हिजडा आदि हो ।

चित्त[117] एकाग्रतमा (समाधि) आश्रित हुन्छ। त्यसका हेतु हुन गएका अरू कुशल कर्म चाहिँ काम भूमिमा आश्रित हुन्छन्।

ग) कस्तो विषयलाई आलम्वन गर्छ ? पृथग्जनको शीलले काय र वाक्को प्रवृत्ति र निवृत्तिलाई आलम्वन गर्छ। समय समयमा योगमा प्रयत्न गर्नेहरूले अशुभ भावना[118] आदि चर्याविशोधनको आलम्वन गर्छन् र स्मृति प्रस्थान[119] भावना गर्नेले काय आदिलाई आलम्वन गर्छन्। त्यसको हेतु हुन गएको कुशलले चाहिँ अरूका ग्रन्थ, शव्द र अर्थलाई आलम्वन गर्छन्।

कसैले सम्भार मार्गमा भावनामयी प्रज्ञा हुँदैन भनेको पनि ठीक छैन। किनकि समुच्चयमा यस्तो भनिएको छ, "हेतु हुन गएका अरू कुशल, श्रवण, चिन्तन, भावनाद्वारा भएको प्रज्ञा पनि त्यस्तै भावना[120] गरेरै साक्षात्कार भएको हो र विमोक्ष हुने स्थानका पात्र नै हुन्।"

घ) शब्दार्थ यस्तो छ - सं = सन्तान, भा = भाव, र = रति। अर्थात् अटूट रूपमा पटक पटक भावना गर्नु भनेको हो। मार्ग = गतिको किनारा। अतः सम्भार मार्ग भनिएको हो। अथवा सम्भार भनेको पुण्य र ज्ञान सम्भार हुन् र त्यो भावना गर्नाले मोक्षभागीयमा लाग्ने भएकोले

---

११७ कामधातुको चित्तएकाग्रता भनेको उपचार समाधिलाई हो।

११८ अशुभभावना आदि भन्नाले दश कात्स्न्यं (कसिण) लगायनका चालीस कर्मस्थान हुन्।

११९ चार स्मृत्युपस्थानहरू। डा. लेदी सयादोले The manuals of Buddhism मा व्यतिक्रमण शीलबाट, पर्युत्थान शमथबाट र अनुशय विपश्यनाबाट काटिन्छ भन्ने उल्लेख गर्नुभएको छ।

१२० यो लौकिक भावनामयी प्रज्ञालाई भनेको हो र लोकोत्तर भावनामयी प्रज्ञाको हेतुस्वरूप भएको हुनाले सम्भार मार्गमा पनि भावनामयी प्रज्ञा हुन्छ भनिएको हो।

सम्भार भनिएको हो। मोक्ष भनेको निर्वाण हो र त्यससँग मिल्दो मनस्कार[१२०] गर्ने भएर मोक्षभागीय भनेको हो।

श्रावकले उपादान स्कन्धलाई रोग र चिलाउने आदि दोषको रूपमा देख्छन् भने महायानीले निःस्वभावता बुझेकाले दूषणको उपचार हुन्छ भन्ने देख्छन्।

**(ख) प्रयोगमार्ग**

लक्षणः- सम्भार मार्गले सिद्ध गरेको विमुक्तिको किनाराको निर्विकल्प ज्ञानलाई सामान्य तरिकाले भावना गर्नु यसको लक्षण हो।

भेदः- यसका भेद तीन किसिमका छन्। सम्भार-प्रयोगद्वारा भेद, उत्तम मध्यमद्वारा भेद र बोध गर्ने तरिकाद्वारा भेद।

सम्भार प्रयोगद्वारा भेद

यी पनि दुई प्रकारका छन् सम्भार भएर प्रयोग पनि हुनु, सम्भार नभएर प्रयोग मात्र हुनु।

सम्भार भएर प्रयोग पनि हुनु भनेको सम्भार मार्गको सन्तान प्रयोग मार्गमा पनि हुनु हो।

चार सत्य र दुइ नैरात्म्य[१२२]लाई प्रयोगद्वारा जोडिएकोले साक्षात् सम्भार मार्ग नहुने हुँदा त्यो सम्भार हुँदैन (र प्रयोग मात्र हुन्छ)।

उत्तम मध्यमद्वारा भेद :- यसका तीन प्रकारहरू अधम, मध्यम र उत्तम मध्ये अधम प्रयोग मार्ग भनेको दर्शन मार्ग उत्पन्न हुने निश्चित नभएको मार्ग हो र मध्यम प्रयोग मार्ग भनेको दर्शन मार्ग उत्पन्न हुने निश्चय भएको

---

[१२१] यसले जनाउँछ कि यो भावना (सविकल्पक) conceptual हुन्छ।

[१२२] धर्मनैरात्म्य र पुद्गलनैरात्म्य हुन्।

हो र उत्तम प्रयोग मार्ग भनेको यही जीवनमा नै दर्शन मार्ग उत्पन्न गराउने हो ।

बोध गर्ने तरिकाद्वारा भेद :- यी चार प्रकारका छन् ।

१. उष्मा २. मूर्धा ३. क्षान्ति ४. लौकिकाग्रधर्म ।

१. उष्मा

काठलाई घोट्दा आगो बल्ने लक्षण तातो भए जस्तै दर्शनमार्गको निर्विकल्प ज्ञान उत्पन्न हुने चिन्ह (लक्षण) भएको अवस्थालाई उष्मा भनिन्छ ।

२. मूर्धा

मूर्धा भनेको शिखर, टुप्पो, या एकपल हो। कुशलमूलको चल मध्येको पनि शिखर या टुप्पो हुन गएकोले मूर्धा भनिएको हो। यो लाभ भएमा कुशलमूल[१२३] कार्टिदैन भनेर अभिधर्मकोषले भनेको छ। लामो समयसम्म नरहने भएकोले 'एकपल' अर्थात् 'मूर्धा' भनिन्छ भन्नेहरू पनि छन् ।

३. क्षान्ति

क्षान्ति[१२४] भनेको शून्यतामा भय नहुनु हो ।

४. लौकिकाग्रधर्म

लोकका धर्महरूमध्ये अग्र (श्रेष्ठ) हुन गएकोले लौकिकाग्र धर्म भनिएको हो। यो अनास्रव दर्शनमार्गको

---

१२३ योभन्दा अगाडिको चित्त अवस्थामा आफ्ना कुशलमूलहरू कहिल्यै पनि काटिदैनन् भन्ने ग्यारेन्टी हुँदैन। कुशलमूल भनेका अद्वेष, अलोभ र अमोह हुन् र विशेष गरी महायानमा कुशलमूल भनेका बोधिचित्तोत्पाद, आशयविशुद्धि र अहंकार - ममकारपरित्याग पनि मानिएका छन् ।

१२४ यहाँ 'क्षान्ति' भनेको क्षान्तिपारमिताको 'सहनु' भन्ने अर्थ नभएर शून्यताप्रति उत्पन्न हुने 'रुचि' हो। यो कुरा अभिधर्मकोषमा पनि स्पष्ट बताइएको छ ।

अधिपति प्रत्यय हो। चारै ओटा निर्वेधभागीयहरूमा प्रयोग मार्गका चारचार ओटा धर्महरू हुन्छन्। त्यसमा ऊष्माको आलम्बनको बारेमा अभिधर्मसमुच्चयमा "प्रत्येक आफ्नो सत्यहरूमा" भनिएको हुँदा त्यो अवस्थामा अरूद्वारा देखाइएको नभएर स्वयं आफूले भावना गरेको बलले आधार व्यक्तिको आ-आफ्नो चार आर्य सत्यलाई आलम्बन[१२५] गर्दछन्। त्यसमा पनि व्यवस्थित सत्यलाई मात्र आलम्बन गर्छन् न कि अव्यवस्थित सत्यलाई। ऊष्माको आकारमा ग्राह्यलाई निःस्वभाव भन्ने बुझ्दछन् या निर्विकल्प आदि 'आलोक' लाभ हुन्छ।

ऊष्माको स्वभाव समाधि र प्रज्ञा हुन्। त्यो बेलाको समाधिमा पनि आलम्बनमा चित्त एकाग्र हुनु समाधीन्द्रिय हो, स्पष्टाभास भएर समारोपलाई[१२५] काट्नुचाहिँ प्रज्ञेन्द्रिय हो। यी दुई यहाँ मूल हुन्छन् अरू श्रद्धा, वीर्य, स्मृति यी तीन इन्द्रियहरू पनि यिनीहरूकै परिवारमा हुन्छन्। त्यसका सारथि ती इन्द्रियहरूसँग समान रूपमा रहेको चित्त, मनोविज्ञान, चैतसिक, स्प्रष्टव्य आदि हुन्।

मूर्धाको आलम्बन पनि अघि भने जस्तै चार आर्यसत्य हुन्। आकार चाहिँ आलोक र वृद्धि हुन्, स्वभाव पनि समाधि र प्रज्ञा हुन्, सारथि पनि यिनीहरूसँग समान रूपमै रहेका चित्त र चैतसिक हुन्।

---

१८ सम्भार मार्गमा अरूले बताएको आधारमा चार आर्य सत्यको बुझाई भएको हुन्छ भने यहाँ आएपछि स्वयं आफैंले भावना गरेको बलले आफ्नै बुझाई हुन थालेको हुन्छ। परन्तु यो पनि सविकल्प नै हुन्छ। यही हो सम्भारमार्ग र प्रयोगमार्गको मूल भिन्नता।

१९ समारोप भनेको धर्महरूमा स्वभावसिद्धताको आरोप गरेर देख्नु हो।

क्षान्तिको आलम्बन पहिलेको जस्तै हो र आकार चाहिँ एकपक्षानुगत हो, स्वभाव समाधि र प्रज्ञा हुन्, सारथि यिनीहरूसँग समान रूपमा रहेका चित्त-चैतसिक हुन् ।

लौकिकाग्रधर्मको आलम्बन पहिलेको जस्तै हो, आकार अग्राह हो, स्वभाव समाधि र प्रज्ञा हुन्, सारथि यिनीहरूसँगै समान रूपमा रहेका चित्त चैतसिक नै हुन् ।

यसमा वैभाषिक र सौत्रान्तिक अनुसार श्रावक र प्रत्येकबुद्धका प्रयोगमार्गको आलम्बन र आकारमा भेद नमानिएकोले अभिधर्मसमुच्चयमा पनि आलम्बन र आकारमा भेद बताइएको छैन । केही महायानीहरूले तीनै यानको प्रयोगमार्गलाई यसरी मान्छन् कि श्रावकले ऊष्मा र मूर्धाद्वारा पुद्गल-आत्माको ग्राह्यलाई निःस्वभाव बोध गर्छन्, क्षान्ति र लोकाग्रधर्मद्वारा पुद्गल आत्माको ग्राहकलाई निःस्वभाव बोध गर्छन् । प्रत्येकबुद्धले ऊष्मा र मूर्धाद्वारा पुद्गल-आत्मा र धर्म-आत्माको केही पक्षका ग्राह्यको निःस्वभाव बोध गर्छन् । क्षान्ति र लौकिकाग्रधर्मद्वारा पुद्गल-आत्मा र धर्म आत्माको केही पक्षको ग्राहकलाई निःस्वभाव बोध गर्छन् । बोधिसत्वले ऊष्मा र मूर्धाद्वारा पुद्गल आत्मा र धर्मात्मा दुवैको निःस्वभावता बोध गर्छन् । क्षान्ति र लौकिकाग्रधर्मद्वारा पुद्गलात्मा र धर्मात्मा दुवैको ग्राहकको निःस्वभावतालाई बोध गर्छन् । कसैले महायानको असाधारणमत सूत्रालंकारको वृत्तिमा बोधिसत्वको प्रयोग मार्गमा सूत्रअनुसार ऊष्मालाई आलोक-प्राप्ति समाधि, मूर्धालाई आलोक-वृद्धि समाधि, क्षान्तिलाई तथताको एक छेउमा प्रवेश गरेको समाधि र लौकिकाग्र-धर्मलाई तत्कालीन समाधि हुन् भन्ने मान्दछन् । आर्य नागार्जुनका अनुसार तीन किसिमका प्रज्ञापारमिताको मतअनुसार तीनै यानको प्रयोग मार्गमा उपायको फरक र आ-आफ्नो

चारओटा निर्वेधको आलम्बनको स्पष्टता र अस्पष्टता वाहेक अनात्माको बोधमा फरक मानिंदैन। किनकि प्रज्ञापारमितामा भनिएको छ "श्रावकको भूमिमा अध्ययन गर्नेले पनि प्रज्ञा पारमितामा नै अध्ययन गर्नुपर्छ ..... र जो सुगत बन्न चाहन्छ, श्रावक बन्न चाहन्छ, प्रत्येक-वुद्ध वन्न चाहान्छ, धर्मराज बन्न चाहन्छ उसले यो क्षान्तिमा आश्रय नलिएर प्राप्त गर्न सक्दैन।"

स्वभावको निश्चय

क) प्रयोगमार्ग कहाँको व्यक्तिमा उत्पन्न हुन्छ ? तीन द्वीपमा जन्मेका पुरुष र नारी, तथा ६ जातका कामधातु देवहरूमा उत्पन्न हुनसक्छ। किनकि पहिले मानिसकै चोलामा सम्भार मार्ग उत्पन्न भएपछि कामधातु देवलोकमा जहाँ जन्मे पनि प्रयोग मार्ग उत्पन्न हुन सक्छ। असाधारण मतको महायानअनुसार पशुअन्तर्गत पर्ने कोही कोही नाग आदिमा पनि प्रयोगमार्ग उत्पन्न हुन सक्छ।

ख) प्रयोगमार्ग कुन भूमिमा आश्रित हुन्छ ? ध्यानका ६ भूमिहरूमा आश्रित हुन्छ। प्रथम ध्यानको उपचार, अर्पणा, विशेष अर्पणा[१२७] र वाँकी तीन ध्यानका तीन अर्पणाहरूमा आश्रित हुन्छ। त्यसमध्ये पहिले नै कामरागबाट मुक्त नभएको भए ध्यानको उपचारमा आश्रित हुन्छ भने कामरागबाट मुक्त भएको भए अर्पणामा आश्रित हुन्छ। वर्गचारी भनिने प्रत्येकवुद्धहरूको ध्यानका ५ भूमिमध्ये कुनैमा आश्रित हुन्छ भने 'खड्ग' भनिने प्रत्येकवुद्धको त चतुर्थ ध्यानको अर्पणाभूमिमा आश्रित हुन्छ। वोधिसत्वको

---

१२७ विशेष अर्पणा भनेको वितर्करहित भई विचारसहितको द्वितीय ध्यानको अर्पणा हो। पाली अभिधम्ममा यसकै आधारमा चार रूपध्यानको सट्टा पाँचरूपध्यान पनि मानिएको हुन्छ।

प्रयोगमार्गलाई अभिधर्मकोषअनुसार वैभाषिकहरूले "शास्ता र खड्गहरूको बोधि त अन्तिम ध्यानमा आश्रित हुन्छ" भनेकोले चतुर्थ ध्यानमा आश्रित हुन्छ भनेर मानिन्छ।

कुनै महायानीहरूले चार ध्यानमध्ये कुनैको पनि अर्पणामा आश्रित हुन सक्छ भन्ने मान्छन्।

संख्याको निश्चय

सौत्रान्तिक मतअनुसार ग्राह्यलाई निःस्वभाव बोध गर्नु उष्मा, मूर्धा र क्षान्ति हुन् भने ग्राहकलाई निःस्वभाव बोध गर्नु लौकिकाग्र धर्म हो र यसरी (प्रयोगमार्ग) चार किसिमका हुन्छन्। त्यसमध्ये ग्राह्यको निःस्वभाव बोध गरेकोमा पनि अल्प आलोकवान् ऊष्मा, मध्यम आलोक वृद्धि मूर्धा र उत्तम दृढबोध क्षान्ति हुन्। यसमा पनि कुनै महायानीहरूले यसरी मान्छन् :- उष्मा र मूर्धाले ग्राह्यको निःस्वभाव बोध गर्छ, क्षान्ति र लोकाग्रधर्मले ग्राहकको निःस्वभाव बोध गर्छ। त्यसमा पनि संक्लिष्ट पक्षको ग्राह्यलाई निःस्वभाव बोध गर्नु उष्मा र व्यवदान पक्षको ग्राह्यलाई निःस्वभाव बोध गर्नु मूर्धा हो। ग्राहकको निःस्वभाव बोध गर्नुमा पनि पुद्गललाई द्रव्यसत् ठान्ने ग्राहकको निःस्वभाव बोध गर्नु क्षान्ति, पुद्गललाई नाममात्रको (प्रज्ञप्तिसत्) हो भन्ने ठान्ने ग्राहकको निःस्वभाव बोध गर्नु लौकिकाग्रधर्म हो भन्ने मान्छन्। त्योचाहिँ अभिसमयालङ्कारमा बताइएअनुसार हो। जस्तै - "**द्वैविध्यं ग्राह्य वस्तुतत्प्रतिपक्षतः।**" र "**द्रव्यप्रज्ञप्त्यधिष्ठानो द्विविधो ग्राहको मतः।**"

यी प्रयोगमार्गहरू क्षान्तिबाहेक अरूको विषयमा अभिधर्म समुच्चय र अभिधर्मकोष दुवैमा मिल्ने गरी उत्तम, मध्यम र अधम गरी तीन भेद गरिएको छैन।

लौकिकाग्रधर्ममा सन्तान[१२८] पनि मानिँदैन। अभिधर्मकोषमा भनिएको छ "जसरी महाक्षान्ति एकै क्षणको हो त्यस्तै लोकाग्रधर्म पनि।" त्यसकारण यसलाई एकै आसनको समाधि पनि भनिन्छ भनेर बताइएको हुन्छ। कुनै महायानीको मतमा चारै ओटा निर्वेधभागीयलाई उत्तम, मध्यम र अधम गरी भेद गर्दा जम्मा बाह्र थरी हुन्छन् भन्ने मानिन्छ। अभिसमयालंकारमा "अधम, मध्यम र उत्तम गरी" भनिएको छ। त्यसैले लौकिकाग्रधर्ममा पनि सन्तान हुन्छ। यी चारओटा निर्वेधभागीयहरू कुन बुद्धिमा समेटिन्छन् ? भन्दा कसैले, यो योगिप्रत्यक्ष हो किनभने अष्टसाहस्रिका प्रज्ञापारमिताको वृत्तिमा "निर्वेधभागीयको अवस्थामा स्पष्टाभास हुन्छ। यदि विकल्प सहित छ भने स्पष्टाभास हुँदैन" भनिएको छ भन्छन्। यसमा विचार गर्दा गौण योगिप्रत्यक्ष हो भने नाममात्रमा शास्त्रार्थ गरिँदैन र साँच्चै नै योगिप्रत्यक्ष हो भने दर्शनमार्ग हुनजान्छ।

यदि दर्शनमार्ग सबै धर्म, धातु आगमको प्रत्यक्ष हो र प्रयोगमार्गचाहिँ केही मात्र प्रत्यक्ष हो भन्ने हो भने पहिले बोध नगरेको धर्मधातुको दर्शन भए त्यसमा दर्शनमार्गको लक्षण लागू हुन्छ। वैपुल्य (विस्तार) को कारणले दर्शन मार्ग मान्ने हो भने भावनामार्ग पनि दर्शनमार्ग बन्न जान्छ। त्यसैले पहिले प्रत्यक्ष नभएको धर्मताको पहिलो पटक दर्शन भएकोले नै दर्शनमार्ग भनिन्छ, वैपुल्य देखेर दर्शनमार्ग हो भन्ने त कहीँ बताइएको छैन। कसैले भन्छन् 'यो प्रत्यक्ष उत्पन्न हुनको लागि आर्य नै हुनुपर्छ भन्ने छैन'। परन्तु त्यसो भन्नु त आगम र युक्तिसँग परिचित नहुनु मात्र हो।

---

[१२८] चित्तक्षणको सन्तान भनेको हो। पालि परम्परामा यो लौकिकाग्रधर्मलाई 'गोत्रभू' भनिन्छ।

उसोभए 'स्पष्टाभास' भनेकोसँग विरोध हुन्छ भन्ने हो भने त्योसँग विरोध हुँदैन । जस्तै :- अचानक धूवाँ देख्दा अनुमान प्रमाणद्वारा अग्नि छ भन्ने स्पष्टै थाहा हुन्छ भन्ने ख्याति छ अथवा 'त्यो भिक्षु श्रुतमयी र चिन्तामयी प्रज्ञाद्वारा स्पष्ट विद्वान् र उदारचित्तको छ' भन्दा खेरिको 'स्पष्ट' शब्द अतिभावनावाट लागू भएको हो र प्रत्यक्ष भएर लागू भएको होइन ।

त्यसमा पनि प्रत्यक्ष भनेको त विकल्परहित र अभ्रान्त हुन्छ भने निर्वेधभागीय चाहिं विकल्पसहित हुन्छ भन्ने मध्यान्तविभागमा बताइएको छ । कसैले भन्छन् "आगममा आश्रित भएको चित्त विचार हो ।" तर त्यो मिल्दैन किनकि हामीले पहिले नै (प्रमाणयुक्तिनिधिमा) चित्तविचारको खण्डन गरिसकेका छौं । कसैले भन्छन् "मानसप्रत्यक्ष र स्मृति विचारको विषय हो" । तर त्यसो भन्नु तर्क नवुझ्नु मात्र हो । अतः मेरो विचारमा तीनओटा प्रज्ञाद्वारा भावना गरिएको स्वसंवेद प्रत्यक्ष हो । जस्तै :- रागआदि भावनाको स्वसंवेद ।

शव्दार्थ

'प्र' भनेको परमार्थ हो र योग भनेको निवन्ध याने सन्धि गराउने हो । अर्थात् दर्शनमार्गको परमार्थ धर्मधातुको प्रत्यक्ष दर्शन गर्न प्रवन्ध मिलाउने हुनाले प्रयोग मार्ग भनिएको हो ।

**(ग) दर्शनमार्ग**[१२९]

दर्शनमार्गमा पनि लक्षण, भेद, स्वभावको निश्चय र शव्दार्थ गरी चार प्रकारका कुरा छन् ।

---

[१२९] थेरवाद परम्परामा 'स्रोत आपन्न' भनिन्छ भने अन्य केही श्रावक निकाय र महायानमा दर्शनमार्ग भनिन्छ ।

लक्षण:- पहिलोपल्ट धर्मधातुको किनारामा स्पष्टाभास उत्पन्न हुनु यसको लक्षण हो ।

भेद:- श्रावक, प्रत्येकबुद्ध र बोधिसत्वको दर्शन मार्ग गरी तीन प्रकारका दर्शनमार्ग हुन्छन् ।

स्वभावको निश्चय:- यसमा दुई कुरा पर्छन् । (क) दर्शनहेयहरूलाई त्याग्ने तरिका र (ख) दर्शनमार्ग उत्पन्न हुने व्यवस्था ।

(क) दर्शनहेयहरूलाई त्याग्ने तरिका :- यसमा तीन कुरा पर्छन् । (अ) हेयका लक्षण (आ) हेयका भेद (इ) हेयलाई उपचारद्वारा त्याग्ने तरिका

(अ) हेयको लक्षणलाई सामान्य रूपमा भन्ने हो भने चित्तसन्तानलाई अशान्त पार्ने नै क्लेश (हेय) हुन् । दर्शनहेयको लक्षण चाहिँ परिकल्पनाद्वारा अशान्त पार्नु हो ।

(आ) हेयको भेद गर्ने हो भने मूलक्लेश र उपक्लेश छन् । त्यसमध्ये मूलक्लेशलाई त्याग्दा उपक्लेशहरू स्वयं नै त्यागिने हुनाले मूलक्लेशलाई बताइन्छ । यसमा ६ प्रकारका क्लेश पर्छन् १. राग २. प्रतिघ ३. मान ४. अविद्या ५. विचिकित्सा र ६. कुदृष्टि । त्यसमा कुदृष्टि भित्र पनि पाँच प्रकारका दृष्टि पर्छन् १. सत्कायदृष्टि २. अन्तग्राहदृष्टि ३. दृष्टिपरामर्श ४. शीलव्रतपरामर्श ५. मिथ्यादृष्टि ।

प्रहाण गर्नुपर्ने हिसाबले हेर्ने हो भने दर्शनहेय र भावनाहेय गरी यिनीहरू दुई वर्गमा पर्छन् । त्यसमध्ये पहिलो दर्शनहेयको बारेमा अभिधर्मकोषमा वैभाषिकको मतअनुसार यस्तो भनिएको छ - "यिनीहरू दश, सात, आठ, दुई र तीन दृष्टिवाहेक काममा दुःख आदिलाई दर्शनले क्रमशः त्यागिन्छ ।" यसप्रकार ८८ ओटा भनिन्छ ।

"गाथा" मा (असंगको) दर्शनहेयक्लेशहरू चौरान्नब्बे ओटा वताइएका छन् । अभिधर्मसमुच्चयअनुसार कामधातुका

पाँचओटा संक्लेश र दृष्टि मिलाएर हुने पाँचओटा गरी दशओटा र यी दशैओटालाई प्रत्येक चार आर्यसत्यसँग लागू गर्दा चालीसओटा हुन्छन्। फेरि दुई उच्च धातुहरूमा प्रतिघ नहुनाले नौओटा हुन्छन् र यी पनि चार आर्यसत्यको विपरीत ढंगले लागू हुनाले ३६ ओटा हुन पुग्छन्। अतः जम्माजम्मी ११२ ओटा क्लेश हुन्छन्।

त्यसो भए, अरूपधातुमा काय र वाक्‌को चर्या (शीलव्रतपरामर्श) नहुनाले दर्शनहेयहरू १०८ मात्र हुन जान्छन् भन्ने हो भने त्यस्तो हुँदैन। किनकि त्यहाँ, काय, वाक्‌को चर्यालाई मुक्तिको हेतु नमानिए तापनि दृष्टिलाई मुक्तिको हेतु मानिएकोले शीलव्रतपरामर्श भनेर नाम लिएको हो। त्यसोभए यहाँ 'दृष्टिपरामर्श' हुँदैन ? हुँदैन। किनभने दृष्टिपरामर्शको आकारले 'अग्र' 'मूल' आदि धारण गर्छ भने शीलव्रतपरामर्शको आकारले 'मुक्ति' आदिलाई धारण गर्ने भएकोले धारण गर्ने तरिकामा भिन्नता छ।

त्यसोभए दुःख र दुःखसमुदय त्रिधातुभित्र परे पनि निरोध र अनास्रव मार्ग त्रिधातुभित्र नपर्ने भएकोले प्रत्येक त्रिधातुको निरोध र मार्गलाई राख्न मिल्दैन भन्ने हो भने "गाथामा" यस्तो बताइएको छ कि हेय 'दुःख' र 'समुदय' कामधातुको भएकोले दुःख र समुदयको पनि निरोध हुँदा कामधातुको निरोध भन्ने नामकरण गरी त्यसलाई प्रत्यक्ष गर्ने उपायलाई पनि कामधातुको मार्ग भन्ने नामकरण गरिएको छ। उच्च दुई धातुका निरोध र मार्ग पनि त्यस्तै हुन्।

त्यसोभए अभिधर्मसमुच्चयमा दर्शनहेयहरू ११२ ओटा बताइएको र 'गाथामा' ९४ भनेर बताइएकोमा परस्पर विरोध भएन र ? यसमा कसैले त्यो योगाचारी र सौत्रान्तिकको मत हो भन्छन्। परन्तु त्यो मत होइन।

उसोभए के हो त ? स्थूल र सूक्ष्म व्यवस्था अलग अलग सूत्रका मत नै हुन् ।

(ई) उपचारद्वारा हेयलाई त्याग्ने तरिका– श्रावकका अनुसार कोषमा यस्तो भनिएको छ, "निरोध हुने मार्गले नै (ती हेयलाई) त्यागिन्छ ।" साधारणयानमा त्यसैलाई बंग्याएर "उत्पन्न हुने मार्गले त्यसको आवरणलाई त्याग्छ ।" अर्थात् उत्पन्न हुने उपचार मार्गले त्याग गर्छ भन्ने मान्दछन् । महायानको असाधारण मतअनुसार परमार्थमा हेय र उपचार दुवै असिद्ध हुने भएकोले अभिसमयालंकारमा -

**"नापनेयमतः किंचित् प्रक्षेप्तव्यं न किंचन ।**

**द्रष्टव्यं भूततो भूतं भूतदर्शी विमुच्यते ॥**

र बोधिचर्यावतारमा

**"एवं शून्येषु धर्मेषु किं लब्धं किं हृतं भवेत् ।"** भने अनुसार हो ।

संवृत्तिमा पनि विचार गर्दा उपचारले हेयलाई त्यागेको ठहरिँदैन । किनकि हेय रहँदा उपचार हुँदैन र उपचार उत्पन्न हुँदा हेयको निरोध भैसकेको हुन्छ । एकै समयमा भेट हुन सक्दैन । विचार नगरेको बुद्धिको सम्मुखमा ज्ञान उत्पन्न हुनु नै हेयलाई त्यागियो भनी व्यवहारमा मानिन्छ । तराजुको दण्डी तलमाथि गरे जस्तै हो ।

(ख) दर्शन मार्ग उत्पन्न हुने व्यवस्था

यसमा (अ) कहाँको व्यक्तिलाई उत्पन्न हुन्छ ? (आ) कुन भूमिमा आश्रित हुन्छ ? (इ) कुन विषयलाई कस्तो तरिकाले बोध गर्छ ? र (ई) कति क्षण उत्पन्न हुन्छ भन्ने कुरामा विचार गरिन्छ ।

(अ) तीन द्वीपका पुरुष, नारी र देवतामा उत्पन्न हुन्छ किनकि तीक्ष्ण इन्द्रिय भएर बुद्धको आगम त्यहाँ हुनाले ठूलो वैराग्य उत्पन्न हुने हुन्छ ।

दुर्गतिमा उत्पन्न हुँदैन किनकि त्यहाँ विपाक कर्मका धेरै आवरणहरूले ढाकिएको हुन्छ भनेर अभिधर्मकोषमा भनिएको छ। जस्तै : उत्तर कुरुमा उत्पन्न हुँदैन किनकि त्यहाँ वैराग्य नहुनु जस्तो उच्च धातुहरूको समान अवस्था हुन्छ। महायानको असाधारणमतमा अरू गतिमा पनि उत्पन्न हुन्छ भन्ने देशना गरेको पाइन्छ।

(आ) दर्शनमार्ग आश्रित हुने भूमिहरूमा[१३०] श्रावकको दर्शन मार्ग ६ ओटा ध्यानभूमिमध्ये कुनैमा आश्रित हुन्छ। त्यसमा पनि पहिले नै वीतराग नभएको रहेछ भने प्रथमध्यानको उपचारमा आश्रित हुन्छ र पहिले वीतराग भएको रहेछ भन्ने प्रथम ध्यानको अर्पणमा आश्रित हुन्छ। कामभूमिमा आश्रित हुँदैन किनकि दर्शनमार्गको लागि शमथ र विपश्यना समानरूपमा रहेको हुनुपर्छ परन्तु कामभूमिमा शमथ कम हुन्छ र चञ्चलता धेरै हुन्छ। फेरि अरूप भूमिमा विपश्यना अति कम हुने भएकोले त्यहाँ पनि आश्रित हुँदैन। द्वितीय ध्यानको उपचारमा जोड गर्ने हो भने उत्पन्न हुन त सक्ला तर शमथ कम हुने भएकोले उत्पन्न हुन कठिन हुन्छ। त्यसोभए प्रथमध्यानको उपचारमा पनि त्यस्तै हुँदैन त ? हुँदैन। किनकि दर्शनमार्ग उत्पन्न हुन ध्यानको अर्पणा-चित्तमा आश्रय लिनुपर्ने हुन्छ र अर्पणा उत्पन्न भएन भने प्रथम ध्यानको उपचारमा नै सजिलो हुन्छ तर द्वितीय ध्यानको उपचारमा होइन। किनकि त्यो भन्दा पहिले प्रथम ध्यानको अर्पणमा नै सजिलो हुने भएकोले द्वितीय ध्यानको उपचार नै चाहिँदैन। श्रावकका स्रोतआपन्न, सकृदागामी र

---

१३० थेरवाद अनुसार ध्यानलाभीहरूले चार ध्यान र तीन अरूपमध्ये जुनसुकै ध्यानलाई पनि पादका बनाएर स्रोत आपन्न हुन सक्छन् भन्ने मानिन्छ।

अनागामीका दर्शनमार्ग कुन भूमिमा आश्रित हुन्छन् भन्ने बारेमा विस्तारभयले गर्दा यहाँ लेखिँदैन ।

प्रत्येद्धबुद्धको दर्शनमार्ग कुन भूमिमा आश्रित हुन्छ भने वर्गचारीहरू ६ ओटा ध्यानभूमिमध्ये कुनैमा आश्रित हुन्छन् र खड्गहरू चतुर्थध्यानको अर्पणामा आश्रित हुन्छन् । त्यसोभए खड्गहरू यहाँबाट च्युत भएपछि फेरि कामधातुमा जन्म लिनु नपर्ने हो किनकि तृतीयध्यानसम्मका क्लेशहरू त्यागिसकेका हुन्छन् भन्ने हो भने त्यसो भन्नु मिल्दैन । किनकि कर्मद्वारा जन्म नलिए पनि प्रणिधानले गर्दा उनीहरू कामधातुमै जन्मिन्छन् ।

वोधिसत्वको दर्शनमार्ग अति विशुद्ध चतुर्थध्यानभूमिमा नै आश्रित हुन्छ र उपचारमा आश्रित हुँदैन किनकि उनले त्योभन्दा पहिले नै 'स्रोतोऽनुगतनाम समाधि' लाभ गरिसकेका हुन्छन् ।

(इ) साधारणयानमा, श्रावकहरूले चार आर्यसत्यमा पुद्गल नैरात्म्यको वोध गर्छन् । त्यसमा पनि व्यवस्थित सत्यमा आलम्बन नगरेर अव्यवस्थित सत्य भनिने स्वलक्षणमा आलम्बन गर्छन् । प्रत्येकबुद्धले पुद्गलात्मा र धर्मआत्माको ग्राह्यको निःस्वभावलाई वोध गर्दछन् । वोधिसत्वले दुवै नैरात्म्यको बोध गर्दछन् । यसबारेमा अभिधर्ममा भनिएको छ - "आफू स्वयंमा सत्वको स्पष्ट संकेत, धर्मको स्पष्ट संकेत र सवैमा दुवैको स्पष्ट संकेत गरी तीनओटा वताउनुभएको छ ।" त्यसैगरी 'गाथामा' "लोकको निर्वेधभागीयसँग मिल्दो अन्तिम कुशलमूलपछि आफू स्वयंमा सत्वको स्पष्ट संकेतमा आलम्वन गरी दर्शनहेयको पक्षसँग मिल्दो अधम दौःष्ठुल्यरहित प्रथम चित्तको उत्पन्न हुन्छ । त्यसपछि आफू स्वयंमा धर्मको स्पष्ट संकेतमा आलम्वन गरी दर्शनहेयको पक्षसँग मिल्ने मध्यम

दौःष्ठुल्यरहित दोस्रो चित्तको उत्पन्न हुन्छ। त्यसपछि मत्रै धर्मको स्पष्ट संकेतलाई आलम्वन गरी दर्शनहेयको पक्षसँग मिल्ने गरी उत्तम दौष्ठुल्यरहित तृतीय चित्त उत्पन्न हुन्छ। त्यसो हुँदा यिनीहरू दर्शनमार्ग हुन् भनिएको छ।"

यी तीनओटा स्पष्ट संकेतहरू नै साधारण यानमा दर्शनमार्गका १६ क्षणमा उत्तम, मध्यम आदिले भेद गरिएका प्रणाली हुन्। महायानको कुनै असाधारणमतको प्रज्ञापारमितामा "श्रावकको भूमिमा अध्ययन गर्नेले पनि यही प्रज्ञापारमिताको अध्ययन गर्नुपर्छ" आदि भनिएको अनुसरण गरेर आर्य पितापुत्र (नागार्जुन र आर्यदेव) को मतमा तीनैओटा गोत्रको अनात्मवोधमा फरक मानिँदैन।

(ई) साधारण यान र महायानको पद्धतिमध्ये पहिलोको मतमा अभिधर्मकोषमा **"अदृष्टदृष्टेर्दृङ्मार्गस्तत्र पञ्चदश क्षणाः"** भनिए अनुसार १५ ओटा क्षणचाहिँ पहिलो पल्ट दर्शन हुनाले दर्शनमार्ग हो र १६ औं क्षणचाहिँ फलको स्थिति हो भन्ने मानिन्छ। त्यसैले वैभाषिकको मतअनुसार चार आर्यसत्यमध्ये दुःखमा धर्मक्षान्ति, दुःखमा धर्मज्ञान, दुःखमा अन्वयक्षान्ति र दुःखमा अन्वयज्ञान गरी चार क्षण र वाँकी तीन सत्यमा पनि त्यसैगरी चार चार क्षण उत्पन्न हुनाले जम्मा १६ क्षण उत्पन्न हुन्छ भन्ने मानिन्छ। त्यसमा पनि क्षान्ति र ज्ञानमा क्रमैसँग 'आनन्तर्यमार्ग' र 'विमुक्तिमार्ग' भनिएकोले क्षान्तिहरू 'आनन्तर्यमार्ग' हुन् र ज्ञानहरू 'विमुक्तिमार्ग' हुन्।

अझै कसैको मतमा 'आठ' र 'चार' क्षण आदि मान्दछन्। स्थविरवादी र महासांघिकहरूले एकै क्षणमात्र उत्पन्न हुने मान्दछन्। कोही महायानीहरूले १६ देखि एक क्षणसम्म मनपरि हिसावले मान्दछन्।

असाधारण महायानसूत्रमा "बोधिसत्वको अनुत्पन्न धर्ममा क्षान्तिलाभ" भनिएकोले परमार्थमा दर्शनमार्ग उत्पन्न नै मान्दैनन् किनकि सूत्रमा "अनुत्पन्न एक सत्य हो भने त्यसमा कसैले चार सत्य भन्छन्। वोधिगर्भमा रहँदा एक सत्य पनि सिद्ध देखिँदैन भने चार त परै जाओस्" भनिएको छ। युक्तिषष्टिकामा "यदि धर्मज्ञान पछि यसमा विशेषता हुने भए अत्यन्तै सूक्ष्म वस्तुमा पनि जसलाई 'उत्पाद' को समारोप गर्छ त्यस्तो अज्ञ व्यक्तिले प्रतीत्यसमुत्पादवाट भएको देख्दैन" भन्नुभएको छ। त्यसो हो भने सूत्रमा दर्शनमार्ग एकक्षण अथवा १६ क्षण भनेर देशना गरेको कुरासँग विरोध हुन्छ भन्ने हो भने त्यसो भन्नुको अभिप्राय वस्तुवादीलाई अनुग्रह गर्नु हो र अभिप्रायको आधारचाहिँ प्रतीत्यसमुत्पाद हो र त्यसको आवश्यकता वस्तुमा आसक्ति हुनेहरूलाई प्रवेश गराउनु हो। साक्षात् विरोधचाहिं मूलमाध्यमिक कारिकामा यस्तो वताउनाले भएको हो -

**"न स्वतो नापि परतो न द्वाभ्यां नाप्यहेतुतः**
**उत्पन्ना जातु विद्यन्ते भावाः क्वचन केचन ॥"**

अझै दर्शन मार्ग कति क्षण उत्पन्न हुन्छ भन्ने हो भने कतिक्षण नाश हुन्छ भन्नेमा पनि विचार गर्नुपर्ने भएकोले अति प्रसंग हुनजान्छ। मूलमाध्यमिक कारिकामा भनिएको छ– "उत्पाद व्ययलाई छ भन्ने मान्छौ भने उत्पाद र व्यय चाहिँ मोहले नै लठ्याएको हो[१३१]।" यदि 'प्रतीत्यसमुत्पाद' नै उत्पाद होइन र ? भन्छौ भने त्यो होइन। अनवतप्तह्रदापसंक्रमणसूत्रमा भनिएको छ, "जो प्रत्ययवाट उत्पन्न हुन्छ त्यो उत्पन्न भएकै हुँदैन। त्यसमा उत्पादको

---

[१३१] यो परमार्थमा भनेको हो, व्यवहारमा महायानीले पनि उदय व्यय मान्दछन्।

स्वभाव नै हुँदैन । प्रत्ययमा आश्रित हुनेलाई शून्य भन्छन् र जसले शून्यतालाई जान्दछ त्यो अप्रमादी हुन्छ ।" त्यस्तै आचार्य आर्यले पनि "यसवाट यो भयो भन्ने लोक व्यवहारलाई प्रतिषेध गरिन्न । जो प्रतीत्यसमुत्पाद हो त्यो निःस्वभाव छ । त्यसलाई 'छ' भनेर कसरी निश्चय गर्ने ? जुन कारणले प्रतीत्यसमुत्पाद नभएको कुनै धर्म छैन त्यही कारणले शून्यता नभएको केही वस्तु हुँदैन ।" आदि विस्तारमा भन्नुभएकोले सवै धर्म अनुत्पन्न हुन् ।

शब्दार्थ

दर्शन भनेको पहिले नदेखिएको चीज देखिएको याने धर्मधातुको पहिलो पल्ट दर्शन भएको हो र मोक्षको तीर (किनारा) भएकोले 'मार्ग' भनिन्छ । निराश्रव आदि शव्दलाई लिंदा साक्षात् आस्रवको उपचार हुनाले अनास्रवसुख र दर्शनहेय क्लेशलाई जरैदेखि प्रहाण गर्ने हुनाले हेयको उपचार पनि हो । आर्यधर्ममा प्रथम हो । प्रथम लोकोत्तर चित्तोत्पाद हो । यही दर्शन मार्ग हो ।

**(घ) भावना मार्ग**

भावनामार्गमा तीन कुरा बताइन्छन् । १. लक्षण २. भेद र ३. शव्दार्थ ।

१. लक्षणः- विशेष समाधिको किन्नारामा भावना गर्नु यसको लक्षण हो ।

२. भेद :- भावनामार्गका भेदहरूमा लौकिक र लोकोत्तर गरी दुई हुन्छन् ।

लौकिक भावना मार्ग

यसभित्र पनि (क) लक्षण र (ख) स्वभावको निश्चय गरी दुई कुरा पर्छन् ।

(क) लक्षण:- ध्यानको उपचारमा रहेर उच्च धातुहरूको किनारामा भावना गर्ने समाधि यसको लक्षण हो ।

(ख) स्वभावको निश्चय:- यसभित्र (यो भावनामार्ग) कस्तो व्यक्तिमा उत्पन्न हुन्छ ? कुन भूमिमा आश्रित हुन्छ ? मनस्कारको तरिका र कृत्य (गर्ने कार्य) के हुन् भन्ने कुरा बताइन्छ ।

यो कस्तो व्यक्तिमा उत्पन्न हुन्छ ? (यो मार्ग) तीन द्वीपका पुरुष र नारीमा, काम धातुका ६ ओटा देवकुलमा र उच्च धातुका तीनओटा देवता बाहेक अरूमा पनि उत्पन्न हुन्छ । त्यसको कारण के हो भने तिनीहरू (को शरीर) पुण्य कमाउने आधार या आश्रय हो । दुर्गतिमा जन्मेका, उत्तरकुरुमा जन्मेका, नपुंसक भई जन्मेका र रूपधातु अन्तर्गत पर्ने असंज्ञिसत्वहरूमा उत्पन्न हुँदैन किनकि तिनीहरूका आवरण अत्यधिक हुन्छन् । त्यस्तै रूपधातु अन्तर्गत मूल महाब्रह्मामा पनि उत्पन्न हुँदैन किनकि उनी विपरीत दृष्टिको आश्रयमा हुन्छन् र मूल एउटै मात्र हुन्छन् । भवाग्रमा (नैवसंज्ञानासंज्ञायतनमा) उत्पन्न भएकाहरूमा पनि उत्पन्न हुँदैन किनकि त्यहाँ 'उच्च धातुमा शान्ति देख्ने' भन्ने जस्तो कुरा कुनै पनि हुँदैन र चित्त धमिलो हुन्छ ।

कुन भूमिमा आश्रित हुन्छ ? यो मार्ग रूपध्यान भूमिमा, अरूपध्यानभूमिमा र आठओटा समापत्तिमा आश्रित हुन्छ ।

मनस्कारको तरिका- यसमा तीन कुरा छन् । १. ध्यानको उपचार २. अर्पणा ३. तिनीहरूका भेद ।

१. ध्यानको उपचार-

मनस्कारहरू सात किसिमका हुन्छन् (र यिनले ध्यानको उपचार समाधिलाई सम्पन्न गर्छन्)।

(क) लक्षण प्रतिसंवेदी मनस्कार-

कामधातुको चित्तमा धेरै क्लेश हुनाले त्यसले माथित गर्दाखेरि चिन्ता हुन्छ। त्यसको वलले गर्दा आयु छोटो हुन्छ। उच्च धातुमा त्यसको विपरीत हुन्छ भनी कामधातुको श्रुतमयी प्रज्ञा र चिन्तामयी प्रज्ञाले वुझेर चित्त अत्यन्तै शोधन गरी प्रथम ध्यानको समाधि उत्पन्न हुन्छ। त्यसले कामधातुको चित्त स्थूल र प्रथमध्यानको चित्त शान्त भनी जान्दछ।

(ख) आधिमोक्षिक मनस्कार-

यसले पहिले जस्तै शोधन गर्नाले भावनामयी प्रज्ञाद्वारा श्रुतमयी प्रज्ञा र चिन्तामयी प्रज्ञाबाट पार भएको प्रथम ध्यानको समाधि मात्र उत्पन्न गर्छ।

(ग) प्राविवेज मनस्कार

यसले पनि पहिले जस्तै भावनाद्वारा कामधातु अन्तर्गत भएका भावनाहेय ठूला ठूला पर्युत्थान क्लेशलाई शान्त पार्दछ।

(घ) रतिसंग्राहक मनस्कार

यसले प्राविवेजबाट भएको थोरै सुखद्वारा स्थूल क्लेशलाई प्रहाण गर्न आनन्दित भई त्यसबाट फाइदा हुने देखेर समयसमयमा ठूलो श्रद्धा मनमा उत्पन्न गर्छ। त्यो मध्यम क्लेश प्रहाण गर्ने उपाय हो।

(ङ) मीमांसक मनस्कार-

त्यसरी प्रतिपक्षद्वारा प्राय:जसो क्लेशलाई प्रहाण गरिसक्नाले सबै क्लेशलाई नै त्यागिसकियो कि भन्ने चित्त उत्पाद भएर फेरि क्लेश उत्पन्न भयो कि भएन भन्ने

विचार गर्न क्लेश उत्पन्न भएको बेलासँग मिल्दो चर्यामनस्कार गरिन्छ, त्यो नै यो हो ।

(च) प्रयोगनिष्ठ मनस्कार–

त्यसरी विचार गर्दा क्लेश उत्पन्न भएको देखेमा पहिलेजस्तै शान्त र स्थूल आकार भावनाद्वारा सानो क्लेशको प्रतिपक्ष आफूमा उत्पन्न हुन्छ (यही अवस्थामा उपचार समाधिमा आइपुगिन्छ) ।

(छ) प्रयोगनिष्ठाफल मनस्कार

प्रयोगनिष्ठको फलमनस्कार नै त्यसरी सबैद्वारा भावना गरेको फलमनस्कार हो ।

प्रथम ध्यानजस्तै द्वितीय ध्यानदेखि भवाग्रसम्म पनि ७ ओटा मनस्कारद्वारा प्राप्त हुन्छ । अझै त्यसमा चतुर्थध्यानलाई आस्रव र अनास्रव मिसाएर भावना गर्नाले पाँच आर्य क्षेत्रमा जन्मिन्छ । त्यसमा लक्षणप्रतिसंवेदी मनस्कार र आधिमोक्षिक मनस्कार यी दुई प्रयोगमार्ग हुन् । प्राविवेज, रति र प्रयोगनिष्ठ यी तीनओटा चाहिँ आनन्तर्य मार्ग हुन् । मीमांसक चाहिँ विशेष मार्ग हो । प्रयोगनिष्ठाफल मनस्कार चाहिँ विमुक्ति मार्ग हो । त्यसअन्तर्गत सानो मार्ग चाहिँ ठूलो क्लेशको प्रतिपक्षमा जान्छ । प्राविवेज भनिने मध्यम मार्ग चाहिँ मध्यम क्लेशको प्रतिपक्ष हुनजान्छ । रति भनिने ठूलो मार्ग चाहिँ सानो क्लेशको प्रतिपक्ष हुनजान्छ ।

२. अर्पणा

ध्यानका अर्पणा आठ किसिमका हुन्छन् । तीमध्ये रूप धातुका चारओटा ध्यान र अरूपधातुका चार अनन्त्यायतन । त्यसमध्ये रूपधातुको प्रथम ध्यानमा अर्पणामात्र र विशेष अर्पणा गरी दुई हुन्छन् । अर्पणामात्र लाई वितर्क र विचारसहित विवेकबाट उत्पन्न भएको प्रीति र सुखवाला

भनिएको छ। विशेष अर्पणा चाहिँ वितर्क नभई विचारले युक्त भएको समाधि हो।

द्वितीयध्यान प्रीति र सुखले युक्त भएको समाधि हो। तृतीय ध्यान प्रीति नभएर सुखमात्र भएको समाधि हो। चतुर्थ ध्यानचाहिं प्रीति र सुख दुवै नभएको उपेक्षामात्र भएको समाधि हो। यिनीहरू सबै आस्रवसहित हुने भएकाले लौकिक समाधि भनिन्छन्।

अरूप अनन्त्यायतन चार प्रकारका हुन्छन्। तीमध्ये आकाशानन्त्यायतनको लागि हेतुशमथको ध्यानको विशेष मार्ग भावना गर्ने वेलामा सबै धर्म आकाश मात्र हुन् भनेर अनन्तसम्म भावना गरेको हुनुपर्छ। विज्ञानानन्त्या यतनको लागि पनि त्यस्तै हुनुपर्छ। यिनीहरू पनि तृष्णा र दृष्टि आदिमै रहेकाले संक्लिष्ट ध्यान नै हुन्। चार सम्यक् ध्यान र चार आरूप्यलाई संक्लेशहरूको मलवाट अलग्याएमा व्यवादानध्यान भनिन्छ। किनकि ती चाहिं कुशल हुन्। यसको विस्तारमा बुझ्न अन्य ग्रन्थमा हेर्नुपर्छ।

३. यिनीहरूको भेद

यहाँ (क) स्वभावद्वारा (ख) प्रहेयको हिसावले (ग) हेतुफलको हिसाबले गरी तीन प्रकारवाट भेद गरिन्छ।

(क) स्वभावद्वारा भेद :-स्वभावद्वारा भेद गर्दा (अ) हानभागीय (आ) स्थितिभागीय (इ) विशेषभागीय (ई) निर्वेधभागीय गरी चार प्रकारका हुन्छन्।

यिनीहरूको अर्थगर्दा श्रावकहरूका अनुसार पहिलो तल्लो भूमिसँग मिल्ने, दोस्रो आफ्नो भूमिसँग मिल्ने तेस्रो माथिल्लो भूमिसित मिल्ने र चौथो चाहिँ मार्गको आधार हुन्छ भन्छन्। चित्तमात्राको मतमा पहिलोमा ध्यानको समाधिबाट हानि नभएका धेरै क्लेश हुनु, दोस्रोमा हानि र वृद्धि दुवै नहुनु। तेस्रोमा अभिज्ञा आदि विशेष गुणहरूको

आधार बन्न जान्नु र चौथोमा चाहिँ आर्यमार्गको आधारयोग्य हुनु भन्ने मान्दछन्। यिनीहरूमा प्रयोगमार्ग र आनन्तर्यमार्ग आदि चार किसिमका मार्गसँग मिलाउनु पर्छ।

(ख) प्रहेयको हिसाबले भेदः- भवाग्रवाहेक आठ भूमिमा उत्तम-मध्यम-अधमको अन्तरद्वारा खोल्दा ७२ ओटा हुन्छन्। (उत्तम उत्तम उत्तम, उत्तम उत्तम मध्यम, उत्तम उत्तम अधम....गरी प्रत्येक भूमिका ९ थरी हुने भएकाले ९×८=७२ प्रकार)

(ग) हेतुफलको हिसावले भेदः- यसमा हेतुशमथको ध्यान र फलोत्पापत्ति ध्यान गरी दुई प्रकारका हुन्छन्। त्यसमध्ये पहिलोमा प्रथमध्यानका सात ओटा उपायलाई तिनीहरूको गुण सम्झिएर श्रद्धा गर्नु र मनस्कारको सधैं अटूट रूपमा प्रयोग गरी भावना गर्नु पर्दछन्। यसमा पनि उत्तम, मध्यम र अधम गरी तीन ओटा हुन्छन्। जस्तै : तीमध्ये दुवै नभएर गर्नु अधम हो, दुईमध्ये कुनै एकले सहित भएर गर्नु मध्यम हो र दुवैले सहित भएर गर्नु उत्तम हो। वाँकी तीनओटा ध्यान र चार अरूपध्यानका अभ्यास पनि त्यस्तैगरी उत्तम, मध्यम र अधम गरी तीन प्रकारले गरिन्छन्।

दोस्रो फलोत्पपत्ति ध्यानमा प्रथमध्यानको अधमद्वारा व्रह्मकायिक, मध्यमद्वारा व्रह्मपुरोहित र उत्तमद्वारा महाव्रह्मा भई जन्म लिन्छन्। वाँकी तीन ध्यानमा पनि त्यसैगरी मिलाएर वुझ्नुपर्छ। अरूपधातुमा रूप नहुनाले वेग्लै वस्ने स्थान नहुने हुँदा स्थान अलग हुने भन्ने हुँदैन तर पनि अधम, मध्यम र उत्तम भावना गरेको आधारमा अल्पायु-दीर्घायु, अल्पशक्तिमान्– वहुशक्तिमान् आदि भएर जन्मिने हुन्छन्। उनीहरूमा राग आदि (क्लेश) पनि अधम-मध्यम-उत्तम गरी तीन किसिमका हुन जान्छन्। त्यस्ता

ध्यानहरू यदि लौकिक व्यक्तिका हुन् भने अधम र आस्रवसहित हुन्छन् । श्रावक र प्रत्येकबुद्धका अनास्रव हुन्छन् र विशाल हुन्छन् । बुद्ध र बोधिसत्वहरू त ध्यानपारमितामा हुने भएकाले 'शूरङ्गम' आदि समाधिमा हुन्छन् । त्यो सूत्र र तन्त्रहरूमा बताइएको हुन्छ जसको नाम समेत पनि श्रावकहरूले जान्दैनन् ।

कृत्य (गर्ने कार्य):-

ध्यान भावना गर्नाले प्रहाण गर्नुपर्ने क्लेशहरूको टुप्पो दबाइन्छ र चार ब्रह्मविहार, पाँच अभिज्ञा आदि गुण र आर्यमार्गको आधार बन्ने कार्य हुन्छ ।[१३२]

(ख) लोकोत्तर भावनामार्ग

यसभित्र लक्षण, भेद, स्वभावको निश्चय र शब्दार्थ गरी चार कुरा बताइन्छ ।

लक्षण- पहिले दर्शनमार्गमा देखिसकेको धर्मधातुको किनारामा भावना गर्नु यसको लक्षण हो ।

भेद– यसका भेद चार किसिमले गरिन्छ । (१) व्यक्तिद्वारा (२) प्रहेयको हिसाबले (३) मार्गको हिसाबले (४) र भावना गर्ने तरिकाको हिसाबले ।

१) व्यक्तिद्वारा:- यसमा श्रावक, प्रत्येकबुद्ध र बोधिसत्वको हिसाबले तीन भेद हुन्छन् ।

२) प्रहेयको हिसाबले:- प्रहेयको हिसाबले भेद गर्दा भावना प्रहेय (क्लेशहरू) ४१४ प्रकारका हुने भएकोले त्यसको प्रतिपक्षस्वरूप भावना पनि ४१४ थरी नै हुन्छन् ।

---

[१३२] लौकिकभावना (ध्यान) ले क्लेशहरूलाई विष्कम्भण मात्र गर्छ, र आर्यमार्ग याने विपश्यनाबाट मात्र प्रहाण हुनसक्छ ।

३) मार्गको हिसाबले:- मार्गको हिसाबले भेद गर्दा - प्रयोग, आनन्तर्य, विमुक्ति र विशेष गरी चार प्रकारका भावना मार्ग हुन्छन् ।

४) भावना गर्ने तरिकाको हिसाबले:-
यसरी भेद गर्दाखेरि 'समाधि' र 'पृष्ठलब्ध' गरी दुई प्रकारले भावना गरिने हुन्छ ।

स्वभावको निश्चय:- यसभित्र (१) भावनाप्रहेयहरूलाई त्याग्ने तरीका र (२) भावनामार्ग उत्पन्न हुने व्यवस्था गरी दुई कुरा बताइन्छ ।

१) भावना प्रहेयलाई त्याग्ने तरिका :-

यसमा भावना प्रहेयका लक्षण, त्यसका भेद र प्रतिपक्षद्वारा प्रहाण गर्ने तरिका यी तीन कुरा बताइन्छ ।

लक्षण:- भावना प्रहेयको लक्षण सहज-आत्मग्राहद्वारा मन अशान्त हुनु हो ।

भेद:- यसका भेदमा कामधातुका सहजक्लेशहरू ६ ओटा र दुई उच्च धातुहरूका पाँच, पाँच गरी (प्रतिघ नहुनाले गर्दा) जम्मा १६ ओटा हुन्छन् । त्यसो भए 'गाथामा' दश ओटा भनिएकोसँग विरोध हुन्छ कि भन्ने हो भने विरोध हुँदैन । किनकि स्थूल र सूक्ष्म किसिमले अलग अलग व्यवस्था गर्नु अलग अलग सूत्रका तरिका हुन् । यिनीहरू प्रत्येकमा उत्तम उत्तमको उत्तम आदि नौ नौ भाग गरेपछि जम्मा ४१४ प्रकारका हुन्छन् । (कामधातुमा १६ ओटामा उत्तम आदि ९ भेद गर्दा १६×९=१४४, रूपधातुमा प्रतिघबाहेक अरूलाई गन्दा १५ ×९ =१३५ र अरूपधातुमा पनि त्यसैगरी १५×९=१३५ गर्दा जम्मा १४४+१३५+१३५=४१४ थरी भावनाप्रहेय क्लेश हुन्छन्) ।

प्रतिपक्षद्वारा प्रहाण गर्ने तरिका चाहिं दर्शनमार्गमा बताइए अनुसार बुझ्नुपर्छ ।

२) भावनामार्ग उत्पन्न हुने व्यवस्था

यसमा कस्तो व्यक्तिमा उत्पन्न हुने, कुन भूमिमा आश्रित हुने र कस्तो विषयमा कस्तो तरिकाले आलम्बन गर्नेछ भन्ने कुरा बताइन्छ ।

कस्तो व्यक्तिमा उत्पन्न हुन्छ ? तीन द्वीपका पुरुष र नारीमा उत्पन्न हुन्छ, कामधातुका ६ देवकुलमा, रूपधातुका महाब्रह्मा र असंज्ञिसत्वबाहेक अरूमा र अरूपधातुवाला चित्तमा उत्पन्न हुन्छ। अरूमा उत्पन्न नहुनुको कारण पहिले बताइए अनुसार नै हो ।

कुन भूमिमा आश्रित हुन्छ ? श्रावकको भावना-मार्ग ध्यानका अर्पणा, प्रथम ध्यानको उपचार र विशेष अर्पणा गरी ६ ओटामा र अरूपको तीनओटाको फलमा गर्दाखेरि ९ भूमिहरूमा आश्रित हुन्छ। अरूमा आश्रित नभएको कारण के हो भने कामधातुको चित्त कार्ययोग्य नै हुँदैन, भवाग्रको चित्त स्पष्टै हुँदैन र बाँकी तीन ध्यानका र अरूपको तीन ओटा उपचारमा आश्रित हुँदैन किनकि त्यहाँ उच्च ध्यान लाभ गर्नलाई प्रयत्नसहित हुनुपर्ने हुनाले शमथ कमजोर हुन्छ। अत: शमथ र विपश्यना एकनास रूपमा हुन सक्दैन । त्यसैले नभएको हो ।

त्यसोभए प्रथम ध्यानको उपचार पनि त शमथ कमजोर हुनाले आश्रय हुन नसक्नुपर्ने होइन र ? त्यसो हो तापनि अरूमा भन्दा यसमा सजिलो हुने हुँदा यसमा आश्रित हुन्छ। यदि महाब्रह्माको आश्रयमा उत्पन्न नहुने हो भने प्रथम ध्यानको विशेष अर्पणामा पस्ने चित्तमा पनि उत्पन्न नहोला भन्ने हो भने त्यसो हुँदैन, किनकि महाब्रह्माको विपरीत दृष्टिको आधार हुने र 'मूल म एक मात्र छु' भन्ने

भाव हुनाले गर्दा त्यसमा भएको मनमा उत्पन्न हुन सक्दैन। तर अरू त्यो जस्तै जात भएका मनहरूमा (त्यो भाव नहुने हुँदा) उत्पन्न हुन सक्छ। जस्तै कि घ्याम्पोभित्रको बीउ अंकुरको आधार हुँदैन तर पनि त्यस्तै खालको बीउ खेतमा रोपेमा अंकुर उम्रिन्छ। यहाँ पनि यस्तै हो।

फेरि भवाग्रको चित्तमा उत्पन्न नहुने हो भने भवाग्रको व्यक्तिमा पनि आश्रित हुँदैन। व्यक्तिमा आश्रित भएमा चित्तमा आश्रित हुन के विरोध हुन्छ ? भवाग्रको व्यक्ति उत्तम भए तापनि चित्त सन्तान स्पष्ट नहुनाले आर्यको चित्त उत्पन्न हुँदैन। आकिञ्चन्यायतनको चित्त स्पष्ट हुनाले त्यसमा आश्रित हुने हुन्छ। जस्तै कि राजाले आफूले नजानेको मन्त्रीलाई सोध्छन्। त्यसैले अभिधर्मकोषमा **"आर्याकिञ्चन्यसाम्मुख्यात् भवाग्रे त्वास्रवक्षयः"** । भवाग्रको आर्यले आकिञ्चन्यायतन साक्षात् गरेर मात्र आस्रवक्षय गर्छ।

फेरि तीनओटा अरूपको चित्त स्पष्ट नहुनाले दर्शन मार्गको आधार नभए जस्तै भावना मार्गको पनि आधार हुन सक्दैन भन्न सकिन्न ? यसमा श्रावकवादीहरूलाई अर्कै उत्तर छ तापनि उचित उत्तरचाहिँ यो हो कि दर्शनमार्ग ६ ओटा ध्यानभूमिमा आश्रित भएर उत्पन्न हुन सजिलो हुन्छ। त्यसैले त्यसलाई छोडेर अरूप धातुको कठिनतामा आश्रित हुनु किन पर्‍यो ? परन्तु यहाँ त अरूपमा जन्मिएका अनागामी आर्यहरूले बाँकी भावनाप्रहेय क्लेशहरूलाई त्यागेर अर्हत्व साक्षात्कार गर्नको लागि उनीहरू उच्च धातुबाट पार भइसकेका हुनाले चतुर्थ ध्यानदेखि मुनिको चित्तमा शमथ र विपश्यनाको युगलसम्वन्ध उत्पन्न हुन सक्दैन। त्यसैले कठिन भए पनि तीन अरूपमा आश्रित हुनैपर्छ। जस्तै कि

दायाँ हात नभए पछि त वायाँ हातले भए पनि काम चलाउनै पर्छ। अथवा अर्को तरिकाले भन्ने हो भने, दर्शनै नभएको धर्मतालाई दर्शन गर्ने 'दर्शनमार्ग' भएकोले त्यसको लागि मन स्पष्ट हुनैपर्छ। तीन अरूपहरूमा मन स्पष्ट नभएकोले तिनीहरूमा भावनामार्ग आश्रित हुन उचित थिएन तापनि पहिले दर्शन भैसकेको अर्थकै फेरि भावना गरिने भएकोले स्पष्ट नभएको चित्तमा पनि भावना गर्न सक्ने क्षमता हुने भएकोले भावनामार्ग त्यसमा आश्रित हुनुमा कुनै विरोध देखिन्न। प्रत्येकवुद्धको भावनामार्गमध्ये वर्गचारीहरूको भावना मार्ग ६ ओटा ध्यानभूमिमध्ये कुनैमा पनि आश्रित हुन सक्छ भने खड्गहरूको चतुर्थध्यानको अर्पणामा आश्रित हुन्छ।

बोधिसत्वहरूको भावनामार्ग अतिविशुद्ध चतुर्थ ध्यानमा आश्रित हुन्छ तर उत्पन्न हुने भूमिमध्ये अरूपधातुवाहेक कामधातु र रूपधातु दुवैमा कर्म र प्रणिधानद्वारा जन्म लिएर समाधिलाई वशमा लिई सिँहविक्रीडित र व्युत्कर्तक आदिमा शमथ गर्दाखेरि अरूपधातु र निरोधमा पनि समाधि गर्छन्।

कस्तो विषयमा कस्तो तरीकाले आलम्वन गर्छन् ? साधारणयानमा दर्शनमार्गको वस्तुलाई चार आर्यसत्यको धर्मतालाई आलम्वन गरिएको शमथ र विपश्यनाद्वारा समान रूपमा भवना गर्दछन्। असाधारण महायानमा दर्शनमार्गमा बोध गरिने धर्मता र वोध गर्ने 'विषयी' सबै धर्मीसँग सम्बन्ध राखी भावना गर्दछन्।

**शब्दार्थ**

भावनामार्ग भनेको दर्शन भैसकेको अर्थलाई भावना गर्नाले हो। अनास्रवद्वारा अनास्रवको कुशल मूल भावना गर्नाले प्रहेयको प्रतिपक्ष हुन्छ र प्रहेयको उपचार पनि भनिन्छ।

(ङ) **अशैक्ष (निष्ठागत) मार्ग**

यसमा (१). लक्षण (२). भेद (३). स्वभावको निश्चय र (४) शब्दार्थ गरी चार किसिमले वताइन्छ ।

१. लक्षणः- धर्मधातुको अन्तिम तीरमा भावना गर्नु यसको लक्षण हो ।

२. भेदः- यसका भेदमा श्रावकको, प्रत्येकवुद्धको र वोधिसत्वको गरी तीन किसिमका हुन्छन् ।

३. स्वभावको निश्चयः- यसमा कस्तो व्यक्तिमा उत्पन्न हुने ? कुन भूमिमा आश्रित हुने ? र कस्तो विषयलाई आलम्वन गर्ने ? भन्ने कुरा वताइन्छन् ।

कस्तो व्यक्ति र कुन भूमिमा उत्पन्न हुने ? श्रावकहरूका व्याख्या अनुसार यहाँ पनि पहिले वताइएको लोकोत्तर भावनामार्ग उत्पन्न हुने व्यक्ति र त्यसको आश्रित भूमि नै वुझ्नु पर्छ ।

साधारणयानमा, प्रत्येकवुद्ध र बोधिसत्वले मानिसको चोलामा जन्म लिएरै अशैक्ष मार्ग प्राप्त गर्छन् भने विशेषगरी बोधिसत्वले जम्वूद्वीपमा मध्यदेशमा ब्राह्मण या क्षत्रियको कुलमा जन्म लिएर चतुर्थध्यानभूमिको वज्रोपम समाधिद्वारा अशैक्ष मार्ग उत्पन्न गर्छन् । असाधारण महायान अनुसार दशौं भूमिमा[133] आश्रय लिएर अतिविशुद्ध चतुर्थध्यान भूमिको अन्तमा वज्रोपमसमाधिको अधिपति प्रत्ययद्वारा उत्पन्न हुन्छ भन्ने मानिन्छ ।

त्यो वज्रोपम समाधि पनि श्रावकहरूको सबभन्दा सानो (कमजोर) क्लेशको वीजलाई दबाउने भए प्रयोगमार्ग भित्रको वज्रोपमसमाधि भनिन्छ र जरैसित उखेलेर फ्याल्ने क्षमतावाला भए आनन्तर्य मार्गको वज्रोपम समाधि

---

[133] अकनिष्ठ भुवनमा ।

भनिन्छ । बोधिसत्वको **वज्रोपमसमाधिमा क्लेश** र ज्ञेय आवरणहरूको वीजलाई दबाउने **प्रयोगमार्ग**भित्रको हो भने तिनीहरूलाई **समूल नष्ट पार्ने चाहिँ आनन्तर्य** मार्गको हो। (द्रष्टव्यः यहाँ प्रयोग मार्ग **भनेको पञ्चमार्ग** क्रमको प्रयोग मार्ग होइन ।)

कस्तो विषयलाई **आलम्बन** गरेर हुन्छ ? साधारण यानको मतअनुसार **चार आर्य** सत्य, अथवा निरोधसत्य अथवा अशैक्षका **दशधर्मलाई** वज्रोपम समाधिले आलम्वन गर्दछ। **अशैक्षका दश धर्म** भनेका- सम्यक्दृष्टि, सम्यक् सङ्कल्प, **सम्यक् वाक्**, सम्यग् कर्मान्त, सम्यक् आजीव, सम्यक् व्यायाम, सम्यक् स्मृति, सम्यक् समाधि, विमुक्ति र विमुक्तिज्ञानदर्शन हुन् । तिनीहरूलाई स्कन्धद्वारा छुट्याउने हो भने सम्यक् वाक्, सम्यग् कर्मान्त र सम्यक् आजीव शील स्कन्धमा पर्छन् । सम्यक् समाधि र सम्यक् स्मृतिचाहिँ समाधि स्कन्धमा पर्दछन् । सम्यग् दृष्टि, सम्यक् संकल्प र सम्यग् व्यायाम प्रज्ञास्कन्धमा पर्दछन् । विमुक्तिचाहिँ विमुक्ति स्कन्धमा पर्दछ र विमुक्तिज्ञानदर्शनचाहिँ विमुक्तिज्ञानदर्शनस्कन्धमा पर्दछ। (यिनै हुन् अशैक्षमार्गी आर्यका पञ्चस्कन्ध) त्यसमा पनि निर्विकल्पचाहिँ लोकोत्तर ज्ञानद्वारा समाहित हुन्छ भने पृष्ठलब्ध चाहिँ शुद्धलोकको ज्ञानद्वारा समाहित हुन्छ भन्ने मानिन्छ।

असाधारण महायानको मतअनुसार श्रावक र प्रत्येकबुद्धको (वज्रोपम समाधिले) निर्वाणलाई विषय वनाएर आलम्वन गर्दछन् भने बोधिसत्वले अप्रतिष्ठित निर्वाणलाई आलम्बन गर्दछन् ।

**शब्दार्थः-**

निष्ठागतमार्ग भनेको प्रहेय (त्यागनुपर्ने) र ज्ञेयको (जान्नुपर्ने) ज्ञानलाई अन्त पारेको (निष्ठा) हुनाले अन्त याने निष्ठागत मार्ग या अन्त मार्ग भनिन्छ। यो आस्रवरहित भएकोले अनास्रवकुशलमूलद्वारा क्लेशलाई नफर्किने किसिमले प्रहाण गरिसकिएको हुँदा यसैलाई नै "अन्त पारिदिने प्रतिपक्ष" पनि भनिन्छ। यिनीहरूलाई साधारणयानअनुसार बताउने हो भने अभिधर्मकोषमा यस्तो भनिएको छ,

**आज्ञास्याम्याख्यमाज्ञाख्यमाज्ञातावीन्द्रियं तथा**
**उत्तरोत्तरसम्प्राप्तिनिर्वाणाद्याधिपत्यतः ॥**

"दर्शन मार्गलाई अधिकारमा ल्याउनको लागि प्रयोगमा 'अनाज्ञातम् आज्ञास्यामि' इन्द्रिय हुन्छ, भावना मार्गमा अधिकार हुनलाई दर्शनमार्गमा 'आज्ञा'इन्द्रिय हुन्छ र अशैक्ष मार्ग (निष्ठागतमार्ग)मा अधिकार हुनलाई भावनामार्गमा 'आज्ञातावी' इन्द्रिय हुन्छ" । तर असाधारण महायानअनुसार यिनीहरूलाई यस्तो इन्द्रिय भनेर नामकरण गरिएको पाइँदैन ।

## भूमिव्यवस्था

यसमा १. लक्षण २. भेद र ३. प्रत्येकको व्यवस्था गरी तीन कुरावाट वताइन्छन् ।

१. लक्षणः- विशेष गुणको आधार बन्ने नै भूमिको लक्षण हो ।

२. भेदः- यसका भेद दुई थरी छन् । १. अधिमुक्तिचर्या भूमि र २. लोकोत्तरभूमि ।

१. अधिमुक्तिचर्याभूमिः- आर्यको धर्ममा अवतरण गर्ने गुणको आधार बन्नु यसको लक्षण हो ।

२. लोकोत्तरभूमि:- यो चाहिं आर्यका विशेष गुणको आधार बन्नु हो। यसलाई भेद गर्ने हो भने (क) श्रावकको भूमि र (ख) बोधिसत्वको भूमि गरी दुई किसिमका हुन्छन् भनेर आचार्य नागार्जुनको **रत्नावलीमा** यस्तो भनिएको छ– "जसरी श्रावकयानमा **श्रावकका** आठ भूमि बताइएका छन् त्यस्तै गरी महायानमा **बोधिसत्वका** दश भूमि बताइएका हुन्छन्।"

३. <u>प्रत्येकको व्यवस्था</u>:- यसमा श्रावकको भूमि र बोधिसत्वको भूमि गरेर दुई थरी हुन्छन्। तीमध्ये श्रावकका आठभूमि हुन्छन्। ती हुन्–

१. शुक्ला विदर्शणा भूमि २. गोत्रभूमि ३. अष्टमक भूमि ४. तनुभूमि ५. वीतरागभूमि ६. कर्ताभिसमयभूमि ७. श्रावकभूमि र ८. प्रत्येकबुद्धभूमि। यिनीहरूको बारेमा यहाँ आवश्यक नपर्ने भएकाले यहीं स्थगित गरिन्छ।

बोधिसत्वको भूमि

यसभित्र यसका भेद, संख्याको निश्चय, प्रत्येकको गुण, नाम र अर्थको कुरा गरिन्छ।

<u>भेद</u>:- जम्मा दश भूमिहरू छन्। तीन हुन् १. प्रमुदिता, २. विमला, ३. प्रभाकरी, ४. अर्चिष्मती, ५. सुदुर्जया, ६. अभिमुखी, ७. दूरंगमा ८. अचला ९. साधुमती, १० धर्ममेघा।

यी मध्येका पहिला सात भूमिहरू अशुद्ध भूमि हुन् र बाँकी तीन भूमिहरू शुद्ध हुन्। अधिमुक्तिचर्याभूमि (लौकिक)मा मान धेरै हुन्छ, ७ ओटा अशुद्ध भूमिमा मान थोरै हुन्छ भने तीन शुद्ध भूमिमा मानै हुँदैन भनेर सूत्रालंकारमा भनिएको छ।

संख्याको निश्चय:- दश पारमितामा दशभूमि हुन्छन्। त्यो यसरी हो– ६ पारमितामा ६ भूमि, उपाय, बल,

प्रणिधान र ज्ञान यी चार पारमितामा चार भूमि गरी दश पारमितामा दशभूमि हुन्छन् ।

प्रत्येकको गुणः- यी प्रत्येकका गुणहरू वियोगगुण र लाभ गुण गरी दुई थरी छन् । **वियोगगुणमा** आर्यहरू दुःखका चार ठूला नदीहरूबाट पार भएका हुन्छन् । उत्तर तन्त्रमा "मृत्यु, रोग र बृद्धत्वका दुःखहरू जरैदेखि आर्यहरूले प्रहाण गरेका हुन्छन् । कर्म र क्लेशको कारणले नै जन्म हुन्छ र नीहरूमा त्यो नहुनाले जन्म हुँदैन"[१३८] भनिएको छ । आर्यहरू पाँच किसिमको भयबाट मुक्त भएका हुन्छन् भनेर अवतंसक सूत्रमा भनिएको छ "आजीविका भय, मृत्युभय, अप्रशंसाभय, दुर्गतिभय र पर्षच्छारद्यभय ।" अर्थात् आजीविकाको भय, अकालमृत्युको डर, चेलाले केही दोष देखाउँछन् कि भन्ने डर, दुर्गतिमा गइएला कि भन्ने डर र अप्रशंसाको भय गरी यी पाँच डरहरूबाट मुक्त हुन्छन् । त्यस्तै अरू पनि अचिन्त्य भयहरूबाट मुक्त भएका हुन्छन् भनी दशभूमिक सूत्रमा देशना गरेअनुसार बुझ्नुपर्छ । त्यसमा पनि प्रथम भूमिदेखि दशौंभूमिसम्म गुण फैलिएर जाने कुरा त स्वतः यहींबाट बुझिहालिन्छ । जन्म आदि भयबाट मुक्त भएर पनि जन्म, मृत्यु, रोग, बृद्धताको दुःख भए जस्तो देखाएको त "सत्वहितको लागि जानेरै संसारमा जन्म लिन्छन्" र "सम्यक् यथार्थको साक्षात्कार गरी जन्म आदिबाट पार भए पनि करुणावान्ले जन्म लिन्छन् र मृत्यु, रोग र बृद्धको रूप देखाउँछन्" भनिए अनुसार हो ।

---

‘‘ थेरवादमा आर्यहरू पनि कर्मक्लेशवाट नै जन्मिन्छन् र अर्हत् भएपछि मात्र जन्मिँदै जन्मिन्नन् भन्ने मानिन्छ भने मूल सर्वास्तिवाद र महायानमा आर्यहरू करुणा र सङ्कल्पवाट जन्मलिन्छन् भन्ने मानिन्छ ।

**लाभ गुणः**- यसको बारेमा दशभूमिक सूत्रमा एकै क्षणमा १२ सय ओटा गुण उत्पन्न हुन्छन् भन्ने देशना गरिएको छ। ती हुन् एकै क्षणमा सय किसिमका समाधिको लाभ, त्यसमा शमथ गर्नु, सयओटा बुद्धको दर्शन हुनु, उनीहरूबाट अधिष्ठान लाभ गर्नु, सयओटा लोकधातुलाई हल्लाउनु; सयओटा क्षेत्रमा जानु, सयओटा लोक धातुलाई देखाउनु, सयओटा सत्त्वलाई पूर्ण परिपाक गर्नु, सय कल्पसम्म रहनु, सय कल्पपूर्वको अन्त र पछिको अन्तमा प्रवेश गर्नु याने थाहा पाउनु, सय किसिमका धर्मका द्वार खोल्नु, सयओटा शरीर देखाउन सक्नु, प्रत्येक शरीरमा बोधिसत्वको एक एक सय परिवारले घेरिएको देखाउनु हुन्।

यी गुणहरू दोस्रो भूमिमा आएर हजार गुणा हुन जान्छन्। तेस्रो भूमिमा लाख गुणा हुन्छन्, चौथो भूमिमा अरब गुणा हुन्छन्, पाँचौ भूमिमा दश अरब हुन्छन् र छैठौं भूमिमा दश खरब हुन्छन् र सातौं भूमिमा लाख करोड महापद्म गुणा हुन्छन्। आठौं भूमिमा लाखओटा लोक धातुका परमाणु समान हुन्छन् र नवौं भूमिमा दशलाख ओटा लोकधातुका परमाणु समान हुन्छन् र दशौं भूमिमा अनभिलाप्य बुद्ध क्षेत्रका अणुसमान गुणलाभ गर्नुका साथै अन्य थरिका गुणहरू पनि असंख्य लाभ हुन्छन्। भूमिका अरू गुणहरूको बारेमा दशभूमिक सूत्र, सन्धिनिर्मोचन सूत्र र सूत्रालङ्कार आदिमा बताइए बमोजिम विस्तारमा बुझ्नु पर्दछ।

**भूमिको नाम अर्थः**- यो दुई प्रकारले बताइन्छ। साधारण नाम अर्थ र विशेष नाम अर्थ। साधारण नाम अर्थचाहिँ महायान सूत्रालंकारमा 'भूमि' भन्ने शव्दबाट तानेर भूत, अमित आदि शब्दद्वारा बताइएको छ। त्यो यस्तो हो-

**भूयो भूयोऽमितास्वासु उर्ध्वङ्गमनयोगतः।**

**भूतामिताभयार्थाय त एवेष्टा हि भूमयः ॥**

भूमिको 'भू' ले 'भूत' भन्ने जनाउँछ र 'मि' ले 'अमित' भन्ने जनाउँछ। अतः 'भूत अमित' हुन्छ त्यस्तै 'अभय अमित' अनि 'भूयः उर्ध्वंगमनम्' आदि। प्रत्येक भूमिको शब्दार्थ चाहिँ महायान सूत्रालंकारमा यसरी बताइएको छ–

**पश्यतां बोधिमासन्नां सत्वार्थस्य च साधनम्**
**तीव्र उत्पद्यते मोदो मुदिता तेन कथ्यते ॥**
बोधि नजिकै आएको, सत्वको हित सिद्ध नै
देख्दा त हुन लागेको खुशी भै 'मुदिता' भयो ॥
**दौशील्याभोगवैमल्याद् विमला भूमिरुच्यते ।**
दौःशील्य आभोग हुँदा निर्मलै 'विमला' भयो ।
**महाधर्मावभासस्य करणाच्च प्रभाकरी ।**
महाधर्म प्रकाशै पो गर्नाले हो प्रभाकरी ॥
**अर्चिर्भूता यतो धर्मा बोधिपक्षा प्रदाहका : ।**
**अर्चिष्मतीति तद्योगात् सा भूमिर्द्वयदाहतः ।**
वोधिपाक्षिक प्रज्ञाले दुई आवरण नाशने ।
अधिकांश त्यही हो र अर्चिष्मती भनिन्छ सो ॥
**सत्वानां परिपाकश्च स्वचित्तस्य च रक्षणम्**
**धीमद्भिर्जीयते दुःखं दुर्जया तेन कथ्यते ॥**
सत्वको परिपाकै र रक्षा गर्ने स्वचित्तको ।
धीमान्‌ले जित्न गाह्रो छ त्यसैले 'दुर्जया' भयो ॥
**आभिमुख्याद् द्वयस्येह संसारस्यापि निर्वृतः**
**उक्ता ह्यभिमुखी भूमिः प्रज्ञापारमिताश्रयात्**
प्रज्ञापारमिताको नै आश्चर्यले अगाडि भै
संसार निर्वाण दुवैको 'अभिमुखी' भूमि भयो ॥
**एकायनपथश्लेषाद् भूमिर्दूरङ्गमा मता ।**
एउटै वाटोवाट जाँदा दूरंगमा भनिन्छ त्यो ।
**द्वयसंज्ञाविचलनाद् अचला च निरुच्यते ।**

दुवै संज्ञाले नचलाउनाले 'अचला' भनिने भयो ।
**प्रतिसंविन्मतिसाधुत्वाद् भूमि : साधुमती मता ।**
प्रतिसंविद् मति साधु हुनाले साधुमती हो ।
**धर्ममेघा द्वयव्याप्तेर्धर्माकाशस्य मेघवत् ॥"**
दुवै व्याप्तिको धर्माकाश जस्तो हुनाले धर्ममेघा हो ।

आजभोलि यो भोट देशमा भूमिमार्गमा नगईकन बुद्धत्वलाभ गर्न खोज्ने र दर्शनमार्गको गुण नभाए पनि दर्शनमार्ग उत्पन्न भयो भन्ने ठान्नेहरूलाई देखिन्छ । सूत्र, तन्त्र र शास्त्र कुनैमा पनि त्यस्तो व्याख्या नभएकोले त्यो बुद्धको शासन होइन । त्यस्ता मार्ग र भूमिहरूमा पनि परमार्थ चित्तोत्पादमा आश्रित भएर प्रज्ञापक्षको शून्यता भावना गर्नाले उपादान हेतुको काम गर्छ र उपाय पक्षको महाकरुणाले सहकारी प्रत्यय (कारण) को काम गर्छ । त्यसबाट पाँच मार्गको सिद्धि हुन्छ । संवृत्ति चित्तोत्पादमा आश्रित भएर उपायपक्षको महाकरुणाले उपादान हेतुको काम गर्छ भने प्रज्ञा पक्षको शून्यताले सहकारी प्रत्यय (कारण) को काम गर्छ र दश भूमि लाभ हुन्छ । बुद्ध हुँदाखेरि मार्गको अन्त धर्मकाय र भूमिको अन्त रूपकाय हो ।

यी माथि भनिएका कुराले त्यामा [य्यसं] क्रान्ति र क्षेत्रविशुद्धिको विषयलाई बताउँछन् । त्यसपछि आठौं अप्रतिष्ठित निर्वाण, नवौं उत्तमबोधि, र दशौं शास्ता यी तीन ओटाचाहिं अन्तिम फलमा पर्दछन् ।

# अप्रतिष्ठित निर्वाण

यसको अर्थ हो प्रज्ञाद्वारा संसारमा पनि नरहनु करुणाद्वारा निर्वाणमा पनि नरहनु, जुन कुरा अभिसमयालंकारमा स्पष्टसँग बताइएको छ–

**"प्रज्ञया न भवे स्थानं कृपया न शमे स्थितिः"**

# उत्तम (श्रेष्ठ) बोधि र शास्ताका गुण

बुद्धका साधारण र असाधारण गुण सबै अनाभोग (स्वत: नै भइरहने याने आफूले चाहनु नपर्ने गरी स्वत: भइरहेका) हुन्छन्। शास्ताको अर्थ नै महानिर्वाण अरूलाई देखाउन सक्ने भन्ने हो। त्यो पनि श्रावकको निर्वाण जस्तो 'क्षयज्ञान' र 'अनुत्पादज्ञान' मात्र नभएर निर्वाणप्राप्ति भएतापनि सदा सत्वको हित गर्ने हुनु हुन्छ। यिनीहरूको अर्थ तीन किसिमले बताइन्छ।

१. बुद्धको लक्षण, २. कायको व्यवस्था, ३. गुणधर्मको सफुटार्थ व्याख्या।

१. **बुद्धको लक्षण** :

प्रहाणसम्पद् र ज्ञानसम्पद्ले युक्त हुनु नै बुद्धका लक्षण हुन्। त्यसमध्ये प्रहाणसम्पद् भनेको क्लेश आवरण र ज्ञेय आवरणहरूको वासनासहित प्रहाण गरेको हुनु हो भने ज्ञानसम्पद् भनेको 'यथावत्' र 'यावत्' रूपको बोध गरेको हुनु हो। आचार्य मतिचित्रले "सर्वज्ञमा सबै गुण हुन्छन्, भएर पनि ती गुणहरू घट्दैनन्, केवल दोषहरूको वासनासमेत उहाँहरूमा नहुने मात्र हो।" भन्नुभएको छ।

२. **कायव्यवस्था**

यसमा तीन किसिमले बताइन्छ। (क) त्रिकायको भेद, (ख) दुई कायमा समावेश, (ग) त्यसमा ज्ञान हुन्छ कि हुँदैन भन्नेमा विचार

(क) त्रिकायको भेद:–

(अ) स्वभावकाय:- स्वभावले नै धातु विशुद्ध भएर आगन्तुक प्रहेय (त्याज्य) बाट पनि मुक्त भई दुवैबाट विशुद्ध

भएको हुनु स्वभावकाय हो। अभिसमयालंकारमा भनिएको छ–

**सर्वाकारां विशुद्धिं ये धर्माः प्राप्ता निरास्रवाः ।**

**स्वाभाविको मुनेः कायस्तेषां प्रकृति लक्षणः ॥**

मुनिको स्वभावकायको लक्षण नै अनास्रव धर्मलाभ गरी सदा सर्वदा विशुद्ध हुनु हो।

(आ) सम्भोगकायः- यसमा पाँच निश्चयहरू हुन्छन्। ती हुन् -

१) स्थानविनियतः- सम्भोगकाय अकनिष्ठ भुवनमा नै हुन्छ।

२) कायविनियत : काय चाहिँ ३२ लक्षण र अस्सी अनुव्यञ्जनहरूले विभूषित हुन्छ।

३) वचनविनियत : केवल महायानको धर्मचक्रलाई अटुट रूपमा प्रवर्तन गरिरहेका हुन्छन्।

४) चित्तविनियत[१३५]: चित्त चाहिँ चारओटा ज्ञानले युक्त हुन्छ। (धर्मधातुज्ञानवाहेकका आदर्श आदि चार ज्ञानहरू हुन् र पाँच ज्ञान र चारकाय त तन्त्रको आफ्नो निजी विशेषता हो - सोनाम् चेमोका अनुसार)

५) परिवारविनियतः दशौं भूमिका बोधिसत्वहरू मात्र उहाँका परिसरमा हुन्छन् र उनीहरूलाई सन्तुष्ट पार्नु हुन्छ।

अभिसमयालंकारमा भनिएको छ कि -

**द्वात्रिंशल्लक्षणाशीतिव्यञ्जनात्मा मुनेरयम् ।**

---

१३५ योगाचार परम्परामा चित्तविनियनको सट्टा काल विनियतको उल्लेख पाइन्छ जसको अर्थ हुन्छ जवसम्म संसार रहन्छ तवसम्म संभोगकाय रहन्छ। संसारको अन्त नहुने भएकोले यसलाई नित्य मान्न त सकिन्छ परन्तु यो तत्वसंग्रहमा शान्तरक्षितले भने अनुसारको क्षणभङ्गुरता सहितको नित्य याने परिणामी नित्य हो न कि कूटस्थ नित्य।

**साम्भोगिको मतः कायो महायानोपभोगतः ॥**

"३२ लक्षण ८० व्यञ्जनले युक्त भई महायानको उपभोग गर्ने मुनिको संभोगकाय हो।"

(इ) निर्माणकाय : यसमा चार कुरा छन् -

१) स्वरूप :- स्वरूपचाहिँ सम्भोगकायको अधिपति प्रत्ययवाट उत्पन्न भएको हुन्छ।

२) देश :- आकाश समानका विनेयजनहरू जहाँ छन् त्यहाँ उत्पन्न हुन्छ।

३) काल :- अविच्छिन्न।

४) कर्म :- केवल सत्वको हित गर्ने मात्र।

यस्ता निर्माणकायका पनि तीन भेदहरू हुन्छन्। ती हुन्-

अ) जाति निर्माणकाय- तुषितभुवनमा विराजमान भएका आदि हुन्।

आ) शिल्पी निर्माणकाय- गन्धर्वराज सुनन्दलाई विनीत गर्नको लागि 'सारङ्गी वजाएको' रूप आदि हुन्।

इ) उत्तम (श्रेष्ठ) निर्माणकाय- शाक्यमुनि वुद्ध आदि मायारूपहरू हुन् भनेर अभिसमयालङ्कारमा भनिएको छ -

**करोति येन चित्राणि हितानि जगतः समम्।**

**आभवात् सोऽनुपच्छिन्नः कायो नैर्माणिको मुनेः ॥**

"जसले भव रहँदासम्म लोकको अनेक हित गर्छ त्यो मुनिको निर्माणकाय अटुट हुन्छ।" कुनै सूत्र र तन्त्रमा चार काय वताइएको छ। त्यसअनुसार व्याख्या गर्दा यहाँ वताइएको स्वभावकायलाई नै धर्मकाय भनिन्छ। त्यस्ता तीनै काय अभेद भएको विशेषकायलाई कसैले स्वभावकाय भन्ने मान्दछन्, तर यो काय गुह्यमन्त्रनयका तन्त्रहरूमा नै विशेष ख्याति भएकाले यहाँ वताईंदैन।

(ख) दुई कायमा समावेश :-

तीे कायलाई धर्मकाय र रूपकाय गरी दुई काय पनि भनिन्छ र त्यसैलाई स्वार्थकाय र परार्थकाय पनि भनिन्छ भने कतै धर्मकायलाई परमार्थकाय र रूपकायलाई संवृतिकाय भन्ने पनि गरिन्छ ।

(ग) त्यसमा ज्ञान छ कि छैन भन्नेमा विचार :-

यसमा परपक्षको खण्डन र आफ्नो मत एवं त्यसको मण्डन गरिन्छ। कसैले सर्वज्ञ हुनाले र दुई सम्भार पूर्तिको परिपाककाय भएकाले वुद्धमा स्वतन्त्र ज्ञान छ भन्ने मान्छन् । त्यसो नभएमा कि त अभाव हुन पुग्छ, यदि भाव हो भने पनि जड हुन जान्छ, श्रावकको निरोध समान हुन जान्छ या उच्छेदवादी तीर्थिक मत हुन जान्छ भन्ने जस्ता अनेक आगम र युक्तिद्वारा ज्ञान नभएको पक्षलाई प्रतिषेध गरी 'वुद्धमा स्वतन्त्र ज्ञान छ' भन्ने सिद्ध गर्छन् । फेरि कसैले यदि बुद्धमा ज्ञान छ भने उसमा भ्रान्तिभासित हुन जान्छ, आत्मग्राह हुन जान्छ, चित्तमात्री समान हुन जान्छ र शाश्वतवादी तीर्थिकसँग फरक हुँदैन भन्नेजस्ता आगम र युक्तिद्वारा स्वतन्त्र रूपमा ज्ञान नभएको सिद्ध गर्छन् ।

यी दुवै मत उचित छैनन्, किनकि स्वतन्त्रमा ज्ञान 'सत्' छ भने शाश्वतवादी तीर्थिकसमान हुनजान्छ, आत्मग्राह हुनजान्छ, नित्य हुनजान्छ आदि भनेर ज्ञान नभएको मान्नेहरूले गरेको खण्डन लाग्न पुग्छ किनभने 'छ' भन्ने ग्राह समान हुनाले । स्वदृष्टिमा नभएर परदृष्टिमा ज्ञान छ भन्ने हो भने पनि वुद्धमा गुण हुँदैन भन्ने हुन्छ। अझै वुद्ध 'छ' कि 'छैन' भन्ने विचार गर्दा यदि छैन भने मार्गभावना गरेको व्यर्थै हुनजान्छ, यदि वुद्ध छ भने 'वुद्ध हुने तर ज्ञान नहुने' भन्दाखेरि वुद्ध जड हुनजान्छ। यदि वुद्धमा ज्ञा॰। नभए पनि प्रणिधानवाट परार्थ गर्न सक्छन् भन्ने हो भने प्रणिधानवाट सिद्धि हुने भए त 'वोधिप्राप्ति होस् भन्ने

प्रणिधान गर्दा त्यो किन सिद्ध भएन ? बोधिप्राप्तिको प्रणिधान सिद्ध नहुने तर परार्थको प्रणिधान सिद्ध हुने भन्ने कुनै पनि कारण हुँदैन, सिद्ध भए दुवै हुनु पर्छ, नभए दुवै हुनु हुँदैन। त्यसमा पनि बुद्ध छैन र ज्ञान चाहिँ छ भन्नु झन् युक्तिबाट सिद्ध गर्न सम्भव हुँदैन।

परमार्थ र संवृति यी दुईमध्ये पहिलो अनुसार बुद्धिको विषयबाट अलग हुने भएकोले 'छ' 'छैन' आदि सबै अन्तबाट मुक्त भएको हुन्छ। यसैलाई अभिप्राय गरेर समाधिराज सूत्रमा भनिएको छ, "निर्वाणको धर्ममा धर्म रहन्न किनभने त्यो नहुने भएकोले कहिल्यै छ भन्न सकिँदैन। विकल्पद्वारा 'छ' या 'छैन' भनेर दर्शाउने विचार गरेर दुःख शान्त हुँदैन।" त्यस्तै आचार्य आर्यले भन्नुहुन्छ "छ भन्ने शाश्वत दृष्टि हो र छैन भन्ने उच्छेददृष्टि हो। 'छ' 'छैन' जस्ता चार कोटिहरू यो शान्त (स्थितिमा) कहाँ हुन सक्छन् ?" सूत्रमा ज्ञान भन्ने कुरा त 'छ' या 'छैन' यी दुवैबाट मुक्त हुन्छ भनिएको हुन्छ।

दोस्रो संवृतिमा, यदि चित्त र चैतसिकलाई नै ज्ञानको नाम दिने हो भने पनि बुद्धमा त्यो हुँदैन किनकि भ्रान्तिको क्षय भइसकेको हुन्छ। सर्वज्ञज्ञान भएको हिसाबले हेर्दा बुद्धमा ज्ञान छ किनकि चित्तको स्थान परिवर्तनको काय प्राप्त भइसकेको छ। आचार्य चन्द्रगोमीका अनुसार बुद्धभूमिमा स्थानपरिवर्तन भनेको यसरी बताइएको छ-

"आलयविज्ञान परिवर्तन भएर आदर्शज्ञान हुनगयो त्यो पनि धर्मधातुको स्वभावमा प्रकाशित छ। क्लिष्टमनोविज्ञान परिवर्तन भएर समताज्ञान हुन गयो, मनोविज्ञान परिवर्तन भएर प्रत्यवेक्षणा ज्ञान हुन गयो, पञ्चविज्ञान स्थान परिवर्तन भएर कृत्यानुष्ठानज्ञान हुन गयो।"

त्यसैले संवृति संसार, परमार्थ निर्वाण र वुद्धचाहिं अप्रतिष्ठित युगनद्धकाय हुनुहुन्छ। आचार्य आर्यले भन्नुभएको छ, "संसार र निर्वाणको अलग अलग वोध गरेर जसमा राम्ररी मिसाइन्छ त्यसलाई युगनद्ध भनिन्छ।" "युगनद्धको समाधिमा वसेर फेरि कुनैमा पनि अभ्यास गर्दैनन्। त्यस्ता पूर्णयोगी महावज्रधर सर्वश्रेष्ठ सर्वज्ञ हुन पुग्छन्।" भनिएको छ।

त्यसैले आचार्य आर्यले पनि दृष्टिको अवस्थामा निष्प्रपञ्च अन्तिम तथतावोधलाई मान्नुहुन्छ भने मार्गभावनाको अवस्थामा अन्तिम परमार्थसँग विरोध नहुने गरी गरिने उपाय कुशलताको अभ्यासलाई मान्नुहुन्छ। फलको अवस्थामा अन्तिम युगनद्ध अप्रतिष्ठित निर्वाणलाई मान्नुहुन्छ।

यहाँ 'छ' भनिएको ज्ञान स्वतन्त्र भएमा 'ज्ञान छ' भन्ने पक्षलाई गरेको दोष लागू हुन्छ, परतन्त्र भएमा 'ज्ञान छैन' भन्ने पक्षलाई दिइएको दोष पनि समान रूपमा लाग्छ भन्ने हो भने स्वतन्त्र र परतन्त्र भनेर 'ग्राह' गर्दा ग्राहच र ग्राहक हुन जान्छ। 'ग्राहच' र 'ग्राहक' स्थान परिवर्तन हुँदा यी दुवैवाट मुक्त भएको ज्ञान सिद्ध हुन्छ। त्यसैले आदर्शज्ञान आदिको नाम दिइन्छ। अतः सूत्रालंकारमा "आदर्शज्ञानमा अहं हुँदैन, नटुटेर सदा रहन्छ।" त्यस्तै ज्ञानसिद्धिमा "सर्वतथागतको ज्ञानमा आफू र अरू सवै वस्तु एकनास ज्ञान भएकोले समताज्ञान हुन्छ" भनिएको छ।

क्लेशचित्तको स्वरूप समताज्ञानमा परिवर्तन भएकोले 'स्वतन्त्र' र 'परतन्त्र' भन्ने व्यवहारवाट मुक्त हुन्छ। धर्मकीर्तिको प्रमाणवार्तिकमा "रूप आदिलाई र मनलाई त्यसरी ग्राहचलक्षणको रूपमा चर्चा गरेको त अशुद्ध वुद्धिवालालाई पो हो त, योगीको ज्ञान त अचिन्त्य हुन्छ"

भनिएको छ। फेरि 'परतन्त्रसिद्धि'मा "स्थान परिवर्तन ज्ञान अचिन्त्य हो" भनिएको छ।

**३. गुण धर्मको स्फुटार्थ व्याख्याः**

यसमा दुई गुणधर्महरू वताइन्छन्। साधारण गुणधर्म र असाधारण गुणधर्म। त्यस्ता साधारण र असाधारण गुणहरूद्वारा आफ्नो र अरूको चित्त सन्तानमा महापुण्यप्राप्ति गराउने इच्छा भएर श्लोकको भाकाले स्तुति गरिन्छ। यसमा पहिले सूत्रालंकारमा वताइए अनुसार वताई त्यसमा अपुग भएकालाई आफैंले थपेर वताइने छ।

चार अप्रमाणको वारेमा-

**अनुकम्पक सत्वेषु संयोगविगमाशय।**
**अवियोगाशय सौख्य-हिताशय नमोऽस्तु ते॥**

चार अप्रमाणहरूलाई संग्रह गर्दा सुखाशय र हिताशय गरी दुई वर्गमा संगृहीत गरिन्छ। त्यसमध्ये सुखाशय अन्तर्गत सुखसँग संयोग होस् भन्नु मैत्री हो, दु:खसँग वियोग होस् भन्नु करुणा हो र ती दुवैवाट वञ्चित नहोस् भन्नु मुदिता हो। हिताशय चाहिँ उपेक्षाद्वारा सुखानुराग र दु:खद्वेष यी दुई संक्लेशलाई समान ठानेर सदा हितैषी हुनु हो। (त्यस्ता आशय भएका तपाईंलाई वन्दना !)

विमोक्ष, अभिभ्वायतन र कृत्स्नायतनको वारेमा-

**सर्वावरणनिर्मुक्त सर्वलोकाभिभू मुने**
**ज्ञानेन ज्ञेयं व्याप्तं ते मुक्तचित्त नमोऽतु ते॥**

'रूपी रूपाणि पश्यति शून्यम्' आदि आठओटा विमोक्षहरू (भएर पनि) लौकिक व्यक्तिहरू दुई आवरणवाट

मुक्त हुँदैनन् । श्रावक र प्रत्येकबुद्धहरूले क्लेश आवरणलाई प्रहाण गरेका हुन्छन् । बुद्ध त ज्ञेयआवरणबाट पनि मुक्त भएका हुन्छन् ।

लौकिक व्यक्तिले आफ्नो गोचरको विषयलाई मात्र अभिभव गर्न (कब्जा जमाउन) सक्छन् । श्रावकले दुई साहस्रलोकधातुलाई अभिभव गर्न सक्छन् । प्रत्येकबुद्धले त्रिसाहस्र लोकधातुलाई अभिभव गर्न सक्छन् भने सम्यक्सम्बुद्धले सबै लोकधातुलाई अभिभव गर्न सक्छन् ।

दश कृत्स्न (कसिण) लाई लौकिक व्यक्तिले संकुचित (सीमित) रूपमा जान्दछन्, श्रावक र प्रत्येक बुद्धले विशाल रूपमा (बृहत्) जान्दछन् भने सम्यक् सम्बुद्धले सबै ज्ञेयमा ज्ञानले व्याप्त भएको जान्दछन् ।

लौकिक व्यक्ति मुक्त हुँदैनन्, श्रावक र प्रत्येक बुद्धहरू क्लेशको वासना[१३६] ज्ञेयावरणबाट मुक्त हुँदैनन्, भने यी (सम्यक् सम्बुद्ध) मुक्त भएका हुन्छन् । यी तीनद्वारा गुणको विपक्षबाट मुक्त भएकोले उहाँलाई मुक्तचित्त भनिन्छ । (त्यस्तालाई वन्दना !)

## अरणाको विषयमा (बुद्धमा क्लेश नभएको बारेमा)

**अशेषं सर्वसत्वानां सर्वक्लेशविनाशक ।**
**क्लेशप्रहारक क्लिष्टसानुकोश नमोऽस्तु ते ॥**

---

[१३६] अनुशाय धातु र ज्ञेयावरण भिन्दै कुरा हुन् । प्रासङ्गिक माध्यमिकमा ज्ञेयावरणलाई क्लेश-वासना पनि भनिन्छ । किनभने ज्ञेय आवरण ( ज्ञाता र ज्ञेयको स्वभावसिद्धता) को कारणले नै राग द्वेष आदि क्लेश अनुशयहरू आउने हो । अन्य बौद्ध निकायहरूमा क्लेशवासना र अनुशयधातु पर्यायवाची जस्तै हुन जान्छन् ।

बुद्धले सबै सत्वहरूको क्लेशलाई विनय गर्नुहुन्छ, क्लेशको प्रतिपक्ष लगाउनु हुन्छ र क्लेशले युक्त जनहरूमा करुणा गर्नुहुन्छ। श्रावक आदि अरूले आफूमा अलम्वन गरी उत्पन्न भएका क्लेशलाई मात्र त्यागछन् र अरूको निराकरण गर्दैनन्[१३७]। (त्यस्ता तपाईंलाई वन्दना !)

प्रणिधिज्ञानको वारेमा-

**अनाभोग निरासङ्ग अव्याघात समाहित।**
**सदैव सर्वप्रश्नानां विसर्जक नमोऽस्तु ते॥**

श्रावकको प्रणिधिज्ञानमा प्रयत्न र शमथको आधारवाट साधारण कुराको मात्र ज्ञान हुनाले सवै शंका निवारण गर्न सक्दैनन्। वुद्धले त अनाभोग भएर (प्रयत्न विना नै) आसक्तिरहित भई, सवै ज्ञेयहरूमा अव्याघात (नअड्किने) भई सदा समाहित (समाधिस्थ) भएर सवैं प्रश्नहरूको संशयलाई छेदन गर्नुहुन्छ। (तपाईंलाई वन्दना !)

प्रतिसंविद् गुणको बारेमा

**आश्रयेऽथाश्रिते देश्ये वाक्ये ज्ञाने च देशिके।**
**अव्याहतमते नित्यं सुदेशिक नमोऽस्तु ते॥**

'आश्रय' भनेको धर्म अर्थात् लक्ष्य हो र त्यसमा 'आश्रित' भनेको अर्थ अर्थात् लक्षण हो। यी दुईलाई देशना गरिन्छ त्यसैले देश्य हुन्। अनि 'वाक्य' भनेको वाचा निरुक्ति (वचनद्वारा बताउनु) हो र ज्ञान प्रतिभान हो। यी

---

१३७ अभिधर्मकोष अनुसार श्रावकको अरणामा उनले गर्दा अरूको चित्तमा क्लेश उत्पन्न भई अरूको हानि नहोस् भन्ने स्मृति सम्प्रजन्य मात्र हुन्छ।

दुई देशिक हुन् । (किनकि यिनीहरूमार्फत् देशना गरिन्छ ।) यसरी यी चार प्रतिसंविद्मा अव्याहतमति भएर उत्तम रुपमा देशना गर्ने तपाईंलाई वन्दना !

अभिज्ञाको बारेमा-

**उपेत्य वचनैस्तेषां चरिज्ञ आगतौ गतौ ।**
**निःसारे चैव सत्वानां स्ववबाद नमोऽस्तु ते ॥**

कायप्रातिहार्य भनेको ऋद्धि अभिज्ञाद्वारा जहाँ विनेयजन वसेका छन् त्यहाँ पुग्नु हो। चित्तादेशप्रातिहार्य भनेको उसको चित्त-चरित्रलाई चेतःपर्यायाभिज्ञाद्वारा जान्नु हो। वाचानुशासनप्रातिहार्य भनेको दिव्यश्रोत्राभिज्ञाद्वारा तिनीहरूको आ-आफ्नो भाषाको ज्ञान हुनु हो। अर्थ विभाग- पूर्वनिवासानुस्मृतिले सत्व (विनेय) हरू पहिलो अन्तदेखि (पूर्वान्तदेखि) कहाँ कहाँ हुँदै च्युत भएर संक्रान्ति भई यहाँ आएका हुन् भन्ने जान्दछ भने दिव्यचक्षुले यहाँबाट च्युत भएपछि कहाँ जान्छन् भन्ने भविष्य जान्दछ। आस्रवक्षयज्ञानवाट संसारदेखि निःसरण (मुक्त) भएको थाहा हुन्छ। यसरी आफूले जानेर सही उपदेश गर्न सकेको त्रिकालकै अज्ञान प्रहाण गरिसकेका हुनाले हो। पहिला पाँच अभिज्ञाहरू आस्रवसहित भएकाले लोकसँग मिल्ने अभिज्ञा हुन्। छैठौं अभिज्ञा अनास्रव भएकोले शैक्षसँग मिल्ने अभिज्ञा हो। (त्यस्ता अभिज्ञायुक्त तपाईंलाई वन्दना ।)

लक्षणानुव्यञ्जनाको वारेमा-

**सत्पौरुषं प्रपद्यन्ते त्वां दृष्ट्वा सर्वदेहिनः ।**
**दृष्टमात्रात् प्रसादस्य विधायक नमोऽस्तु ते ॥**

महापुरुष भनेर चिनाउने ३२ लक्षण र सुन्दरता जनाउने ८० अनुव्यञ्जनले अलंकृत कायले युक्त भएकाले तपाईंले गरेको कर्म देख्ने वित्तिकै अरूमा श्रद्धा जागृत हुन्छ। (त्यस्ता तपाईंलाई वन्दना।)

चार परिशुद्धिको विषयमा-

**आदानस्थानसन्त्यागनिर्माणपरिणामने।**
**समाधिज्ञानवशितामनुप्राप्त नमोऽस्तु ते॥**

चार परिशुद्धिहरूले चार अधिकार जनाउँछन्। त्यसमध्ये आधार परिशुद्धि भनेको क्लेश र वासना सवैको आधार स्वरूप भएका सवै कर्महरूलाई प्रहाण गरिसकेको हुनु हो। त्यसैले आफूले चिताएअनुसार शरीर लिन सक्नु, चाहे अनुसार आयु राख्न सक्नु, चाहेअनुसार परिणामना गर्नसक्नु यी तीन कुरामा अधिकार हुन्छ। आलम्वन परिशुद्धि भएकोले नभएको निर्माण गर्ने र भएको परिवर्तन गर्ने अधिकार हुन्छ। चित्तपरिशुद्धि भनेको सवै दौःष्ठूल्यवाट पार भएर सबै कुशल आर्जन गर्नु हो। त्यसैले गर्दा सदा सर्वदा सवै किसिमका समाधिमा अधिकार हुन्छ। प्रज्ञापरिशुद्धि भनेको अज्ञानको सन्तान सदाको लागि कटिसक्नु हो। त्यसैले सबै ज्ञेयमा अनवरोध (नछेकिने) ज्ञानको अधिकार प्राप्त हुन्छ। (यस्ता अधिकार प्राप्त तपाईंलाई प्रणाम छ।)

दशबलको बारेमा-

**उपाये शरणे शुद्धौ सत्वानां विप्रवादने।**
**महायाने च निर्याणे मारभञ्ज नमोऽस्तु ते॥**

१. स्थानास्थानज्ञान वल, २. कर्मविपाकज्ञान वल, ३. नानाधातुज्ञान वल, ४. नानाधिमुक्तिज्ञान वल, ५. इन्द्रियपरापरज्ञान वल, ६. सर्वत्रगामिप्रतिपथज्ञान वल, ७. इन्द्रिय-बोध्यङ्ग-ध्यान-विमोक्ष-समाधि-समापत्ति-संक्लेश-व्यवदान-व्यवस्थान-ज्ञान वल, ८. पूर्वनिवासानुस्मृतिज्ञान वल, ९. दिव्यचक्षुद्वारा च्युत्युपपत्तिज्ञान वल, १०. आस्रवक्षयज्ञान वल। संक्षेपमा भन्दा स्थान, कर्म, धातु, अधिमुक्ति, इन्द्रिय, सर्वत्रगामी, व्यवस्था, पूर्वनिवास, च्युति; आस्रवक्षयज्ञान यी नै मुनिका दशवल हुन्। यो समस्त श्लोक हो। यहाँ तिनीहरूको कार्य एक एक गरी वताइन्छ। चार अर्थद्वारा सत्वहरूलाई ठग्ने मारलाई तथागतका दशवलले विनाश गर्ने काम गरेका हुन्छन्।

उपायद्वारा ठग्ने मारलाई यसरी विनाश गरेको हुन्छ- हिंसा गरी वलिपूजा गर्ने, पानी (गङ्गा) आदिमा डुबेर प्राणत्याग गर्दा सुगति र मोक्ष लाभ हुन्छ भन्ने मारलाई स्थानास्थानज्ञान वलले निराकृत गर्दछ। किनकि कर्मविपाकको सही ज्ञान भएकोले कुशलवाट नै सुगतिमा जाने स्थान छ र अकुशलवाट जाने स्थान छैन भन्ने थाहा छ।

शरणद्वारा ठग्ने मारलाई यसरी - पाप गरी पुण्य नगरे तापनि ईश्वर र विष्णु आदिलाई सन्तुष्ट पारेमा दुर्गतिबाट पार हुन्छ भन्नेलाई कर्मविपाकज्ञान वलले निराकरण गर्दछ। किनकि दानादि पुण्यकर्मले नै सुख पाइन्छ, ईश्वर आदि सुखका हेतु हुन सक्दैनन् भनेर सूत्रालंकारमा वताइएको छ।

शुद्धिद्वारा ठग्ने मारलाई यसरी - आस्रवसहितको कर्म जस्तै - स्नान गर्ने, पीडा हुने गरी तपस्या गर्ने आदिबाट शुद्ध हुन्छ भन्छन् तापनि त्यो मार्ग होइन, किनकि त्यसलाई

ध्यान आदि विशुद्धिमार्ग देखाएर समाधि, समापत्ति ज्ञानको बलले निराकरण गर्दछ।

निर्याण (मुक्ति) द्वारा ठग्ने मार भनेको पात्रसँग नमिल्दो मार्ग देखाउनु हो। त्यसलाई इन्द्रिय-परापरत्व-ज्ञान आदि बाँकी सात बलले निराकरण गर्दछन्। कसरी ? इन्द्रिय-परापर-ज्ञानले श्रद्धा आदि पाँच कुरालाई उत्तम, मध्यम र अधम भन्ने थाहा पाएर त्योसँग मिल्दो किसिमले धर्मदेशना गर्दछन्। नानाधिमुक्तिज्ञान बलले सत्वहरूको इच्छा र बुझाइएको अधम, मध्यम र उत्तम तीनै तहको धर्मको ज्ञान हुन्छ। सर्वत्रगामिप्रतिपथले ती सत्वहरूले प्रवेश गर्ने द्वारअनुसार मिल्दो किसिमले उपचार गर्ने कुराको ज्ञान हुन्छ। जस्तै - रागको उपचारको लागि अशुभभावनाजस्ता कुराको ज्ञान हुन्छ। पूर्वनिवासानुस्मृतिले सबै दिशाका सत्वहरूको पहिलेको आ-आफनो गोत्र, नाम, संकेत, पहिलेका प्रत्येक निवास आदि आठ किसिमका आधारमा गरिएका छ किसिमका चर्याहरूको स्मरण (अनुस्मरण) हुन्छ। ती आठ किसिमका आधार यी हुन्– नाम यो हो, गोत्र यो हो, थर यो हो, भोजन यस्तो थियो, सुख दुःख यस्ता थिए, आयु यति थियो, काल यो थियो, यतिसम्म बाँचेको थियो । यिनीहरूमा आश्रित ६ चर्याहरूमा, उनीहरूलाई बोलाउने नाम, उनीहरूको वंश (क्षत्रिय आदि), माता पिता, भोक, प्यास आदि मेटाउनको लागि गरेको कर्म, यौवन-विपत्ति (जवानी, बुढ्याइँ) र अनेक थरीका आयु पर्छन् । आकार यिनै छ चर्याहरू हुन् भने अर्थहेतु (चिनो, संकेत) चाहिँ आठ आधार हुन्।

दिव्यचक्षु भनेको देवलोकमा चारध्यानको फल अतिपूर्ण भएर शुद्ध ध्यानमा आश्रित भई अत्यन्त शुद्ध हुनु हो। कामधातु देवलोकमा त्योसँग नाम मात्र मिल्ने चक्षु हुन्छ।

सामान्य मानिसमा त त्यो पनि हुँदैन। त्यसैले त्यो मनुष्यबाट परको कुरा हो। त्यसका विषयहरू प्राणीका मृत्यु र अन्तराभव यी दुई हुन्छन्। सूत्रमा बताइएको छ,

"अन्धकारमा प्रवेश गर्दा कालो कम्बल अथवा अन्धकारमा पसेको जस्तो वर्ण हुन्छ। उज्यालोमा प्रवेश हुँदा चन्द्रमाको ज्योति अथवा वाराणसीको वस्त्रजस्तै वर्ण भएको हुन्छ। राम्रो र नराम्रो तिनीहरू नै भएकोले दुर्गति र सुगतिमा जाने हुन्छन्। काय वाक्‌चित्तको दोष हुनेहरू दु:शील संकल्प भएका हुन्छन्.....। मिथ्यादृष्टि दुई किसिमका हुन्छन् एक:- सबैलाई अपवाद गर्नु, दुई:- आर्यहरूलाई अपवाद गर्नु। त्यसले गर्दा विपरीत कर्मको हेतु र फलमा आसक्ति भएकोले विपरीत कर्मको अभिसंस्कार गर्दछ। त्यसैले सम्यक् धर्म ग्रहण गर्नाले अहिले सुख हुन्छ र परलोकमा दु:ख हुन्छ या दुवैमा दु:ख हुनजाने हुन्छ। दुर्गतिको मूल हेतु हुन गएकोले त्यो हेतु र प्रत्ययद्वारा भनिएको हो। कायको विनाश भनेको नाम र रूपको परस्पर सम्बन्ध विच्छेद हुनु हो। मृत्यु हुँदा तलबाट मृत्यु हुनु सबभन्दा अधम मृत्यु मानिन्छ। दुर्गति भनेको नराम्रो धर्म र कठोर आचरणद्वारा नराम्रोमा पुऱ्याउने भएकाले हो। दुर्गति भनेको कठोर रूपमा लामो समयसम्म, अटुट रूपमा धेरै दु:ख भोग्नु पर्ने हुनाले हो। अध:पतन भनेको तल्लो वर्गमा रही महाभयानक कहालीलाग्दो र करुणाको शब्द आइरहनुलाई हो।[१३८] ........."

आस्रवक्षय ज्ञान भनेको सबै अनुशयहरूलाई प्रहाण गर्ने प्रतिपक्ष हो। त्यो अनास्रव उत्तम-प्रज्ञा-युक्त चित्त हो, जुन अधिक प्रज्ञाद्वारा संगृहीत हुन्छ। ती नै अनास्रव चेतोविमुक्ति

---

[१३८] यो सूत्रको उद्धरण हो तर यहाँ धेरै प्रासङ्गिक देखिँदैन।

र प्रज्ञाविमुक्ति हुन्। त्यो पनि पहिले नै मार्ग भावना गरेर भवान्तमा (अन्तिम जन्ममा) लाभ गरेपछि मैले लाभ गरें, भन्ने कुरा छैठौं अभिज्ञा (यही आस्रवक्षयज्ञान) द्वारा आफूले बुझिन्छ र चाहेमा अरूलाई पनि देखाउन सकिन्छ। त्यसैले त्यो जीवनमा आफ्नो अभिज्ञाद्वारा प्रत्यक्ष गरेर बताउंछन् भनिएको छ। (त्यस्तो लाभ गरेका तपाईंलाई वन्दना !)

चार वैशारद्यको वारेमा-

**ज्ञानप्रहाणनिर्याणविध्नकारकदेशिक**
**स्वपरार्थेऽन्यतीर्थ्यानां निराधृष्य नमोऽतु ते।**

स्वार्थ र परार्थ, प्रहाण र निर्याणलाई विध्न गर्ने चार किसिमका धर्म हुन्छन् भनी लौकिक अभिमानीहरूका सामु देशना गर्दा वुद्धमा भय, त्रास र केही भन्ला कि भन्ने कुनै धक नभई तिनीहरूलाई अभिभव गर्नुहुन्छ। लौकिक अभिमानी कस्ता हुन् त ? जन्मयोनिले अभिमानी भएका देवता, ऋद्धिले अभिमानी भएका मार, अप्रामाण्यले अभिमानी हुने ब्रहमा, गुणले अभिमानी भएका श्रमण, गोत्रले अभिमानी भएका ब्राह्मण हुन्। त्यस्ता अभिमानीले धर्मानुसार प्रतिवाद गर्नु 'दोषीलाई दोषी हो भनेर दोष देखाउनु' हो। तर वुद्धमा धर्मानुसार कुनै पनि दोष नहुने भएकोले त्यस्तो दोषारोपण झूटो हुन्छ र उनीहरूको आफ्नै दोष हुन जान्छ। त्यस्ताले दोष लगाए पनि सत्पुरुषलाई दोषले हुँदैन। (त्यस्ता तपाईंलाई वन्दना !)

तीन आरक्षको वारेमा-

**निगृह्यवक्तः पर्षत्सु द्वयसंक्लेशवर्जित।**
**निरारक्ष असम्मोष गणकर्ष नमोऽस्तु ते॥**

कायवाक्चित्त परिशुद्ध भइसकेको हुनाले कसैले दोष देखाउँछ कि भनी दोष लुकाउनु नपर्ने हुनाले गणको सामुमा खुल्ला किसिमले सबैलाई अभिभव गरी धर्मदेशना गर्नुहुन्छ। विनेय जनहरूलाई धर्मदेशना गर्दा कसैले राम्रोसँग साधना गरेका हुन्छन्, कसैले नराम्रोसँग साधना गरेका हुन्छन्, कसैले राम्रो र नराम्रो दुवै मिसाएर गरेका हुन्छन्। त्यसमा तिनीहरूप्रति राग द्वेष नगरीकन शिष्यगणको संग्रह गर्नुहुन्छ। (त्यस्ता तपाईंलाई वन्दना ।)

वासना समुद्घात गरेको वारेमा-

**चारे विहारे सर्वत्र नास्त्यसर्वज्ञचेष्टितम् ।**
**सर्वदा तव सर्वज्ञ भूतार्थिक नमोऽस्तु ते ॥**

अर्हत्हरूमा हिंड्ने, वस्ने आदि चर्याहरूमा क्लेशक्षय भए तापनि त्यसको वासना (ज्ञेयावरण) लाई नन्यागिएकोले तिनीहरु सर्वज्ञ हुँदैनन्। त्यसैले चरित्रमा पनि हात्तीमा भ्रान्ति हुनु, रथमा ठक्कर लाग्नु जस्ता कुरा हुने हुन्छन्, तर वुद्धमा त्यो नहुने भएकाले सर्वज्ञको सम्यक् अर्थले युक्त हुनुहुन्छ । (त्यस्ता तपाईंलाई वन्दना !)

असम्मोषताको वारेमा-

**सर्वसत्वार्थकृत्येषु कालं त्वं नातिवर्तसे ।**
**अवन्ध्यकृत्य सततमसम्मोष नमोऽस्तु ते ॥**

श्रावक र प्रत्येक वुद्धले विर्सिन सक्ने हुनाले सत्वको हित त्याग्न सक्ने सम्भावना हुन्छ। वुद्धले त कुन स्थानमा कुन सत्वलाई कुन कालमा, कुन अर्थमा, कस्तो तरिकाले हित गर्ने भन्ने कुरामा समय खेर नफाली त्यसको

उपायलाई दर्शाउन नविर्सिने भएकाले सधैं कार्यको फल भद्र नै रहन्छ। (त्यस्ता तपाईंलाई वन्दना !)

महाकरुणाको विषयमा-

**सर्वलोकमहोरात्रं षट्कृत्वः प्रत्यवेक्षसे ।**
**महाकरुणया युक्त हिताशय नमोऽस्तु ते ॥**

सधैंभरि कुन सत्व हीन हुँदै गयो, कुन सत्व विकसित भयो, कसलाई दुर्गतिवाट तान्नुपर्छ भन्नेजस्ता कुरामा हिताशय (हितचिन्तन) गरिराख्नु हुन्छ। (त्यस्ता तपाईंलाई वन्दना गर्छु !)

अष्टार आवेणिक गुणको वारेमा-

**चारेणाधिगमेनापि ज्ञानेनापि च कर्मणा ।**
**सर्वश्रावकप्रत्येकवुद्धोत्तम नमोऽस्तु ते ॥**

छओटा चर्यासंग्रहमाः- वुद्धको काय स्खलित हुँदैन। जबकि अर्हत्हरू हात्तीमा ठक्कर लाग्ने, काँडाको झयाङमा खस्ने, सर्पलाई खुट्टाले कुल्चिने, अभिचारिणी स्त्रीको स्थानमा प्रवेश गर्ने आदि हुन्छन्, जवकि वुद्धमा त्यो हुँदैन। उहाँमा वाक्‌को कोलाहल हुँदैन। जवकि अर्हत्हरूले खाली (एकान्त) स्थानमा कोलाहल मच्चाउने, अनुपयुक्त स्थानमा घोडाको हँसाईले हाँस्ने पनि हुन्छन्[१३९]। तर वुद्धमा त्यो हुँदैन।

उहाँको चित्त समाधिमा भइरहन्छ। अर्हत्हरूको जस्तो समाधिवाट उठेर पृष्ठलब्धमा प्रवेश गर्नुहुन्न। किनभने समाधि र पृष्ठलब्ध उहाँको युगनद्ध (अभदेरूपमा मिलेको) हुन्छ। उहाँको स्मृतिपरिहाणि हुँदैन। अर्हत्हरूमा स्मृति

---

[१३९] अंगुत्तर निकायमा भनिएको छ कि एकपटक सारिपुत्र लगायत सम्पूर्ण संघले कोलाहल मच्चाएवापत संघवाट निष्कासित हुनु परेको थियो।

हराउन सक्छ परन्तु बुद्धले कार्य र वचनलाई विर्सिने भन्ने हुँदैन। उहाँको नानात्वसंज्ञा हुँदैन। अर्हत्‌हरूमा जस्तो संसार दुःखमात्र हो र निर्वाण सुखमात्र हो भन्ने उहाँमा हुँदैन किनकि उहाँले संसार र निर्वाणको अभेद रूपमा वोध गर्नुभएको छ। उहाँमा अप्रतिसंख्योपेक्षा हुँदैन। अर्हत्‌हरूले प्रत्येकलाई विचार नगरेको वेला सत्वहितलाई त्यागेका हुन सक्छन् परन्तु बुद्धमा त्यो हुँदैन किनभने उहाँ प्रतिसंख्योपेक्षामा रहिराख्नु भएको छ।

छओटा अधिगमसंग्रहमाः- अर्हत्‌हरूले ज्ञेयावरणलाई नत्यागेकोले छन्द आदि छओटा परिहाणि हुनु सम्भव हुन्छ। यहाँ वुद्धमा त्यो सम्भव हुँदैन। किनकि छन्द, वीर्य, स्मृति, समाधि, प्रज्ञा र विमुक्तिको परिहाणि हुँदैन।

तीन ओटा ज्ञानसंग्रहमाः- अर्हत्‌हरू तीनै कालमा अनासक्त र अप्रतिहत हुँदैनन् परन्तु बुद्धमा तिनीहरू नभएको ज्ञान लाभ भएको हुन्छ।

तीन ओटा कर्मसंग्रहमाः- श्रावकले काय, वाक्, चित्तलाई कुशलकर्ममा लगाए तापनि कुनै कुनै वेला अव्याकृत कर्म हुन पनि सम्भव हुन्छ। परन्तु बुद्धले त ज्ञानद्वारा संकल्प गरी ज्ञानपूर्वगामी भएर ज्ञानसँगै भोग्नाले ज्ञानानुपरिवर्तिकर्म गर्नुहुन्छ। त्यसकारण यी १८ ओटा आवेणिक धर्महरूले युक्त भएका हुनाले उहाँ सबै आर्य व्यक्तिहरूका पनि गुरु हुनुहुन्छ। (त्यस्ता तपाईंलाई प्रणाम छ!)

सर्वाकारज्ञताको वारेमा-

**त्रिभिः कायैर्महाबोधिं सर्वाकारामुपागत।**
**सर्वत्र सर्वसत्वानां काङ्क्षाच्छिद नमोऽस्तु ते॥**

तपाईं स्वभावले विशुद्ध र आगन्तुकमल बाट मुक्त धर्मकाय हुनुहुन्छ भने सम्भोगकायद्वारा अकनिष्ठभुवनमा दशौं भूमिका बोधिसत्वहरूलाई अटुट रूपमा महायानको ज्ञान सुनाइरहनुहुन्छ। जाति, उत्तम र शिल्पी निर्माणकायद्वारा अटुट रूपमा सत्वहरूको हित गरी उनीहरूका सबै शंका निवारण गर्नुहुन्छ[१३०]। धर्मकायलाई 'गम्भीर' भनिन्छ। भने दुई रूपकायलाई 'वैपुल्य' भनिन्छ यसरी ज्ञेयलाई यथावत् र यावत् रूपमा बोध गरी स्वार्थ र परार्थ सिद्ध गरेको हुनाले सबै सत्वहरूको शंका निवारण गर्नुहुन्छ। (त्यस्ता तपाईलाई प्रणाम छ।)

६ पारमिता पूरा गरेको बारेमा-

**निरवग्रह निर्दोष निष्कालुष्यानवस्थित।**
**आनिङ्क्ष्य सर्वधर्मेषु निष्प्रपञ्च नमोऽस्तु ते॥**

दानमा भोगको ग्राह छैन, शीलमा पतनको दोष छैन, क्षान्तिमा क्रोध (प्रतिघ) को धमिलोपन छैन, वीर्यमा आलस्यको स्थान छैन, ध्यानमा चञ्चलताद्वारा विक्षेप छैन र प्रज्ञामा सर्वधर्महरूको प्रपञ्च छैन॥(त्यस्ता तपाईलाई वन्दना !)

(महायान सूत्रालंकारको यत्ति हो। अब पण्डितको आफ्नो तर्फबाट स्तुति हुन्छ)

---

१३० महायानको यो त्रि-काय व्यवस्था नबुझेका थेरवादीहरू र अन्य विद्वानहरूले पनि बुद्धलाई पछि महायानीहरूले देवता, ईश्वर बनाउन पुगे भन्ने गर्छन्। परन्तु यस्तो त्रिकाय त कुनै लौकिक देवताको पनि हुँदैन र त्यो त केवल बुद्ध र उच्च भूमिस्थ बोधिसत्वहरूको मात्र हुन्छ। मनुष्य-निर्माणकायको रूपमा देखापर्दाखेरि 'मनुष्यै' भनिन्छ तापनि त्यो त तथागत या बुद्ध या बोधिसत्वहरूको समष्टिको एक पक्ष मात्र हो।

दुई अर्थ सिद्ध गरेको बारे-

**"प्राप्त गर्नुपर्ने सबै ज्ञान लाभ गरिसकेकाले आफ्नो र अरूको कर्मसिद्ध गरेका छौ। बोध गर्नुपर्ने सर्वधर्महरूमा सर्वदर्शी भएका तिमीलाई प्रणाम ॥"**

प्राप्त गर्नुपर्ने साधारण र असाधारण सबै गुण लाभ गरिसकेकोले आफ्नो र अरूको सर्वार्थ सिद्ध गरी जान्नुपर्ने सबै धर्महरूलाई देखिरहेका (जानिरहेका) तपाईंलाई नमस्कार ॥

बोधिपक्षको बारे

**"स्मृतिवीर्य र समाधि, उत्तम भएका इन्द्रिय र बल**
**बोध्यङ्ग आर्यमार्ग सुसिद्ध तिमीलाई नमस्कार ॥"**

काय आदि आकाश समान ज्ञान भएका चार अनुस्मृति हुन् । दोषको थुप्रोलाई प्रहाण गरी, अनुत्पन्न दोषलाई उत्पन्न हुन नदिई अनुत्पन्न गुणको राशिलाई उत्पन्न गराउने, उत्पन्न भएको गुणलाई विकास गराउने काममा वीर्य हुनु चार सम्यक् प्रहाण हुन् । विशाल छन्द, वीर्य, चित्त र मीमांसा समाधि गर्दा चार ऋद्धिपाद हुन्छन्, श्रद्धा आदि पाँच इन्द्रिय, परिपूर्ण पाँच बल, धर्मप्रविचय आदि सात बोध्यङ्ग, सम्यक् दृष्टि आदि आर्य अष्टाङ्गिक मार्ग गरी जम्मा ३७ ओटा वोधिपाक्षिक धर्म हुन्छन् । यिनीहरूलाई सिद्ध गर्ने काम श्रावक र प्रत्येकवुद्धले पनि गर्छन् तापनि सुसिद्ध त सम्यकसम्वुद्धले मात्र गर्दछन् ।(त्यस्तालाई वन्दना गर्छु)

समापत्तिको विषयमा-

**"त्रिधातुमा पर्ने विकल्पलाई प्रहाण गरिसकेका, नौ समापत्तिद्वारा चित्तको कठोरपनलाई भग्न पार्ने, इन्द्रियद्वारा पार भएका तिमीलाई नमस्कार छ ॥"**

"यहाँ नौ समापत्ति भनेका त्रिधातुभित्र पर्ने स्थूल र सूक्ष्म विकल्पलाई प्रहाण गर्ने अवस्था हुन् । **कामधातुका विकल्पलाई प्रहाण गर्न प्रथम ध्यान, द्वितीय ध्यान, तृतीय ध्यान हुँदै चतुर्थ ध्यानको समाधिमा पस्छन्।** **रूपधातुका विकल्पलाई प्रहाण गर्नका लागि आकाशानन्त्यायतन, विज्ञानानन्त्यायतन, आकिञ्चन्यायतन र नैवसंज्ञानासंज्ञायतन** यी चारओटामा र सम्पूर्ण विकल्प प्रहाण गर्नको लागि **निरोध समापत्तिमा पस्छन्**। यसरी जम्मा नौ समापत्ति छन्। यिनीहरूमा क्रमैले समापत्ति गरेमा त्यसलाई **सिंहविक्रीडित समाधि** भनिन्छ भने यिनीहरूको क्रम विगारेर समापत्ति गरेमा **व्युत्क्रान्तक समाधि** भनिन्छ। त्यही कुरा श्रावकयानअनुसार अभिधर्मकोषमा यसरी वताइएको छ -

**"गत्वागम्य द्विधा भूमिरष्टाकृष्टैकलङ्घिताः ॥**
**व्युत्क्रान्तकसमापत्तिर्विसभागतृतीयगा ॥"**

महायानअनुसार अभिसमयालंकारमा यस्तो भनिएको छ-

**"कामाप्तमवधीकृत्य विज्ञानमसमाहितम् ।**
**सनिरोधाः समापत्तिर्गत्त्वागम्य नव द्विधा ॥**
**एकद्वित्रिचतुःपञ्चष्ट्सप्ताष्टव्यतिक्रमात् ।**
**अवस्कन्दसमापत्तिरनिरोधमतुल्यता ॥**

यी दुई भिन्नताहरू श्रावक र महायानअनुसार भएकोले कुनै विरोध हुँदैन। त्यसमध्ये श्रावकले चित्तलाई कार्ययोग्य बनाउन र प्रतिभासबाट भएको शोकलाई रोक्नको लागि निरोधमा समापत्ति गर्दछन् भने बोधिसत्त्वले समाधिमा वशिता गर्नको लागि समापत्ति गर्दछन्। बुद्धको त समाधिमा वशिता भइसकेकोले अनाभोग (प्रयत्नविना नै स्वतः भइरहने) हुन्छ। त्यसमा पनि श्रावकहरूको प्रयत्नलाई हेर्ने हो भने बोधिसत्वको त थोरै प्रयत्नबाट समापत्ति हुन्छ। बुद्धको भने प्रयत्नविना अनाभोग रूपमै हुने भएकोले उहाँहरूमा चित्तको कठोरपन (दौःष्ठुल्य) लाई विनाश गर्नमा अधिकार प्राप्त भइसकेको हुन्छ। त्यस्ता तपाईंलाई वन्दना छ।

तीन विमोक्षमुखको बारेमा-

**"दुई ग्राह अति शून्य भई उपादानमा आशा नभएका, सबै निमित्त अति शान्त हुनाले उत्तम विमोक्षमुख लाभ गरेका तिमीलाई नमस्कार।"**

तीन विमोक्षमुख भनेका ग्राह्य र ग्राहक नहुनाले शून्यता विमोक्षमुख, उपदानस्कन्धमा रागमुक्त हुनाले अप्रणिहित (आशा नभएको) विमोक्षमुख र आलम्बनका सबै निमित्तहरू शान्त भएकाले अनिमित्त विमोक्षमुख हुन्। श्रावक र प्रत्येकबुद्धमा पनि यी हुन्छन् ता पनि वासना (ज्ञेय- आवरण) त्याग्न सकेका हुँदैनन् भने उहाँले त्यो सबै त्याग गरेकोले उहाँ अतीश हुनुहुन्छ। (त्यस्ता तपाईंलाई वन्दना !)

चार मारलाई भञ्जन गरेको बारे-

**"ज्ञान र करुणाद्वारा अनेक कल्पसम्म चित्त शोधन गर्नाले बाधा गर्ने मारसेनाहरूलाई सुविनय गर्ने तिमीलाई नमस्कार ॥"**

ज्ञान सुसम्पन्नताको जरो नै प्रज्ञा हो। क्लेशको हेतु स्वरूप आत्मग्राहलाई त्यो प्रज्ञाद्वारा निःस्वभावबोध गर्नाले त्यसको फलस्वरूप क्लेशबाट स्वतः नै मुक्त भएकोले क्लेशमारलाई विनाश गर्नु भएको हो। त्यसैको कारणले उपादानस्कन्ध असिद्ध हुनाले स्कन्धमारको विनाश भएको हो। स्कन्ध असिद्ध भए पछि अर्को (भवमा) प्रतिसन्धि नहुने भएकोले मृत्युमारको पनि विनाश भएको हो। करुणाको बीज मैत्रीबलद्धारा सबै सत्वलाई एकमात्र छोरालाई हेर्ने समान हेरेकोले सबै अपवादहरू उपशान्त भएर देवपुत्रमारको पनि विनाश (भञ्जन) भएको हो।

यसमा श्रावकहरूले बोधगया (वज्रासनमा) क्लेशमार र देवपुत्रमारलाई विनाश गर्नुभयो, वैशालीमा मृत्युमारलाई विनाश गर्नुभयो र कुशीगरमा स्कन्धमारलाई विनाश गर्नुभयो भन्दछन्। महायानका अनुसार "पहिले तिमीले देवपुत्र मारको पुष्पध्वजलाई विनाश गऱ्यौ, अनि क्लेशमारको अभिमानरूपी अग्लो चट्टानलाई नाश गऱ्यौ। तिमीले बोधिलाभ गर्नुभन्दा पहिले नै कामधात्वीश्वरबाट विजयी भएर बोधि-आनन्तर्य मार्ग (वज्रोपमसमाधि) मा त्रिधात्वीश्वरबाटै विजयी भयौ" भने बमोजिम बुद्ध हुनुभन्दा पहिले नै विजय गरिसकेको मानिन्छ।

दश अधिकारको बारेमा-

**"बाह्य, भित्री र दुवै छन्द, ज्ञान र उपदेश दिनमा दश अधिकारद्वारा लोकको सबै कार्य सिद्ध गर्ने तिमीलाई नमस्कार ॥"**

आयु अधिकार:- चिताएअनुसारको अवधिसम्म बाँच्न सक्ने हुन्छ। किनकि उपभोग्य वस्तुको दान दिनाले सत्वहरूको आयुको हेतु हुन जान्छ।

चित्ताधिकार:- चाहेअनुसार चित्तको वीथि कार्ययोग्य हुन्छ (अर्थात् चित्तले चाहे अनुसार कार्य सबै पूरा हुन्छ)। किनकि दानले अरूको इच्छा पूरा गरि दिएकोले त्यस्तो हुन्छ।

सामग्रीमा अधिकार:- चिताएअनुसारका सामग्रीहरू लाभ गर्नु। यसको कारण अरूले चिताएका सामग्रीहरू दान गरी पूरा गरिदिएकोले हो। यी तीन दानका फल हुन्।

कर्म अधिकार:- तीनद्वार (काय, वाक्, चित्त)ले गर्ने कार्य सोचेअनुसार सिद्ध हुन्छ। त्यसको कारण चाहिँ शीलद्वारा अरूको काय, वाक्, चित्तलाई अवद्य (पाप) रहित कार्यमा सोचे अनुसार लगाएकोले हो।

जन्मअधिकार:- चिताएअनुसारको सत्व र शरीर आदि सिद्ध गर्नु हो। त्यसको कारण शीलयुक्त भएर प्रणिधान सिद्ध गरेको हेतु प्रत्यय हुनाले हो। यी दुई शीलका फल हुन्।

अधिमुक्ति अधिकार:- माटो पनि सुनमा परिवर्तन गर्न सक्ने आदि हुन्छ। त्यसको कारण क्षान्तिद्वारा सत्वहरूको विश्वासको अनुसरण गरेकोले हो।

प्रणिधान अधिकारः- जसरी प्रणिधान गरेको हो त्यो अर्थ सिद्ध हुनु। त्यसको कारण वीर्यद्वारा सत्वको हित सिद्ध गरेको फल हो।

ऋद्धि अधिकारः- ध्यानमा सही रूपमा लागेकोले त्यो हुन्छ।

ज्ञानाधिकारः- प्रज्ञाद्वारा सत्वको इच्छाअनुसार त्यसमा लगाएको फल हो।

धर्माधिकारः- सूत्र आदि इच्छाअनुसार वताउन सक्नु हो। प्रज्ञापारमिताद्वारा सबै धर्म व्याख्या गर्नाले त्यसो भएको हो। यी दुई प्रज्ञाका फल हुन्।

सामग्री र जन्म बाहिरी अधिकार हुन्। चित्त अधिकार भित्री हो। आयु, कर्म, अधिमुक्ति र ऋद्धि चाहिँ वाहिरी र भित्री दुवै हुन्। छन्द, ज्ञान र उपदेश क्रमैसँग अधिमुक्ति, ज्ञान र धर्म अधिकार हुन्। संक्षेपमा भन्दा,

"आयु, चित्त, सामग्री, कर्म जन्म र अधिमुक्ति
प्रणिधान, ऋद्धि, ज्ञान र धर्म यी मुनिका दश अधिकार हुन्।" (त्यस्ता अधिकारप्राप्त तपाईंलाई वन्दना !)

समाधिको बारेमा-

**"उत्तम अनाभोग सिद्ध भएका सर्वज्ञेयमा अप्रतिहत सिद्धि र प्रहाणको समाधिमा अधिकार पाएका तिमीलाई नमस्कार ॥"**

अरूको भन्दा उत्तम भई प्रयत्न गर्नै नपरेर अप्रतिहत कर्म-समाधि जस्तैः- शूरङ्गमसमाधि, रत्नमुद्रासमाधि, सिँहविक्रीडितसमाधि आदि चिताएको सिद्ध गर्ने समाधि र वज्रोपमसमाधि, सर्वक्लेशप्रहाणसमाधि आदि प्रहेयलाई प्रहाण

गर्ने समाधि लाभ भएका हुनछन्। यी कुरालाई जिनमाता (प्रज्ञापारमितामा) मा बताइए अनुसार बुझ्नु पर्छ।

धारणीद्वारको बारेमा-

> **"'धारण' र 'देशना' धर्मको द्वारबाट थोरैले पनि धर्महरूलाई सजिलैसँग दर्शाउने, धर्मनिधि मुखभेद गर्ने तिमीलाई नमस्कार ॥"**

त्यसमा पनि अचिन्त्य वर्णहरूलाई ४२ ओटामा संग्रह गरिन्छ। ४२ वर्ण पनि एक वर्णमा समाहित गर्न कुशल भएकोले अरूले भनेको मनले समातेर आफूले बताएको अप्रतिहत (निर्बाध) गर्नुहुन्छ भनेर प्रज्ञापारमिता सूत्रमा "एकै अक्षरद्वारा अध्ययन गरिएको स्वभावमा विद्वान् हुने" आदि भने जस्तै हो।

प्रहाणसुसम्पन्नताको बारेमा-

> **"रोक्न कठिन रागादि मल र त्रिकोटि विकल्पका मूललाई वासनासहित सदाका लागि त्यागेका सर्वावरणमुक्त तपाईंलाई नमस्कार ॥"**

राग र द्वेष आदि आस्रवले संग्रह गरिएको क्लेश आवरण हो र आत्मा, स्थान, भोग (ज्ञाता, ज्ञान, ज्ञेय) आदि तीन मण्डलले संग्रह गरिएको ज्ञेय आवरण हो। तिनीहरूको वासनासहित प्रहाण गरेकोले सबै आवरणबाट मुक्त हुनुभएको छ।

ज्ञानसुसम्पन्नताको बारेमा-

**"स्पष्ट विमल गुणनिधि कर्म आश्रय अश्रितले आफ्नो र अरूको ज्ञानमा सम्यक् सम्बुद्ध तिमीलाई नमस्कार ॥"**

आर्दशज्ञानमा ऐनमा रुप देखेजस्तै सर्वज्ञेयको मण्डल स्पष्ट हुन्छ। समताज्ञानमा "म" र "मेरो" भन्ने भावनारूपी मललाई हटाइन्छ (विमल)। प्रत्यवेक्षणाज्ञान वल, वैशारद्य आदि सबै गुणको कोष हो। कृत्यानुष्ठानज्ञानले आफ्नो र अरू सबैको कर्म निराभोग सिद्ध गर्दछ। यसमध्ये आदर्शज्ञान आधार (आश्रय) हो भने त्यसपछिका तीन ज्ञानहरू त्यसमा आश्रित हुन्। फेरि पहिलेका तीनओटा ज्ञान मूलतः आफ्ना निमित्त हुन् भने पछिका दुईचाहिँ मूलतः अरूका निमित्त हुन्।

वाक्को गुणको बारेमा-

**"निर्भय वागीश्वर सिंहनाव साष्टङ्ग भएर देवसहित सर्वलोकलाई सिंहनाद गर्ने तिमीलाई नमस्कार ॥"**

कानले सुन्दा मृदु लाग्ने, टाढासम्म सुन्न सकिने आदि ६० किसिमका स्वराङ्ग हुन्छन्। यिनीहरू "अचिन्त्य गुह्यक" मा बताइए अनुसार बुझ्नु पर्छ।

स्थान परिवर्तनको बारेमा -

**"तिमीले जो मार्ग सत्यद्वारा आस्रव लोकको सन्तान परिवर्तन गर्‍यौ, सर्वगति प्रवेशज्ञानमा ज्ञान भएका तिमीलाई नमस्कार ॥"**

आस्रव, स्कन्ध, धातु, आयतनको स्थान परिवर्तन हुनाले अनास्रव ज्ञानको कायलाई सिद्ध गरेका हुन्। गति (प्राणी) को कर्म र क्लेश जति सवै 'स्थान परिवर्तन ज्ञान' हुन जान्छ। त्यो अचिन्त्य हुन पुगेको वारेमा सूत्रालंकार र महायानगाथामा बताए अनुसार वुझ्नु पर्छ।

प्रयोगको विशेषताका वारेमा-

**"लोक, शैक्ष, खड्ग, पुत्र भन्दा उत्तम हुन्छ शास्ताको प्रयोग। जसमा त्यस्तो लाभ भएको छ, त्यस्ता सुप्रयोगी तिमीलाई नमस्कार॥"**

इन्द्र र व्रह्मा आदिका लौकिक प्रयोग सवै एउटै अर्हत्को प्रयोगले अभिभव गर्छ (कब्जमा लिन्छ), त्यसको खड्गले अभिभव गर्छन् र त्यसलाई पनि पुत्रले अभिभव गर्छन्, त्यसलाई पनि शास्ता वुद्धले अभिभव गर्छन्।

सूत्रालंकारमा "लोकको समृद्धिलाई श्रावकले अभिभव गर्दछन्। श्रावकको समृद्धि पनि प्रत्येकवुद्धले अभिभव गर्दछन्। त्यसले फेरि वोधिसत्वको थोरै समृद्धिसँग पनि तुलना हुँदैन। त्यसले सम्वुद्धको समृद्धिको छेउको पनि तुलना हुँदैन" भनेअनुसार जान्नु पर्छ।

आर्य उपगुप्त ध्यान समाधिमा वस्दा पापी मारले जिस्काउनको लागि फूलको पगडी वाँधिदिँदा खेरि आर्यले पापी मारको घाँटीमा, फुलेको, कीरा झरिरहेको एउटा कुकुरको लास वाँधिदिएको जस्तो हो। एक पटक अमित लोक धातुमा चराहरूलाई अग्निको भय हुन थाले पछि मञ्जुश्रीले भन्नुभयो "सारिपुत्र, तिम्रो ऋद्धिद्वारा जाने कि मेरो ऋद्धिद्वारा जाने ?" सारिपुत्रले आफ्नो ऋद्धिवाट जाँदा लामो समय लाग्ने हुनाले मञ्जुश्रीको ऋद्धि पनि हेर्नुपर्‍यो

भनेर "तिम्रो ऋद्धिद्वारा जाने" भन्नुभयो। त्यसो भए एकछिन आँखा 'चिम्ल' भन्नुभयो। तव सारिपुत्रले के आँखा चिम्लिनु भएको थियो तत्कालै 'लौ खोल' भनेर फेरि मञ्जुश्रीले भनेपछि आँखा खोल्दा त्यहाँ पुगिसकिएको रहेछ। सारिपुत्रले भने "तिम्रो ऋद्धि अचिन्त्य रहेछ।" मञ्जुश्रीले भन्नुभयो "ठीक हो, किनकि मेरो जीवनकहानि हीन अधिमुक्ति भएका तिमी श्रावकहरूको गोचर विषय होइन।"

अग्रशरण्य भएको बारे-

> **"साधारण र उत्तम धर्म महावीचि अत्युत्तम प्राप्त गरेकोले सर्वलोकका शरण्य हुन गएकालाई नमस्कार ॥"**

त्यसमध्ये अप्रमाण, विमोक्ष, अभिभ्वायतन, कात्स्न्र्य (कसिण) र पाँच अभिज्ञाहरू लोकसँग मिल्दा र साधारण हुन्। निरास्रव अभिज्ञा, निष्क्लेष, प्रणिधान ज्ञान, प्रतिसंवित्, नौ समापत्ति, बोधिपक्ष, तीन विमोक्षमुख शैक्षसँग सामान्य हुन्छन्। अरू ऋद्धि, समाधि, कुनै स्थानपरिवर्तनआदि सातौं अशुद्ध भूमिसँग सामान्य हुन्छन्। क्लेशावरण-चित्त-स्थान-परिवर्तन र कुनै लक्षण एवं अनुव्यञ्जन आदि आठौंभूमिसँग सामान्य हुन्छन्। धारणीद्वार प्रतिसंविद् आदि नवौं भूमिसँग सामान्य हुन्। समाधि र कुनै वशिता आदि दशौं भूमिसँग सामान्य हुन्छन्। श्रावकहरूले बोधिसत्वको दशभूमिलाई नमान्दा 'पुत्रसँग सामान्य' नाम राखिएको हो। बुद्धका १८ आवेणिक गुण, चार वैशारद्य, तीन आरक्ष आदि केवल

बुद्धका मात्र विशेष धर्म हुन्।[१४१] यस्ता गुण प्राप्त गरेकोले उनी देवसहित सर्वलोकका शरण्य हुन गएका हुन्[१४२]। त्यसरी स्तुति अधिकार पूर्ण गरी सिद्ध गरेको पुण्यको परिणामना -

**"यसरी साक्षात् शास्ताको शासनरत्न प्रकाशित गर्नाले सबै गतिले ज्ञेयको र तथताको सुदर्शन पाऊन्॥"**

त्यस्तो गुणवस्तुले युक्त भएका शास्ता भगवान् बुद्ध मात्र हुन्। उनको शासन सबैका आवश्यक इच्छाहरू पूरा गर्ने रत्नको निधि जस्तो हो। त्यसको राम्रोसँग भेद खुलाएर प्रकाश पारेको यो पुण्यले सबै गतिले यथावत् र यावत् सर्वज्ञेयको स्पष्ट दर्शन गर्न सकून भनी स्तुति परिणामना गरेको छु।

मैले मुनिको मतलाई यथार्थ रूपमा 'गम्भीर' र 'वैपुल्य' सूत्रार्थहरू हेरी जिनपुत्र मैत्रेयका प्रवचन अनुसार लोकहितको चित्तले प्रकाश पारेँ। वैपुल्यचर्यामा "वैपुल्य सूत्र" र तथता दृष्टिमा "प्रज्ञापारमिता"लाई अविरोध हुने गरी प्रकाश पारी दर्शाएको यो दर्शनलाई युक्तिसिद्ध गुरुवचन

---

१४१ थेरवाद व्याख्या प्रणालीमा बुद्धका गुणहरू दशपारमी पूरा गरेमा भइहाल्छ भनिन्छ परन्तु मार्गको सुरुदेखि नै चित्तका विभिन्न मलहरू हट्दै गएपछि विभिन्न गुणहरू व्यक्त हुँदै गएको देखिन्छ। त्यसकारण अर्हत्मा नभएका यी विशेष बुद्ध गुणहरू के मल हटेर बुद्धमा उत्पन्न भएका हुन्छन् भन्ने प्रश्न अझै पनि कायमै रहन्छ र यसमा थेरवाद व्याख्या प्रणाली मौन छ भने महायान अनुसार ज्ञेय आवरण हट्दै गएपछि यी बुद्ध गुणहरू विकसित हुँदै जान्छन् भन्ने मानिन्छ।

१४२ यसैबाट थाहा हुन्छ कि महायानले बुद्धलाई देवता किमार्थ मानेको छैन।

अनुसार बताएको हुँ। आजभोलि शाक्यमुनिको शासन दाउरा सकिएको अग्नि जस्तै दुर्बल हुँदै गएकोले बुद्धत्व चाहने बुद्धिमान् जनहरूले राम्रोसँग चिन्तन गरी मुनिको वचनअनुसार ग्रहण गर्नू। धर्मको तथता अतिपरोक्ष[१८३] हुनाले पृथग्जनको चर्या भ्रान्त हुन सक्छ। यहाँ बताइएका सुभाष चाहिँ सद्गुरुको कृपाले गर्दा भएको हो। देखिएका दोषहरू जति छन् ती सबै मेरा बुद्धिका दोष मात्र हुन्। लोकदीप (बुद्ध) अस्ताएपछि धेरैजसो विद्वान्जनहरू बितिसकेकाले दुर्बुद्ध, अध्ययन नभएका, फटाहावादीहरूले आजभोलि यो सुगतको शासनलाई मथित पारेका छन्। यो धर्मलाई विपरीत रूपमा बताउनाले पापको भारी धेरै बोक्दैछन्। राम्रोसँग बताउँदा खेरि धेरै जसो जनहरू रिसाउँछन्। कषायको समयमा धर्म सुनाउनु कठिन भए तापनि लोकको हितका निमित्त यो रचेको हुँ।

यो कुशल र अरू कुशल मूल सबै चित्तले एकीकृत गरी आकाशानन्तसत्वहरूको अर्थ सिद्धिको लागि सर्वज्ञराजको पद प्राप्त हुन सकोस् भनी परिणामना गर्दछु।

त्रिपिटकधारी श्रीमद्भूमिपाण्डर पण्डित आनन्दध्वज श्री भद्रद्वारा विरचित बोधिसत्वको मार्ग प्रवेशक्रम "मुनिमतप्रकाश" भन्ने पुस्तक समाप्त भयो।

---

[१८३] एक पृथकजनले तथतालाई त्यति सजिलरी बुझ्न सक्दैनन् जति उनीहरुले बुझें भन्ने ठानेका हुन्छन्। तथता, यथाभूत, भूतकोटि, धर्मता, शून्यता आदि पर्यायवाची शब्द हुन्। एकोत्तरागममा "अत्र च ते महकीमातर्दृष्टे दृष्टमात्रं भविष्यति, श्रुते मते विज्ञाते विज्ञातमात्रं" अर्थात् "हे महकीमाता, देख्दा देखेको मात्र हुनेछ, सुन्दा मान्दा, जान्दा जानेको मात्र हुन्छ" भनिएको छ। यही अवस्था नै तथताको बोध भएको अवस्था हो र जेन बौद्ध धर्ममा पनि 'हिंड्दा हिंडाइमात्र बस्दा बसाइमात्र' भन्नुको तात्पर्य यही हो।

यो गणधर्मज्ञान भोट अन्तर्गत पर्ने 'उई', 'चाङ्' र 'खाम्' तीनओटै प्रान्तमा सबैलाई वताएको हुँदा मेरा सबै शिष्यले आगम प्राप्त गरिसकेकाले यी अक्षरमा हेरेर त्यसै अनुसार नै अभ्यास गर्नू ॥ इति शुभम् ॥

*यो नेपाली अनुवाद खेन्पो भिक्षु वागीन्द्रशील र नारायण प्रसाद रिजाल (बुद्धवज्र) द्वारा वि.सं. २०५६ साल श्रावण औंसीमा समाप्त गरियो । यसबाट सम्पूर्ण नेपाली भाषिकहरुले बुद्धताको मार्ग अवबोध गरुन् ॥*

यो पावन धर्मग्रन्थ भएकोहुनाले यसलाई कुल्चने/नाघ्ने/ विछ्याउने आदि गरेमा भारी अकुशल हुने र शरणगमनको संवर पनि बिग्रिने भएकोले त्यसो नगर्न श्रद्धालु पाठकहरूमा अनुरोध गरिन्छ ।

–व्योमकुसुमा अनुवाद समिति

## खेन्पो भिक्षु वागीन्द्र शीलः–

वि.सं. २०२५ सालमा नेपालको सिन्धुपाल्चोकमा जन्मिनु भएका नन्द प्रसाद तिमिल्सिनाले (भिक्षु वागीन्द्रशील) आफ्नो प्राथमिक शिक्षा त्यहीं ग्रहण गरेपछि भारतको देहरादूनस्थित साक्या महाविहारमा पाँच वर्षसम्म विशिष्ट तान्त्रिक पूजाविधिहरुको अध्ययन गर्ने सौभाग्य प्राप्त गर्नुभयो । पछि वि.सं. २०४१ देखि हिमाञ्चलस्थित साक्या उच्च अध्ययन केन्द्रमा त्यहाँको पाठ्यक्रम अनुसार तिब्बती भाषाको माध्यममै विनयवर्ग, अभिधर्मवर्ग र सूत्रवर्ग अन्तर्गत पारमिता, वैभाषिकदेखि प्रासङ्गिक माध्यमिकसम्मका दर्शन, बौद्ध प्रमाण शास्त्र, त्रिसंवर आदि विषयहरुको ९ वर्षसम्म अध्ययन गरी आचार्य तह (लोब्पोन) उत्तीर्ण गर्नुभयो । त्यसपछि हेवज्र आदि मूल तन्त्रहरुको विस्तृत अध्ययन गरी तीन वर्षसम्म त्यहीं नै बौद्ध प्रमाणशास्त्र र अभिधर्मको अध्यापन गर्नुभएको थियो । उहाँ लुडिङ खेन् रिन्पोछेको उपाध्यायत्वमा उपसम्पदा ग्रहण गरी प्रव्रजित हुनुभएको हो ।

हाल उहाँ नेपालमा बौद्ध धर्मको उत्थानका निमित्त सक्रिय भूमिका निर्वाह गर्दै अध्ययन-अध्यापन, ग्रन्थ-अनुवाद, प्रवचन आदि गर्दै हुनुहुन्छ । तिब्बती भाषाबाट सिधै नेपाली भाषामा आधिकारिक अनुवाद गर्ने पूर्ण योग्यता भएका खेन्पोज्यू व्योमकुसुमा वज्रयान संघका उपाध्याय हुनुहुन्छ ।

## हाम्रो अनुवाद समितिद्वारा निकट भविष्यमै नेपाली भाषामा प्रकाशित हुन लागेका केही पुस्तकहरू

१. मिलारेपाको जीवनी
२. बोधिचर्यावतार (अन्वयार्थसहित अनुवाद एवं व्याख्या)
३. गुरुपञ्चाशिका
४. अभिधर्म प्रकाशिका
५. संक्षिप्त बौद्धधर्म सिद्धान्त